अनिरुद्ध एवं सेनापति कृतवर्मा ती सबैको रक्षा कार्यमा खटिएका थिए ॥ ५-७ ॥ पाँटीमा सुनको माला, दिव्य हार, दिव्य वस्त्र र दिव्य कवचले सुसज्जित भएर महातेजस्वी, समस्त यादवगण आफाफ्ना स्त्रीसहित देव-विमान झैं प्रकाशमान रथ, तरङ्गसमान तीव्र गति हुने घोडा र गम्भीर मेघ झैं गर्जनशील हात्तीहरूमा चढेर गइरहेका विद्याधरहरूको समान कान्तिमान् मनुष्यका साथ देवताहरू झैं राम्रा प्रतीत भइरहेका थिए । ती महाभाग यादवहरूले त्यहाँ स्नान र उपवासादि गरेर एकाग्रचित्तले ब्राह्मणलाई वस्त्र, पुष्पमाला र सुवर्ण-मय हारले विभूषित गाईहरू दान दिए ॥९॥ अनि ती यादवहरूले परशुरामका कुण्डहरूमा विधिवत् स्नान गरेर 'भगवान् कृष्णमा नित्य हाम्रो भक्ति बनिरहोस्' यस इच्छाले ब्राह्मणलाई उत्तम अन्नको भोजन गराए ॥ १० ॥ अनि श्रीकृष्ण नै उनका एकमात्र देवता थिए, ती यादवगण उनको आज्ञा पाएर आफू पनि भोजन गरी शीतल छायामा वृक्षमुनि इच्छानुसार भएर बसे ॥११॥ हे राजन् ! त्यहाँ यादवहरूले तीर्थमा आएका आफ्ना सुहृद्, सम्बन्धी, मत्स्य, उशीनर, कोशल, विदर्भ, कुरु, सृञ्जय, काम्बोज, केकय, मद्र, कुन्ति, आनर्त, केरल

यश्च तथाऽक्रूरवसुदेवाहुकादयः॥५॥ययुर्भारत तत्क्षेत्रं स्वमघं क्षपयिष्णवः ॥ गदप्रद्युम्नसाम्बाद्याः सुचन्द्रशुकसारणैः ॥६॥ आस्तेऽनिरुद्धो रक्षायां कृत-
वर्मा च यूथपः ॥ ते रथैर्देवधिष्ण्याभैर्हयैश्च तरलप्लवैः ॥७॥ गजैर्नदद्भिरभ्राभैर्नृभिर्विद्याधरद्युभिः ॥ व्यरोचन्त महातेजाः पथि काञ्चनमालिनः ॥८॥
दिव्यस्रग्वस्त्रसन्नाहाः कलत्रैः खेचरा इव ॥ तत्र स्नात्वा महाभागा उपोष्य सुसमाहिताः ॥९॥ ब्राह्मणेभ्यो ददुर्धेनूर्वासःस्रग्रुक्ममालिनीः ॥ रामह्रदेषु
विधिवत्पुनराप्लुत्य वृष्णयः ॥१०॥ ददुः स्वन्नं द्विजाग्र्येभ्यः कृष्णे नो भक्तिरस्त्विति ॥ स्वयं च तदनुज्ञाता वृष्णयः कृष्णदेवताः ॥११॥ भुक्त्वोप-
विविशुः कामं स्निग्धच्छायाङ्घ्रिपाङ्घ्रिषु ॥ तत्रागतांस्ते ददृशुः सुहृत्सम्बन्धिनो नृपान् ॥१२॥ मत्स्योशीनरकौसल्यविदर्भकुरुसृञ्जयान् ॥ काम्बोजकैकया-
न्मद्रान्कुन्तीनानर्तकेरलान् ॥१३॥ अन्यांश्चैवात्मपक्षीयान्परांश्च शतशो नृप ॥ नन्दादीन्सुहृदो गोपान्गोपीश्चोत्कण्ठिताश्चिरम् ॥१४॥ अन्योन्यसन्द-
र्शनहर्षरंहसा प्रोत्फुल्लहृद्वक्त्रसरोरुहश्रियः ॥ आश्लिष्य गाढं नयनैः स्रवज्जला हृष्यत्त्वचो रुद्धगिरो ययुर्मुदम् ॥१५॥ स्त्रियश्च संवीक्ष्य मिथोऽतिसौहृद-
स्मितामलापाङ्गदृशोऽभिरेभिरे ॥ स्तनैः स्तनान्कुङ्कुमपङ्करूषितान्निहत्य दोर्भिः प्रणयाश्रुलोचनाः ॥१६॥ ततोऽभिवाद्य ते वृद्धान्यविष्ठैरभिवादिताः ॥
स्वागतं कुशलं पृष्ट्वा चक्रुः कृष्णकथा मिथः ॥ १७ ॥ पृथा भ्रातॄन्स्वसॄर्वीक्ष्य तत्पुत्रान्पितरावपि ॥ भ्रातृपत्नीर्मुकुन्दं च जहौ सङ्कथया शुचः ॥१८॥

आदि अनेक देश र आफ्ना-विराना पक्षका अरु पनि अनेक व्यक्तिलाई देखे । ती बाहेक परम स्नेही नन्दादि गोपहरू चिरकालदेखि प्रभुका दर्शनको निम्ति उत्कण्ठित गोपाङ्गनालाई पनि उनले देखे ॥१२-१४॥ यौटाले अर्कोलाई देख्नाले उत्पन्न आनन्दको आवेशवश तिनको हृदय र मुखको कान्ति फक्रियो, आँखाबाट प्रेमाश्रु बगाउँदै उनले परस्पर गाढ-आलिङ्गन गरे ॥१५॥ त्यसले तिनको देहमा रोमाञ्च भएर आयो, वाणी गद्गद् भयो र ती आनन्दमा गाडिए । त्यसै गरी स्नेह र हास्यले गर्दा जसको दृष्टि अत्यन्त निर्मल भएको थियो, ती नारीगण यौटा-अर्कालाई देखेर आँखामा प्रेमाश्रु भरेर कुङ्कुम मण्डित कुचलाई आफ्ना कुचले थिच्दै परस्पर पाँटामा टाँसिएर अंकमाल गरे ॥ १६ ॥ ती सबैले सानाबाट अभिवादित भएर बूढा-पाकालाई प्रणाम गरे । यौटाले अर्कोसँग स्वागत र कुशल प्रश्न गरेर ती आपसमा भगवान् कृष्ण-सम्बन्धी कुरा गर्न लागे ॥ १७ ॥ तब कुन्तीले आफ्ना भाई,

वहिनी, तिनका छोरा, आफ्ना माता-पिता, भाञ्जी र भगवान् कृष्णचन्द्रलाई देखेर उनको प्रेम वार्ताले आफ्ना सबै कष्ट बिर्सिइन् ॥ १८ ॥ अनि कुन्तीले वसुदेवसित भनिन्—दाजू ! म आफूलाई अभागिनी ठान्दछु किनकि विपत्तिको मौकामा हजुर जस्ता सम्बन्धीले पनि मेरो केही पनि सम्झना गर्दैनन् ॥ १९ ॥ विधाता विपरीत भएपछि आफ्ना बन्धु, पुत्र, दाजू-भाई र आमा-बाबु पनि आफ्ना स्वजनको स्मरण गर्दैनन् ॥ २० ॥ वसुदेव भन्दछन्—हे बहिनी ! हामी सबै विधाताका खेलाउने हौं । तिमी मलाई केही दोष नदेऊ । भगवान्‌को इच्छाले नै सबै जना विविध कर्मको भोग गर्दछन् ॥ २१ ॥ हामी सबै त स्वयं कंसद्वारा दुःखी भएर दशौं दिशाहरूमा डरले भागेका थियौं । अहिले केही दिन मात्र भयो, विधाताले फेरि हामीलाई आफ्नू स्थानमा पुऱ्यायो ॥ २२ ॥ शुकदेवजी भन्दछन्—हे राजन् ! त्यहाँ आएका सबै राजाहरूको वसुदेव र राजा उग्रसेन आदि यादवले सत्कार गरे र ती श्रीकृष्णको दर्शन गरेर परमानन्दमा निमग्न भए ॥ २३ ॥ हे राजन् ! भीष्म, द्रोण, धृतराष्ट्र, पुत्र सहित गान्धारी, पत्नीसमेत पाण्डव, विदुर, कृप, कुन्ति भोज, कर्ण,

कुन्त्युवाच ॥ आर्य भ्रातरहं मन्ये आत्मानमकृताशिषम् ॥ यद्वा आपत्सु मद्वार्तां नानुस्मरथ सत्तमाः ॥ १९ ॥ सुहृदो ज्ञातयः पुत्रा भ्रातरः पितरावपि ॥ नानुस्मरन्ति स्वजनं यस्य दैवमदक्षिणम् ॥२०॥ वसुदेव उवाच ॥ अम्ब माऽस्मानसूयेथा दैवक्रीडनकान्नरान् ॥ ईशस्य हि वशे लोकः कुरुते कार्यतेऽथवा ॥२१॥ कंसप्रतापिताः सर्वे वयं याता दिशं दिशम् ॥ एतर्ह्येव पुनः स्थानं दैवेनासादिताः स्वसः ॥२२॥ श्रीशुक उवाच ॥ वसुदेवोग्रसेनाद्यैर्यदुभिस्तेऽर्चिता नृपाः ॥ आसन्नच्युतसन्दर्शपरमानन्दनिर्वृताः ॥ २३ ॥ भीष्मो द्रोणोऽम्बिकापुत्रो गान्धारी ससुता तथा ॥ सदाराः पाण्डवाः कुन्ती सृञ्जयो विदुरः कृपः ॥ २४ ॥ कुन्तिभोजो विराटश्च भीष्मको नग्नजिन्महान् ॥ पुरुजिद् द्रुपदः शल्यो धृष्टकेतुः सकाशिराट् ॥ २५ ॥ दमघोषो विशालाक्षो मैथिलो मद्रकेकयौ ॥ युधामन्युः सुशर्मा च ससुता बाह्लिकादयः ॥ २६ ॥ राजानो ये च राजेन्द्र युधिष्ठिरमनुव्रताः ॥ श्रीनिकेतं वपुः शौरेः सस्त्रीकं वीक्ष्य विस्मिताः ॥२७॥ अथ ते रामकृष्णाभ्यां सम्यक्प्राप्तसमर्हणाः ॥ प्रशशंसुर्मुदा युक्ता वृष्णीन्कृष्णपरिग्रहान् ॥ २८ ॥ अहो भोजपते यूयं जन्मभाजो नृणामिह ॥ यत्पश्यथासकृत्कृष्णं दुर्दर्शमपि योगिनाम् ॥२९॥ यद्विश्रुतिः श्रुतिनुतेदमलं पुनाति पादावनेजनपयश्च वचश्च शास्त्रम् ॥ भूः कालभर्जितभगाऽपि यदङ्घ्रिपद्मस्पर्शोत्थशक्तिरभिवर्षति नोऽखिलार्थान् ॥ ३० ॥ तद्दर्शनस्पर्शनानुपथ-

विराट् , भीष्मक, महाराज नग्नजित्, द्रुपद, शल्य, धृष्टकेतु, काशिराज, दमघोष, विशालाक्ष, मैथिल, मद्र, केकय, युधामन्यु, सुशर्मा र छोरासमेत राजा बाह्लिक जो युधिष्ठिरका अनुयायी प्रतापी राजाहरू सबै त्यहाँ आएका थिए, ती सबै भगवान् कृष्णचन्द्रलाई देखेर छक्क परे ॥ २४-२७ ॥ बलरामजी तथा श्रीकृष्णसित राम्ररी सम्मानित भएर ती राजाहरू कृष्णका मित्र यादवहरूको प्रशंसा गर्दै भन्न लागे ॥ २८ ॥ ती भन्दछन्—'हे भोजपति उग्रसेनजी ! संसारका सबै मनुष्यहरूमा अहिले हजुरहरूका नै जीवन सार्थक छ, किनकि योगीजनलाई पनि जसको दर्शन दुर्लभ छ, ती भगवान् कृष्णलाई हजुर सदैव आफ्नू नजीक देख्नुहुन्छ ॥ २९ ॥ वेदमा जसका कीर्ति वर्णित छन्, जसको चरणोदक गङ्गाजल छ र जसका शास्त्ररूपी वचन संसारलाई पवित्र पारिदिन्छ । कालक्रमले यो भाग्यहीन भूमि पनि जसका चरण-स्पर्श पाएर शक्ति सम्पन्न भई हामीहरूको निम्ति सबै थरिका अन्न उत्पन्न गर्दछिन्

1202

॥ ३० ॥ ती कृष्णको दर्शन, स्पर्श, सहगमन, सुत्नु बस्नु र खान-पान आदि क्रियाले युक्त जसको विवाह र सबै दैहिक सम्बन्ध हुने गर्दछन् । संसाररूपी बन्धनका कारण स्वरूप घरमा बसेर पनि जसकहाँ स्वर्ग र अपवर्गलाई पनि पर सारिदिने साक्षात् विष्णु भगवान् विराजमान छन्, त्यस्ता हजुरहरूको नै जीवन सार्थक कहिन्छन्' ॥ ३१ ॥ श्रीशुकदेवजी भन्नलागे—कृष्ण आदि यादव त्यहाँ आए भन्ने जानेर नन्दजी उनलाई हेर्ने इच्छाले आफ्ना समस्त गोपगणसहित जम्मा भई सबै सामग्री गाडामा राखेर यादवकहाँ आइपुगे ॥ ३२ ॥ उनी आएको देखेर गइसकेको प्राण फर्केर आएर रुचेत भए झैं प्रसन्न भए । निकै दिनदेखि ती उनको दर्शनको निम्ति लालायित थिए । अतएव तिनले तत्काल उनलाई गाढ आलिङ्गन गरे ॥ ३३ ॥ वसुदेवजीले अतिशय प्रीतिपूर्वक नन्दजीलाई अङ्कमाल गरेर कंसद्वारा दिइएका कष्ट तथा पुत्रलाई गोकुल पुऱ्याएको कुराहरू स्मरण गरेर असीम प्रेमवश अत्यन्त व्याकुल भए ॥ ३४ ॥ हे कुरुनन्दन ! राम तथा कृष्ण आफ्ना माता-पिता यशोदा र नन्दजीलाई प्रणाम र अंकमाल गरेर प्रेमवश आँखामा सहसा आंसु भरिनाले र घाँटी

प्रजल्पशय्यासनाशनसयौनसपिण्डबन्धः ॥ येषां गृहे निरयवर्त्मनि वर्ततां वः स्वर्गापवर्गविरमः स्वयमास विष्णुः ॥ ३१ ॥ श्रीशुक उवाच ॥ नन्दस्तत्र यदून्प्राप्तान्ज्ञात्वा कृष्णपुरोगमान् ॥ तत्रागमद्वृतो गोपैरनःस्थार्थैर्दिदृक्षया ॥ ३२ ॥ तं दृष्ट्वा वृष्णयो हृष्टास्तन्वः प्राणमिवोत्थिताः ॥ परिषस्वजिरे गाढं चिरदर्शनकातराः ॥३३॥ वसुदेवः परिष्वज्य सम्प्रीतः प्रेमविह्वलः ॥ स्मरन्कंसकृताक्लेशान्पुत्रन्यासं च गोकुले ॥ ३४ ॥ कृष्णरामौ परिष्वज्य पितरावभिवाद्य च ॥ न किञ्चनोचतुः प्रेम्णा साश्रुकण्ठौ कुरूद्वह ॥ ३५ ॥ तावात्मासनमारोप्य बाहुभ्यां परिरभ्य च ॥ यशोदा च महाभागा सुतौ विजहतुः शुचः ॥३६॥ रोहिणी देवकी चाथ परिष्वज्य व्रजेश्वरीम् ॥ स्मरन्त्यौ तत्कृतां मैत्रीं बाष्पकण्ठ्यौ समूचतुः ॥३७॥ का विस्मरेत वां मैत्रीमनिवृत्तां व्रजेश्वरि ॥ अवाप्याप्यैन्द्रमैश्वर्यं यस्या नेह प्रतिक्रिया ॥ ३८ ॥ एतावदृष्टपितरौ युवयोः स्म पित्रोः सम्प्रीणनाभ्युदपोषणपालनानि ॥ प्राप्योषतुर्भवति पक्ष्म ह यद्वदक्ष्णोर्न्यस्तस्तावत्र कुत्र च भयौ न सतां परःस्वः ॥३९॥ श्रीशुक उवाच ॥ गोप्यश्चकृष्णमुपलभ्य चिरादभीष्टं यत्प्रेक्षणे दृशिषु पक्ष्मकृतंशपन्ति ॥ दृग्भिर्हृदीकृतमलं परिरभ्य सर्वास्तद्भावमापुरपि नित्ययुजां दुरापम्॥४०॥भगवांस्तास्तथाभूता विविक्त उपसङ्गतः ॥ आश्लिष्यानामयं

अवरुद्ध हुनाले केही पनि बोल्न सकेनन् ॥ ३५ ॥ नन्दजी र महाभाग यशोदाले ती दुवै पुत्रलाई आफ्नू काखामा बसालेर आफ्ना दुवै बाहुले उनको गाढ आलिङ्गन गरेर र आफ्नू विरह-व्यथा शान्त पारे ॥ ३६ ॥ महारानी रोहिणी र देवकी व्रजरानी यशोदासित भेटे र उनको पूर्वकृत मित्रताको स्मरण गरेर गद्गद् स्वरले बोलिन– ॥ ३७ ॥ 'हे व्रजेश्वरि ! इन्द्रपद पाएर पनि जसको कुनै प्रकारले ऋण तिर्न सकिन्न त्यस्ती हजुरको कहिल्यै बिछोड नहुने मैत्रीलाई कुन स्त्री बिर्सन सक्छे ? ॥ ३८ ॥ हे देवि ! यी राम र कृष्णले जब आफ्ना माता-पितालाई देखेका पनि थिएनन्, तब परेलाले आँखाको रक्षा गरे झैं यहाँले इनको रक्षा गर्नु भयो । हजुर द्वारा नै यी दुवैको लालन-पालन र अभ्युदय तथा पोषण पाएर सदा निर्भय रहे किनकि सज्जनका दृष्टिमा कोही आफ्नू र विरानो हुँदैन' ॥ श्रीशुकदेवजी भन्दछन्—हे राजन् ! भगवान् कृष्णको मधुर मूर्तिको दर्शन गर्ने वेलामा आँ परेला बनाउने ब्रह्मालाई दोष दिन्थे, ती गोपिनी धेरै दिनदेखि जसको दर्शनको लालसा थियो, तौ प्रियप्राण श्रीकृष्णको मनोहर मूर्ति नेत्र द्वारा हृदयमा लगेर आलिङ्गन गर्न

लागे, मुन नित्यका अभ्यासी योगीलाई पनि दुर्लभ थियो, ती त्यो भगवद्भावलाई प्राप्त भए । ४० ॥ भगवान्‌ले पनि तिनको दशा देखेर एकान्तमा लगेर गाढ आलिङ्गन गरे र उनको कुशल सोधी हाँस्नुभयो– ॥ ४१ ॥ स्वजनको उपकार गर्नको निम्ति नै हामी मथुरा आएका थियौं । शत्रुपक्षको संहारमा लाग्नाले तिकै दिन बितिसक्दा पनि तिमीहरूलाई भेट्न सकिन । के तिमीहरू कहिलेकाहीं हामीलाई पनि सम्झन्थ्यौ ? ॥ ४२ ॥ तिमीहरू मलाई कृतघ्न ठानेर अवश्य निन्दा गर्दा हौ, तर यसमा हाम्रो कुनै पनि दोष छैन, किनकि ईश्वर नै सबै जीवको संयोग र वियोग गराउँछन् ॥ ४३ ॥ जस्तै वायु मेघमाला, पात-पात, रूवा र धूलो एकत्रित पारेर फेरि छरिदिन्छ, त्यस्तै नै विश्व-रचयिता भगवान् प्राणीहरूको संयोग-वियोग गराउँदै रहन्छन् ॥ ४४ ॥ मेरो भक्ति नै प्राणीहरूलाई मोक्ष दिन्छिन् । यो निकै सौभाग्यको कुरा छ कि मेरो वियोग प्राप्त भएर पनि तिमीहरूलाई म भेटिने सम्झना अझसम्म छँदैछ ॥ ४५ ॥ जस्तै सबै भौतिक पदार्थहरूमा आकाश, वायु, अग्नि, जल र पृथ्वी यी पाँचै तत्त्व व्याप्त रहन्छन् तिनको भोक्ता सबै प्राणीहरूको आदि-

पृष्ट्वा प्रहसन्निदमब्रवीत् ॥ ४१ ॥ अपि स्मरथ नः सख्यः स्वानामर्थचिकीर्षया ॥ गताँश्चिरायिताञ्छत्रुपक्षक्षपणचेतसः ॥ ४२ ॥ अप्यवध्या-यथास्मान्स्विदकृतज्ञा विशङ्कया ॥ नूनं भूतानि भगवान् युनक्ति वियुनक्ति च ॥ ४३ ॥ वायुर्यथा घनानीकं तृणं तूलं रजांसि च । संयोज्याक्षिपते भूयस्तथा भूतानि भूतकृत् ॥४४॥ मयि भक्तिर्हि भूतानाममृतत्वाय कल्पते ॥ दिष्ट्या यदासीन्मत्स्नेहो भवतीनां मदापनः ॥ ४५ ॥ अहं हि सर्व-भूतानामादिरन्तोऽन्तरं बहिः ॥ भौतिकानां यथा खं वार्भूर्वायुर्ज्योतिरङ्गनाः ॥ ४६ ॥ एवं ह्येतानि भूतानि भूतेष्वात्मात्मना ततः ॥ उभयं मय्यथ परे पश्यताभातमक्षरे ॥ ४७ ॥ श्रीशुक उवाच ॥ अध्यात्मशिक्षया गोप्य एवं कृष्णेन शिक्षिताः ॥ तदनुस्मरणध्वस्तजीवकोशास्तमध्यगमन् ॥ ४८ ॥ आहुश्च ते नलिननाभ पदारविन्दं योगेश्वरैर्हृदि विचिन्त्यमगाधबोधैः ॥ संसारकूपपतितोत्तरणावलम्बं गेहंजुषामपि मनस्युदियात्सदा नः ॥ ४९ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे वृष्णिगोपसङ्गमो नाम द्व्यशीतितमोऽध्यायः ॥ ८२ ॥

श्रीशुक उवाच ॥ तथाऽनुगृह्य भगवान्गोपीनां स गुरुर्गतिः ॥ युधिष्ठिरमथापृच्छत्सर्वांश्च सुहृदोऽव्ययम् ॥१॥ त एवं लोकनाथेन परिपृष्टाः सुस-

अन्त्य तथा बाहिर-भित्र म नै विराजमान रहन्छु ॥४६॥ यसै गरी प्राणीहरूका शरीरमा तीन तत्त्व व्याप्त छन् र आत्मा भोक्तारूपले व्याप्त रहन्छ । ती दुवै नै म अक्षररूप परमात्मामा प्रतीत भइरहेछन् भन्ने जान' ॥ ४७ ॥ श्रीशुकदेव भन्दछन्–हे राजन् ! यस प्रकार भगवान् कृष्णद्वारा अध्यात्मज्ञानको उपदेशले राम्ररी सम्झाइ-बुझाइ गरिएका ती गोपिनीहरू उनको स्मरणले लिङ्ग शरीरको नाश भएपछि प्रभुको स्वरूपमा प्राप्त भए ॥ ४८ ॥ तिनले भने–'हे कमलनाभ ! अगाध ज्ञान सम्पन्न योगीहरूद्वारा हृदयमा अपको चिन्तन गरिन्छ र जो संसार-कूपमा परेका प्राणीलाई त्यसबाट झिक्नको निम्ति एक मात्र सहायक हुनुहुन्छ, हजुरका चरणकमल हामी गृहनिवासीका हृदयमा पनि सधैं विराजमान रहिरहून्' ॥ ४९ ॥
इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे पं० गौरीशंकर कृत 'वासिष्ठी' भाषाटीकायां द्व्यशीतितमोऽध्यायः ॥ ८२ ॥

( श्रीकृष्ण-पत्नीहरूले द्रौपदीलाई आफ्नाफ्नू विवाह-वृत्तान्त सुनाउनु ) शुकदेव भन्नुहुन्छ–हे राजन् ! गोपिनीका गुरु र एकमात्र गति कृष्णले नै यसै प्रकार अनुग्रह गरेपछि ।

12034

अनि धर्मराज युधिष्ठिर आदि सबैसित कुशल प्रश्न गर्नुभयो ॥ १ ॥ जगत्पति भगवान् द्वारा कुशल-प्रश्न र सत्कार पाएपछि पाण्डवादि बन्धु तिनका चरण कमलको दर्शनले निष्पाप भएर प्रसन्न मनले भन्नलागे– ॥ २ ॥ हे प्रभो ! देहधारीहरूलाई देहको प्राप्ति, अज्ञानको नाश पार्ने एवं महापुरुषका मुखबाट निस्कने तिम्रा पवित्र चरण-कमलका कथारूपिणी सुधा जो आफ्ना कर्णपुटले निरन्तर पान गर्दछन्, तिनको कहिल्यै कुनै प्रकारको अमङ्गल हुन सक्छ ? ॥ ३ ॥ अतः निजस्वरूपको प्रकाशले जहाँ बुद्धिको जाग्रत्, सुषुप्ति र तुरीय यी तीन अवस्था नष्ट हुन्छन्–यस्ता निर्भय, आनन्दपूर्ण, अखण्ड र कहिल्यै कुण्ठित नहुने ज्ञानस्वरूप भगवान् जसले कालक्रमद्वारा नष्ट भइरहेका वेदको रक्षा गर्नका निमित्त मनुष्यावतार

त्कृताः ॥ भ्रत्यू चुर्हृष्टमनसस्तत्पादेक्षाहतांहसः ॥ २ ॥ कुतोऽशिवं त्वच्चरणाम्बुजासवं महन्मनस्तो मुखनिःसृतं क्वचित् ॥ पिबन्ति ये कर्णपुटैरलं प्रभो देहभृतां देहकृदस्मृतिच्छिदम् ॥३॥ ह्यिवात्मधामविधुतात्मकृतत्र्यवस्थमानन्दसम्प्लवमखण्डमकुण्ठबोधम् ॥ कालोपसृष्टनिगमावन आत्तयोगमायाकृतिं परमहंसगतिं नताः स्मः ॥४॥ ऋषिरुवाच ॥ इत्युत्तमश्लोकशिखामणि जनेष्वभिष्टुवत्स्वन्धककौरवस्त्रियः ॥ समेत्यगोविन्दकथा मिथोऽगृणंस्त्रिलोक-गीताः शृणु वर्णयामि ते ॥५॥ द्रौपद्युवाच ॥ हे वैदर्भ्यच्युते भद्रे जाम्बवति कौसले ॥ हे सत्यभामे कालिन्दि शैव्ये रोहिणि लक्ष्मणे ॥ ६ ॥ हे कृष्णपत्न्य एतन्नो ब्रूत वो भगवान्स्वयम् ॥ उपयेमे यथा लोकमनुकुर्वन्स्वमायया ॥ ७ ॥ रुक्मिण्युवाच ॥ चैद्याय मार्पयितुमुद्यतकार्मुकेषु राजस्वजेयभ–

लिएका छन् र जो परमहंसका एकमात्र गति छन्, तिनलाई हामी प्रणाम गर्दछौं ॥४॥ शुकदेव भन्नुहुन्छ–हे राजन् ! जब अन्य व्यक्ति यसरी पुण्यकीर्ति श्रीकृष्ण भगवान्को स्तुति गर्दै थिए, उसै वेला यादव र कौरवकुलका स्त्रीहरू एकत्र भएर परस्पर भगवान्का त्रिभुवन-विख्यात कथाहरू भन्नलागे । त्यो म भन्दछु, तिमी ध्यानपूर्वक सुन ॥५॥ द्रौपदीले भनिन्–हे रुक्मिणी ! भद्रे ! हे जाम्बवती ! हे सत्ये ! हे सत्यभामे ! हे कालिन्दी ! हे मित्रविन्दे ! हे रोहिणी हे लक्ष्मणे ! हे कृष्णपत्नीहो ! तिमीहरू मलाई यो कुरा सुनाओ–आफ्नी मायाले लोकको अनुसरण गर्ने भगवान् कृष्णले तिमीहरूसित कसरी विवाह गरेका थिए ? ॥६॥७॥ रुक्मिणीले भनिन्–मेरा दाजू र पिता शिशुपालसित कविचार नगरी विवाह गरिदिन तयार भए तब जरासन्ध

० दृष्टान्त ( विचार नपुऱ्याएको विवाह )—कोही सेठले आफ्नी सात वर्षकी कन्याको विवाहका लागि वर खोज्न बोटा हजामलाई पठाए। हजामले [illegible] केही [illegible] लिएर दुइ दिनमै फर्केर आयो। उनले सोधे—'ए नाऊ ! विवाह ठीक भयो ?' उसले भन्यो—'जी, सेठजी मैले सबै ठीक पारेर आएँ।' उनले सोधे—'वर कस्तो छ ?' हजामले भन्यो—'[illegible] वर कहिल्यै नदेख्नु भ[illegible] होला !' उनले सोधे—उमेर कति होला ?' हजामले भन्यो—'बीस, बीस, बीस।' सेठले सोधे—'धन सम्पत्ति ?' हजामले उत्तर दियो—'धनको त कुरै छैन कोही यता [illegible], कोही [illegible] तर ती हेर्दा पनि हेर्दैनन्।' सेठले सोधे—'वर कस्तो स्वभावका छन्।' उसले भन्यो—'सेठजी ! यस्तो सरल स्वभाव छ कि कसैको दर्शले कति नै निन्दा गरोस्, ती सुन्दैनन्।' सेठले सोधे—'शीलनता कस्ता छ ?' [illegible] भन्यो—'ठूला मानिसको सौजन्यताको के कुरा गर्नो ! ती सधैं चार [illegible] दिन्छन्।' सेठजी प्रसन्न भए र हजामलाई यस्तो सुयोग्य वर खोजेकोमा थोटा दोसल्ला बकस दिए। त्यसपछि गरिने विवाहका अन्य [illegible] हजामले नै गरिदियो। जब जन्ती आए र विवाहको निमित्त वर मण्डपमा हाजिर तब सेठले हजामसित भने—'यो कस्तो वर हो ? तिमी त राम्रो छ भन्दथ्यौ !' उसले भन्यो—'मैले भनेकै थिएँ' यस्तो वर हजुरले कहिल्यै नदेख्नु भएको होला।' सेठले फेरि सोधे—'तिमी त बीस वर्षको त भन्दथ्यौ, तर यो त बूढो छ !' हजामले भन्यो—'हजुरले कुरा नबुझेकोमा मेरो के अपराध ; मैले त बीस बीस बीस वर्ष भनेको थिएँ, [illegible] वर्षभन्दा बूढा छन्।' सेठजीले फेरि भने—'यो त अन्धो पनि छ !' हजामले भन्यो—'सेठजी ! हजुरलाई [illegible] दिनुहुन्छ, मैले त भनेकै [illegible]—'कोही यता [illegible], कोही उता, तर यी हेर्दैनन्।' पुरोहितले [illegible] हजामा [illegible] लिएर [illegible] गर।' त्यो कुरा बरले सुनेन। अनि सेठले फेरि हजामलाई भने—'यो बर त बहिरो पनि छ !' हजामले उत्तर दियो—'सरकार ! मैले त पहिल्यै भनिदिएको थिएँ [illegible] ती सुन्दैनन्।' फेरि पुरोहितले बर[illegible] भने—'तपाईं

आदि राजा अश्वास लिएर युद्ध गर्न तयार भए, अनि ती अजेय वीरहरूको टाउकोमा आफ्ना युगल चरणको रज मुकुटमणि झैं सुशोभित तथा जो भेडा-बाख्राका समूह समान त्यो राज-समूहबाट आफ्नो भागस्वरूप मलाई सिंह समान खोसेर ल्याउनु भयो, ती लक्ष्मीनिवास भगवान् श्रीकृष्णका चरणको म सदा पूजा गर्दछु ॥८॥ सत्यभामाले भनिन्—जब प्रसेनको वधले सन्तप्त मेरा पिताले कलङ्क लगाएपछि त्यो दोष निवारणको निम्ति भगवान् ऋक्षराज जाम्बवान्लाई जितेर स्यमन्तक मणि ल्याई त्यो मेरा पितालाई दिनुभयो, अनि मिथ्या कलङ्क लगाएको अपराधले डराएका मेरा पिता, यद्यपि पहिले मलाई अन्तै दिने विचार गरिसकेका थिए, तापनि महाप्रभु श्रीकृष्णलाई नै समर्पण गरिदिए ॥९॥ जाम्बवतीलेभनिन्-मेरा पिता जाम्बवान्ले—श्रीकृष्ण मेरा प्रभु र कुलदेव भगवान् सीतापतिकै अवतार हुन् भन्ने थाहा पाए, तब सताईस दिनसम्म युद्ध गरेर परीक्षाद्वारा यिनलाई भगवान् राम नै हुन् भन्ने जानेर यिनका चरणमा परेर मणि समेत मलाई उपहारको रूपमा अर्पण गरिदिए । यसरी म यिनकी दासी भएँ ॥ १० ॥ अनि कालिन्दी भन्दछिन्—आफ्ना चरण-स्पर्शको कामनाले

टशेख रेतांघ्रिरेणुः ॥ नित्यं मृगेन्द्र इव भागमजावियूथात् तच्छ्रीनिकेतचरणोऽस्तु ममार्चनाय ॥ ८ ॥ सत्यभामोवाच ॥ यो मे सनाभिवधतप्तहृदा ततेन लिप्ताभिशापमपमार्ष्टुमुपाजहार ॥ जित्वर्क्षराजमथ रत्नमदात्स तेन भीतः पिताऽदिशत मां प्रभवेऽपि दत्ताम् ॥ ९ ॥ जाम्बवत्युवाच ॥ प्राज्ञाय देहकृदमुं निजनाथदैवं सीतापतिं त्रिणवहान्यमुनाऽभ्ययुध्यत् ॥ ज्ञात्वा परीक्षित उपाहरदर्हणं मां पादौ प्रगृह्य मणिनाऽहममुष्य दासी ॥१०॥ कालिन्द्युवाच ॥ तपश्चरन्तीमाज्ञाय स्वपादस्पर्शनाशया ॥ सख्योपेत्याग्रहीत्पाणिं योऽहं तद्गृहमार्जनी ॥ ११ ॥ मित्रविन्दोवाच ॥ यो मां स्वयंवर उपेत्य विजित्य भूपान् निन्ये श्वयूथगमिवात्मबलिं द्विपारिः ॥ भ्रातॄंश्च मेऽपकुरुतः स्वपुरं श्रियौकस्तस्यास्तु मेऽनुभवमङ्घ्र्यवनेजनत्वम् ॥१२॥ सत्योवाच ॥ सप्तोक्षणोऽतिबलवीर्यसुतीक्ष्णशृङ्गान् पित्रा कृतान्क्षितिपवीर्यपरीक्षणाय ॥ तान्वीरदुर्मदहनस्तरसा निगृह्य क्रीडन्बबन्ध ह यथा शिशवोऽजतोकान् ॥ १३ ॥ य इत्थं वीर्यशुल्कां मां दासीभिश्चतुरङ्गिणीम् ॥ पथि निर्जित्य राजन्यान्निन्ये तद्दास्यमस्तु मे ॥ १४ ॥ भद्रोवाच ॥ पिता मे मातुलेयाय

तपस्या गरिरहेकी देखेर श्रीहरिले आफ्ना सखा अर्जुनसित मेरो नजीकै आई पाणिग्रहण गर्नुभयो । अब म उनकै घरमा कुचो लगाउने यीटी दासी छु ॥ ११ ॥ मित्रविन्दा भन्दछिन्—सिंह जसरी कुकुरसित भाग खोस्तछ त्यसै गरी मेरो स्वयंवरमा आएका अन्य राजा र मेरा अपकारी दाजु-भाईलाई जितेर मलाई द्वारकापुरी ल्याउनु भयो, ती श्रीकृष्ण भगवान्को पादप्रक्षालन गर्ने सौभाग्य मलाई प्रत्येक जन्म प्राप्त होस् ॥१२॥ सत्याले भनिन्–मेरा पिताले राजाहरूको पुरुषार्थ जाँचनको निम्ति बलवान् र पराक्रमी, तीखा-तीखा सींग भएका सात गोरू नियुक्त गरेका थिए । वीरहरूको मद चूर्ण पार्ने ती गोरूलाई भगवान् कृष्णले बलपूर्वक समातेर यसरी बाँधिदिए, जसरी बालक बाख्राको पाठोलाई सहजै बाँधिदिन्छन् ॥ १३ ॥ यसरी पुरुषार्थरूपी मूल्य दिएर बाटोमा विघ्न पार्ने राजाहरूलाई जितेर जसले मलाई चतुरङ्गिणी सेना तथा दासीहरू सहित आफ्नू पुरीमा ल्याए, ती भगवान् कृष्णको दास्यभाव मलाई

उत्तार्थ पिन्डामा बल्ल्हबब् । अनि चार बनाले तिनलाई थोकेर पिन्डामा बढाले । त्यो देखेर बेठली रिसाई हष्टमचित भन्नथाले—'यो केटो त लँगडो पनि रहेछ ।' इसामले उत्तर दियो—'बेठली ! आफ्नु बुद्धिलाई दोष किन दिनु हुन्न ! मैले त तपाई-सका भनि दिएकै थिए—चार बना मानिसले त हिँड्दछन ।' सेठनी चुपलागी । उनले कस्तो गरे, उस्तै पाए ।

सदा प्राप्त भइरहोस् ॥१४॥ भद्रा भन्दछिन्–हे द्रौपदी ! मलाई पिनैमा अनुरक्त जानेपछि मेरा पिताले मामाका छोरा यी श्रीकृष्णलाई डाकेर एक अक्षौहिणी सेना र दाइजोहरू समेत मलाई स्वयं अर्पण गरिदिएका थिए ॥ १५ ॥ म आफ्नू कर्मानुसार संसारमा जहाँ गए पनि, त्यहीं जन्म-जन्म मलाई इनको चरण-स्पर्श प्राप्त भइरहोस् । किनकि आत्माको परम कल्याण यसैमा छ ॥ १६ ॥ लक्ष्मणाले भनिन्–हे द्रौपदी ! नारदको मुखबाट श्रीकृष्णको दिव्यजन्म र दिव्य कर्महरूको वृत्तान्त सुनेर यो विचार गरेर–अहो लक्ष्मीजीले पनि समस्त लोकपालहरूलाई त्यागेर विष्णु भगवान्लाई नै वरेकी थिइन्, त्यसै कारण मेरो मन श्रीकृष्णमा लीनभयो ॥ १७ ॥ हे साध्वि ! मेरो अभिप्राय जानेर मेरा पुत्रीवत्सला पिता राजा बृहत्सेनले त्यसको पूर्तिका निमित्त यो उपाय गरे ॥ १८ ॥ हे महारानी ! जस्तै अर्जुनलाई प्राप्त गर्नको निम्ति तिम्रा पिताले स्वयंवरमा मत्स्यवेधको आयोजन गरेका थिए, त्यस्तै मेरा पिताले पनि गरे । हामीकहाँको मत्स्य बाहिरबाट ढाकिएको थियो, केवल जलमा त्यसको प्रतिबिम्ब देखिन्थ्यो, यही विशेषता थियो ॥१९॥ जब मेरो स्वयंवरको समाचार सुनेर

स्वयमाहूय दत्तवान् ॥ कृष्णे कृष्णाय तच्चित्तामक्षौहिण्या सखीजनैः ॥ १५ ॥ अस्य मे पादसंस्पर्शो भवेज्जन्मनि जन्मनि ॥ कर्मभिर्भ्राम्यमाणाया येन तच्छ्रेय आत्मनः ॥ १६ ॥ लक्ष्मणोवाच ॥ ममापि राज्यच्युतधन्मकर्म श्रुत्वा मुहुर्नारदगीतमाश ह ॥ चित्तं मुकुन्दे किल पद्महस्तया वृतः सुसंमृश्य विहाय लोकपान् ॥ १७ ॥ ज्ञात्वा मम मतं साध्वि पिता दुहितृवत्सलः ॥ बृहत्सेन इति ख्यातस्तत्रोपायमचीकरत् ॥१८॥ यथा स्वयंवरे राज्ञि मत्स्यः पार्थेप्सया कृतः ॥ अयं तु बहिराच्छन्नो दृश्यते स जले परम् ॥ १९ ॥ श्रुत्वैतत्सर्वतो भूपा आययुर्मत्पितुःपुरम् ॥ सर्वास्त्रशस्त्रतत्त्वज्ञाः सोपाध्यायाः सहस्रशः ॥ २० ॥ पित्रा सम्पूजिताः सर्वे यथावीर्यं यथावयः ॥ आददुः सशरं चापं वेद्धुं पर्षदि मद्धियः ॥२१॥ आदाय व्यसृजन्के-चित्सज्यं कर्तुमनीश्वराः ॥ आकोटि ज्यां समुत्कृष्य पेतुरेकेऽमुना हताः ॥ २२ ॥ सज्यं कृत्वा परे वीरा मागधाम्बष्ठचेदिपाः ॥ भीमो दुर्योधनः कर्णो नाविन्दस्तदवस्थितिम् ॥ २३ ॥ मत्स्याभासं जले वीक्ष्य ज्ञात्वा च तदवस्थितिम् ॥ पार्थो यत्तोऽसृजद्बाणं नाच्छिनत्पस्पृशे परम् ॥ २४ ॥ राजन्येषु निवृत्तेषु भग्नमानेषु मानिषु ॥ भगवान्धनुरादाय सज्यं कृत्वाऽथ लीलया ॥ २५ ॥ तस्मिन्सन्धाय विशिखं मत्स्यं वीक्ष्य सकृज्जले ॥ छित्त्वेषुणाऽपातयत्तं सूर्ये चाभिजिति स्थिते ॥ २६ ॥ दिवि दुन्दुभयो नेदुर्जयशब्दयुता भुवि ॥ देवाश्च कुसुमासारान्मुमुचुर्हर्षविह्वलाः ॥२७॥

सबै अस्त्र-शस्त्र प्रहार गर्नमा कुशल अनेक राजा आदि आफ्ना पुरोहित सहित आएर मेरा पिताको नगरमा जम्मा भए ॥ २० ॥ अनि मेरा पिताले बल र आयुको अनुसार ती सबैको सत्कार गरे र ती सबै राजाहरूले मलाई प्राप्त गर्ने इच्छाले मत्स्यवेध गर्न सभाका धनुष-बाण उचाले ॥ २१ ॥ तिनमा कतिले त धनुषमा ताँदो चढाउनसमेत असमर्थ भई त्यो जहाँको त्यहीं राखिदिए । कतिपयले त्यसको डोरी धनुषको टुप्पासम्म ताने तर त्यसको आघातले नै पछारिए ॥२२॥ जरासन्ध, अम्बष्ठ, शिशुपाल, भीमसेन, दुर्योधन र कर्ण आदि वीरहरूले त धनुमा ताँदोसम्म चढाए, तर उनलाई लक्ष्यको स्थिति राम्रो ज्ञात हुन सकेन ॥ २३ ॥ अर्जुनले जलमा माछाको छाया देखेर त्यसको स्थिति पनि बुझे, तर जब उनले गनरः र निकै सावधान भई बाण छाडे तब त्यसले लक्ष्यवेध नभएर स्पर्शमात्र भयो ॥ २४ ॥ यसरी सभामा मानभङ्ग हुनाले जब सबै अभिमानी राजाहरू पर-पर हटे, तब भगवान् श्रीकृष्णले

1207

धनुष उठाएर ताँदो चढाई त्यसमा बाण राखेर स्वयं अभिजित् नक्षत्रमा आएपछि मालालाई एकपल्ट जलमा हेरे र बाणले हानी तल खसालिदिए ॥ २५-२६ ॥ त्यस बेला श्रीकृष्णको सारा भूमण्डलमा जय-जयकार भयो र आकाशमा दुन्दुभीहरूको निनाद हुनलाग्यो । त्यसको साथै देवगण हर्षले विह्वल भएर पुष्प-वर्षा गर्नलागे ॥ २७ ॥ तब म नयाँ र रेशमी वस्त्र लगाई कपालमा पुष्प-माला बाँधेर लज्जापूर्वक मुसुक्क हाँस्तै हातमा सुन तथा टल्कने माला लिई पाउजेबको मधुर ध्वनि गर्दै रङ्गशालामा गएँ ॥ २८ ॥ उत्तम अलकावली र कुण्डलका कान्तिले सुशोभित कपोल-युक्त आफ्नू मनोहर मुख उठाएर शरच्चन्द्र झैं मधुर हाँसो तथा कटाक्ष-भङ्गिमाले सबै राजासित दृष्टपात गर्दै मैले अनुरागपूर्ण चित्तले आफ्नू माला विस्तारै श्रीकृष्णको काँटीमा हालिदिएँ ॥ २८ ॥ अनि मृदङ्ग, पटह, शङ्ख, भेरी र नगरा आदि बाजाको निनाद हुन लाग्यो । नट नर्तकीहरू नाच्न लागे र गायक गाउन

तद्रङ्गमाविशमहं कलनूपुराभ्यां पद्भ्यां प्रगृह्य कनकोज्ज्वलरत्नमालाम् ॥ नूत्ने निवीय परिधाय च कौशिकाग्र्ये सव्रीडहासवदना कवरीधृतस्रक् ॥ २८ ॥ उन्नीय वक्त्रमुरुकुन्तलकुण्डलत्विड्गण्डस्थलं शिशिरहासकटाक्षमोक्षैः ॥ राज्ञो निरीक्ष्य परितः शकुनैर्मुरारेरंसेऽनुरक्तहृदया निदधे स्वमालाम् ॥२९॥ तावन्मृदङ्गपटहाः शङ्खभेर्यानकादयः ॥ निनेदुर्नटनर्तक्यो ननृतुर्गायका जगुः ॥ ३० ॥ एवं वृते भगवति मयेशे नृपयूथपाः ॥ न सेहिरे याज्ञसेनि स्पर्धन्तो हृच्छयातुराः ॥३१॥ मां तावद्रथमारोप्य हयरत्नचतुष्टयम् ॥ शार्ङ्गमुद्यम्य सन्नद्धस्तस्थावाजौ चतुर्भुजः ॥ ३२ ॥ दारुकश्चोदयामास काञ्चनोपस्करं रथम् ॥ मिषतां भूभुजां राज्ञि मृगाणां मृगराडिव ॥ ३३ ॥ तेऽन्वसज्जन्त राजन्या निषेद्धुं पथि केचन ॥ संयत्ता उद्धृतेष्वासा ग्रामसिंहा यथा हरिम् ॥ ३४ ॥ ते शार्ङ्गच्युतबाणौघैः कृत्तबाह्वङ्घ्रिकन्धराः ॥ निपेतुः प्रधने केचिदेके सन्त्यज्य दुद्रुवुः ॥ ३५ ॥ ततः पुरीं यदुपतिरलंकृतां रविच्छदध्वजपटचित्रतोरणाम् ॥ कुशस्थलीं दिवि भुवि चाभिसंस्तुतां समाविशत्तरणिरिव स्वकेतनम् ॥ ३६ ॥ पिता मे पूजयामास सुहृत्सम्बन्धिबान्धवान् ॥ महार्हवासोऽलङ्कारैः शय्यासनपरिच्छदैः ॥ ३७ ॥ दासीभिः सर्वसम्पद्भिर्भटेभरथवाजिभिः आयुधानि महा-

लागे ॥ ३० ॥ हे याज्ञसेनी ! जब मैले त्यसरी मायापति भगवान् कृष्णलाई वरण गरें, तब अन्य कामी राजालाई स्पर्धावश त्यो सहन हुन सकेन ॥ ३१ ॥ अनि भगवान्‌ले चतुर्भुज भएर मलाई आफ्ना चार उत्तम अश्वयुक्त रथमा राख्नुभयो र स्वयं कवच धारण गरेर शार्ङ्गधनुष उचाली युद्धमा उद्यत हुनुभयो ॥ ३२ ॥ हे महारानी ! अनि भगवान्‌का दारुकले सुवर्णविमण्डित रथ हिंडाए र जस्तै मृगहरूका माझबाट सिंह आफ्नू भाग हरेर लैजान्छ, त्यस्तै मलाई सबै राजाहरूले देख्दा-देख्दै प्रभुले हरेर ल्याए ॥ ३३ ॥ जस्तै कुकुर सिंहलाई छेक्न त्यसको पछि-पछि दगुर्छ, त्यस्तै केही राजा भगवान्‌लाई बाटोमा छेक्न धनुष-बाण लिई युद्ध गर्न तम्सिए र पछि-पछि आए ॥३४॥ तर तीमध्ये अनेक राजा त शार्ङ्गधनुषबाट छुटेका बाण समूह द्वारा हात, चरण र टाउको आदि काटिनाले युद्धभूमिमा नै मरेर ढले र कति युद्धभूमि त्यागेर भागे ॥३५॥ अनि सूर्यदेव जसरी अस्ताचलतिर जान्छन् त्यस्तै नै यदुनाथ भगवान् स्वयं तथा भूलोकमा प्रशंसित आफ्नी नगरी द्वारकापुरीमा प्रविष्ट भए—जुन त्यस बेला नाना प्रकारका रंगी-रंगी ध्वजा-पताका तथा फुल-माला आदिले सजाइएको थियो ॥ ३६ ॥ मेरा पिताले सुहृद्, सम्बन्धी र बन्धुजनलाई थरि-थरिका बहुमूल्य वस्त्र, अलङ्कार, शय्या, आसन र पात्र आदि वस्तु दिएर राम्ररी सम्मानित

1208

॥ ३० ॥ ती कृष्णको दर्शन, स्पर्श, सहगमन, सुत्नु बस्नु र खान-पान आदि क्रियाले युक्त जसको विवाह र सबै दैहिक सम्बन्ध हुने गर्दछन् । संसाररूपी बन्धनका कारण स्वरूप घरमा बसेर पनि जसकहाँ स्वर्ग र अपवर्गलाई पनि पर सारिदिने साक्षात् विष्णु भगवान् विराजमान छन्, त्यस्ता हजुरहरूको नै जीवन सार्थक कहिन्छन्' ॥ ३१ ॥ श्रीशुकदेवजी भन्नलागे—कृष्ण आदि यादव त्यहाँ आए भन्ने जानेर नन्दजी उनलाई हेर्ने इच्छाले आफ्ना समस्त गोपगणसहित जम्मा भई सबै सामग्री गाडामा राखेर यादवकहाँ आइपुगे ॥ ३२ ॥ उनी आएको देखेर गइसकेको प्राण फर्केर आएर रुचेत भए झैं प्रसन्न भए । निकै दिनदेखि ती उनको दर्शनको निम्ति लालयित थिए । अतएव तिनले तत्काल उनलाई गाढ आलिङ्गन गरे ॥ ३३ ॥ वसुदेवजीले अतिशय प्रीतिपूर्वक नन्दजीलाई अङ्कमाल गरेर कंसद्वारा दिइएका कष्ट तथा पुत्रलाई गोकुल पुऱ्याएको कुराहरू स्मरण गरेर असीम प्रेमवश अत्यन्त व्याकुल भए ॥ ३४ ॥ हे कुरुनन्दन ! राम तथा कृष्ण आफ्ना माता-पिता यशोदा र नन्दजीलाई प्रणाम र अंकमाल गरेर प्रेमवश आँखामा सहसा आंसु भरिनाले र घाँटी

प्रजल्पशय्यासनाशनसयौनमपिण्डबन्धः ॥ येषां गृहे निरयवर्त्मनि वर्ततां वः स्वर्गापवर्गविरमः स्वयमास विष्णुः ॥ ३१ ॥ श्रीशुक उवाच ॥ नन्दस्तत्र यदून्प्राप्ताञ्ज्ञात्वा कृष्णपुरोगमान् ॥ तत्रागमद्वृतो गोपैरनःस्थार्थैर्दिदृक्षया ॥ ३२ ॥ तं दृष्ट्वा वृष्णयो हृष्टास्तन्वः प्राणमिवोत्थिताः ॥ परिषस्वजिरे गाढं चिरदर्शनकातराः ॥३३॥ वसुदेवः परिष्वज्य सम्प्रीतः प्रेमविह्वलः ॥ स्मरन्कंसकृताङ्क्लेशान्पुत्रन्यासं च गोकुले ॥ ३४ ॥ कृष्णरामौ परिष्वज्य पितरावभिवाद्य च ॥ न किञ्चनोचतुः प्रेम्णा साश्रुकण्ठौ कुरूद्वह ॥ ३५ ॥ तावात्मासनमारोप्य बाहुभ्यां परिरभ्य च ॥ यशोदा च महाभागा सुतौ विजहतुः शुचः ॥३६॥ रोहिणी देवकी चाथ परिष्वज्य व्रजेश्वरीम् ॥ स्मरन्त्यौ तत्कृतां मैत्रीं बाष्पकण्ठ्यौ समूचतुः ॥३७॥ का विस्मरेत वां मैत्रीमनिवृत्तां व्रजेश्वरि ॥ अवाप्याप्यैन्द्रमैश्वर्यं यस्या नेह प्रतिक्रिया ॥ ३८ ॥ एतावदृष्टपितरौ युवयोः स्म पित्रोः सम्प्रीणनाभ्युदयपोषणपालनानि ॥ प्राप्योषतुर्भवति पक्ष्म ह यद्वदक्ष्णोर्न्यस्तावत्र कुत्र च भयौ न सतां परःस्वः ॥३९॥ श्रीशुक उवाच ॥ गोप्यश्चकृष्णमुपलभ्य चिरादभीष्टंयत्प्रेक्षणे दृशिषु पक्ष्मकृतंशपन्ति ॥ दृग्भिर्हृदीकृतमलं परिरभ्य सर्वास्तद्भावमापुरपि नित्ययुजां दुरापम्॥४०॥भगवांस्तास्तथाभूता विविक्त उपसङ्गतः ॥ आश्लिष्यानामयं

अवरुद्ध हुनाले केही पनि बोल्न सकेनन् ॥ ३५ ॥ नन्दजी र महाभाग यशोदाले ती दुवै पुत्रलाई आफ्नू काखामा बसालेर आफ्ना दुवै बाहुले उनको गाढ आलिङ्गन गरेर र आफ्नू विरह-व्यथा शान्त पारे ॥ ३६ ॥ महारानी रोहिणी र देवकी व्रजरानी यशोदासित भेटे र उनको पूर्वकृत मित्रताको स्मरण गरेर गद्गद् कण्ठले बोलिन्– ॥ ३७ ॥ 'हे व्रजेश्वरि ! इन्द्रपद पाएर पनि जसको कुनै प्रकारले ऋण तिर्न सकिन्न त्यस्ती हजुरको कहिल्यै बिछोड नहुने मैत्रीलाई कुन स्त्री बिर्सन सक्छे ? ॥ ३८ ॥ हे देवि ! यी राम र कृष्णले अब आफ्ना माता पितालाई देखेका पनि थिएनन्, तब परेलाले आँखाको रक्षा गरे झैं यहाँले इनको रक्षा गर्नु भयो । हजुर द्वारा नै यी दुवैको लालन-पालन र अभ्युदय तथा पोषण पाएर सदा निर्भय रहे किनकि सज्जनका दृष्टिमा कोही आफ्नू र बिरानो हुँदैन' ॥ श्रीशुकदेवजी भन्दछन्—हे राजन् ! भगवान् कृष्णको मधुर मूर्तिको दर्शन गर्ने बेलामा जा परेला बनाउने ब्रह्मालाई दोष दिन्थे, ती गोपिनी धेरै दिनदेखि जसको दर्शनको लालसा थियो, ती प्रियप्राण श्रीकृष्णको मनोहर मूर्ति नेत्र द्वारा हृदयमा लगेर आलिङ्गन गर्न

लागे, मुन नित्यका अभ्यासी योगीलाई पनि दुर्लभ थियो, ती त्यो भगवद्भावलाई प्राप्त भए । ४० ।। भगवान्ले पनि तिनको दशा देखेर एकान्तमा लगेर गाढ आलिङ्गन गरे र उनको कुशल सोध्री हाँस्नुभयो– ।। ४१ ।। स्वजनको उपकार गर्नको निम्ति नै हामी मथुरा आएका थियौं । शत्रुपक्षको संहारमा लाग्नाले तिकै दिन बितिसक्दा पनि तिमीहरूलाई भेट्न सकिन । के तिमीहरू कहिलेकाहीं हामीलाई पनि सम्झन्थ्यौ ? ।। ४२ ।। तिमीहरू मलाई कृतघ्न ठानेर अवश्य निन्दा गर्दा हौ, तर यसमा हाम्रो कुनै पनि दोष छैन, किनकि ईश्वर नै सबै जीवको संयोग र वियोग गराउँछन् ।। ४३ ।। जस्तै वायु मेघमाला, पात-पात, रूवा र धूलो एकत्रित पारेर फेरि छरिदिन्छ, त्यस्तै नै विश्व-रचयिता भगवान् प्राणीहरूको संयोग-वियोग गराउँदै रहन्छन् ।। ४४ ।। मेरो भक्ति नै प्राणीहरूलाई मोक्ष दिन्छिन् । यो निकै सौभाग्यको कुरा छ कि मेरो वियोग प्राप्त भएर पनि तिमीहरूलाई म भेटिने मनमा अप्रसन्न छैदैछ ।। ४५ ।। जस्तै सबै भौतिक पदार्थहरूमा आकाश, वायु, अग्नि, जल र पृथ्वी यी पाँचै तत्त्व व्याप्त रहन्छन् तिनको भोक्ता सबै प्राणीहरूको आदि-

पृष्ट्वा प्रहसन्निदमब्रवीत् ॥ ४१ ॥ अपि स्मरथ नः सख्यः स्वानामर्थचिकीर्षया ॥ गताँश्चिरायिताञ्छत्रुपक्षक्षपणचेतसः ॥ ४२ ॥ अप्यवध्या- यथास्मान्स्विदकृतज्ञा विशङ्कया ॥ नूनं भूतानि भगवान् युनक्ति वियुनक्ति च ॥ ४३ ॥ वायुर्यथा घनानीकं तृणं तूणं तूलं रजांसि च । संयोज्याक्षिपते भूयस्तथा भूतानि भूतकृत् ॥४४॥ मयि भक्तिर्हि भूतानाममृतत्वाय कल्पते ॥ दिष्ट्या यदासीन्मत्स्नेहो भवतीनां मदापनः ॥ ४५ ॥ अहं हि सर्व- भूतानामादिरन्तोऽन्तरं बहिः ॥ भौतिकानां यथा खं वार्भूर्वायुर्ज्योतिरङ्गनाः ॥ ४६ ॥ एवं ह्येतानि भूतानि भूतेष्वात्मात्मना ततः ॥ उभयं मय्यथ परे पश्यताभातमक्षरे ॥ ४७ ॥ श्रीशुक उवाच ॥ अध्यात्मशिक्षया गोप्य एवं कृष्णेन शिक्षिताः ॥ तदनुस्मरणध्वस्तजीवकोशास्तमध्यगन् ॥ ४८ ॥ आहुश्च ते नलिननाभ पदारविन्दं योगेश्वरैर्हृदि विचिन्त्यमगाधबोधैः ॥ संसारकूपपतितोत्तरणावलम्बं गेहजुषामपि मनस्युदियात्सदा नः ॥ ४९ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे वृष्णिगोपसङ्गमो नाम द्व्यशीतितमोऽध्यायः ॥ ८२ ॥

श्रीशुक उवाच ॥ तथाऽनुगृह्य भगवान्गोपीनां स गुरुर्गतिः ॥ युधिष्ठिरमथापृच्छत्सर्वांश्च सुहृदोऽव्ययम् ॥१॥ त एवं लोकनाथेन परिपृष्टाः सुम-

अन्त्य तथा बाहिर-भित्र म नै विराजमान रहन्छु ।।४६।। यसै गरी प्राणीहरूका शरीरमा पाँच तत्त्व व्याप्त छन् र आत्मा भोक्तारूपले व्याप्त रहन्छ । ती दुवै नै म अक्षररूप परमात्मामा प्रतीत भइरहेछन् भन्ने जान' ।। ४७ ।। श्रीशुकदेव भन्दछन्–हे राजन् ! यस प्रकार भगवान् कृष्णद्वारा अध्यात्मज्ञानको उपदेशले राम्ररी सम्झाइ-बुझाइ गरिएका ती गोपिनीहरू उनको स्मरणले लिङ्ग शरीरको नाश भएपछि प्रभुकै स्वरूपमा प्राप्त भए ।। ४८ ।। तिनले भने–'हे कमलनाभ ! अगाध ज्ञान सम्पन्न योगीहरूद्वारा हृदयमा उनको चिन्तन गरिन्छ र जो संसार-कूपमा परेका प्राणीलाई त्यसबाट निस्कनको निम्ति एक मात्र सहायक हुनुहुन्छ, हजुरका चरणकमल हामी गृहनिवासीका हृदयमा पनि सधैं विराजमान रहिरहून्' ।। ४९ ।। इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे पं० गौरीशंकर कृत 'वासिष्ठी' भाषाटीकायां द्व्यशीतितमोऽध्यायः ।। ८२ ।।

( श्रीकृष्ण-पत्नीहरूले द्रौपदीलाई आफ्नाफ्नु विवाह-वृत्तान्त सुनाउनु ) शुकदेव भन्नुहुन्छ–हे राजन् ! गोपिनीका गुरु र एकमात्र गति कृष्णले ती सबैप्रति अपार अनुग्रह गर्नुभयो ।

अनि धर्मराज युधिष्ठिर आदि सबैमित कुशल प्रश्न गर्नुभयो ॥ १ ॥ जगत्पति भगवान् द्वारा कुशल-प्रश्न र सत्कार पाएपछि पाण्डवादि बन्धु तिनका चरण कमलका दर्शनले निष्पाप भएर प्रसन्न मनले भन्नलागे– ॥ २ ॥ हे प्रभो ! देहधारीहरूलाई देहको प्राप्ति, अज्ञानको नाश पार्ने एवं महापुरुषका मुखबाट निस्कने तिम्रा पवित्र चरण-कमलका कथारूपिणी सुधा जो आफ्ना कर्णपुटले निरन्तर पान गर्दछन्, तिनको कहिल्यै कुनै प्रकारको अमङ्गल हुन सक्ला ? ॥ ३ ॥ अतः निजस्वरूपको प्रकाशले जहाँ बुद्धिको जाग्रत्, सुषुप्ति र तुरीय यी तीन अवस्था नष्ट हुन्छन्–यस्ता निर्भय, आनन्दपूर्ण, अखण्ड र कहिल्यै कुण्ठित नहुने ज्ञानस्वरूपम भवान् जसले कालक्रमद्वारा नष्ट भइरहेका वेदको रक्षा गर्नका निमित्त मनुष्यावतार

स्कृताः ॥ अत्यू चुर्हथ्मनसस्तत्पादेक्षाहतांहसः ॥ २ ॥ कुतोऽशिवं त्वच्चरणाम्बुजासवं महन्मनस्तो मुखनिःसृतं क्वचित् ॥ पिबन्ति ये कर्णपुटैरलं प्रभो देहम्भृतां देहकृदस्मृतिच्छिदम् ॥३॥ हित्वात्मधामविधुतात्मकृतत्र्यवस्थमानन्दसम्प्लवमखण्डमकुण्ठबोधम् ॥ कालोपसृष्टनिगमावन आत्तयोगमायाकृतिं परमहंसगतिं नताः स्मः ॥४॥ ऋषिरुवाच ॥ इत्युत्तमश्लोकशिखामणिं जनेष्वभिष्टुवत्स्वन्धककौरवस्त्रियः ॥ समेत्यगोविन्दकथा मिथोऽगृणंस्त्रिलोक-गीताः शृणु वर्णयामि ते ॥५॥ द्रौपद्युवाच ॥ हे वैदर्भ्यच्युते भद्रे जाम्बवति कौसले ॥ हे सत्यभामे कालिन्दि शैब्ये रोहिणि लक्ष्मणे ॥ ६ ॥ हे कृष्णपत्न्य एतन्नो ब्रूत वो भगवान्स्वयम् ॥ उपयेमे यथा लोकमनुकुर्वन्स्वमायया ॥ ७ ॥ रुक्मिण्युवाच ॥ चैद्याय मार्पयितुमुद्यतकार्मुकेषु राजस्वजेयभ-

लिएका छन् र जो परमहंसका एकमात्र गति छन्, तिनलाई हामी प्रणाम गर्दछौं ॥४॥ शुकदेव भन्नुहुन्छ–हे राजन् ! जब अन्य व्यक्ति यसरी पुण्यकीर्ति श्रीकृष्ण भगवानको स्तुति गर्दै थिए, उसै बेला यादव र कौरवकुलका स्त्रीहरू एकत्र भएर परस्पर भगवान्का त्रिभुवन-विख्यात कथाहरू भन्नलागे । त्यो म भन्दछु, तिमी ध्यानपूर्वक सुन ॥५॥ द्रौपदीले भनिन्–हे रुक्मिणी ! भद्रे ! हे जाम्बवती ! हे सत्ये ! हे सत्यभामे ! हे कालिन्दी ! हेमित्रविन्दे !हेरोहिणी!हेलक्ष्मणे !हेकृष्णपत्नीहो!तिमीहरू मलाईयोकुरा सुनाओ–आफ्नोमायालेलोकको अनुसरण गर्ने भगवान् कृष्णले तिमीहरूसित कसरी विवाह गरेका थिए ? ॥६॥७॥ रुक्मिणीले भनिन्–मेरा दाजू र पिता शिशुपालसित *विचारै नगरी विवाह गरिदिन तयार भए, तब जरासन्ध

* दृष्टान्त ( विचार नपुऱ्याएको विवाह )—थोरा सेठले आफ्नो सात वर्षको कन्याको विवाहका लागि वर खोज्न थोरा हजामलाई पठाए । हजामले सेठसित केही धन लिएर दुइ दिनमै फर्केर आयो । उनले सोधे–'ए नाऊ ! विवाह ठीक भयो ?' उसले भन्यो–'हो, सेठजी मैले सबै ठीक पारेर आएँ ।' उनले सोधे—'वर कस्तो छ ?' हजामले भन्यो—'यति राम्रो छ कि हजुरले त्यस्तो वर कहिल्यै नदेख्नु भएको होला ।' उनले सोधे–उमेर कति होला ?' हजामले भन्यो—'बीस, बीस, बीस ।' सेठले सोधे—'धन सम्पत्ति ?' हजामले उत्तर दियो—'धनको त कुरै छैन कोही यता उचालेर लैजान्छ, कोही उता, तर तो दिदाँ पनि देदनन् ।' सेठले सोधे–'वर कस्तो स्वभावको छन् ?' उसले भन्यो—सेठजी ! यस्तो सरल स्वभाव छ कि कसैको कसैले कति नै निन्दा गरोस्, ती सुन्दैनन् ।' सेठले सोधे–'सौजन्यता कस्तो छ !' उसले भन्यो–'ठूला मानिसको सौजन्यताको के कुरा गर्नो ? ती सधैं चार जनासित हिड्दछन् ।' सेठजी प्रसन्न भए र हजामलाई यस्तो सुयोग्य वर खोजेकोमा थोरा दोसल्ला बकस दिए । त्यसपछि गरिने विवाहका अन्य रीति पनि हजामले नै गरिदियो । जब बन्ती आए र विवाह भ निश्चित वर मण्डपमा हाजिर भए तब सेठले हजामसित भने–'यो कस्तो वर हो ? तिमी त राम्रो छ भन्दथ्यो !' उसले भन्यो–'मैले भनेकै थिए वस्तो वर हजुरले कहिल्यै नदेख्नु भएको होला ।' सेठले फेरि सोधे–'तिमी त बीस वर्ष को त भन्दथ्यौ, तर यो त बूढो छ ।' हजामले भन्यो–'हजुरले पुरा नबुझेकोमा मेरो के अपराध ; मैले त बीस बीस बीस वर्ष भनेको थिएँ के यो साठी वर्षभन्दा बुढो छन् ?' सेठजीले फेरि भने–यो त अन्धो पनि छ ।' हजामले भन्यो–'सेठजी ! हजुर म आई यस दिन्छु, मैले त भनेकै थिएँ–'कोही यता लिएर जान्छ, कोही उता, तर यी देख्दैनन् ।' पुरोहितले बरसित जब भने–'हातमा तिल कुश लिएर सङ्कल्प गर ।' त्यो कुरा नै सुनेन । अनि सेठले फेरि हजामलाई भने–'यो बर त बहिरो पनि छ ।' हजामले उत्तर दियो–'सरकार ! मैले त पहिल्यै भनिदिएको थिएँ–कसैले जति नै निन्दा गरे पनि ती सुन्दैनन् ।' फेरि पुरोहितले बरसित भने–पाउ

आदि राजा शस्त्रास्त्र लिएर युद्ध गर्न तयार भए, अनि ती अजेय वीरहरूको टाउकोमा जसका युगल चरणको रज मुकुटमणि झैं सुशोभित तथा जो भेडा-बाख्राका समूह समान त्यो राज-समूहबाट आफ्नो भागस्वरूप मलाई सिंह समान खोसेर ल्याउनु भयो, ती लक्ष्मीनिवास भगवान् श्रीकृष्णका चरणको म सदा पूजा गर्दछु ॥८॥ सत्यभामाले भनिन्–जब प्रसेनको वधले सन्तप्त मेरा पिताले कलङ्क लगाएपछि त्यो दोष निवारणको निम्ति भगवान् ऋक्षराज जाम्बवान्लाई जितेर स्यमन्तक मणि ल्याई त्यो मेरा पितालाई दिनुभयो, अनि मिथ्या कलङ्क लगाएको अपराधले डराएका मेरा पिता, यद्यपि पहिले मलाई अन्तै दिने विचार गरिसकेका थिए, तापनि महाप्रभु श्रीकृष्णलाई नै समर्पण गरिदिए ॥९॥ जाम्बवतीलेभनिन्-मेरा पिता जाम्बवान्ले–श्रीकृष्ण मेरा प्रभु र कुलदेव भगवान् सीतापतिकै अवतार हुन् भन्ने थाहा पाए, तब सताईस दिनसम्म युद्ध गरेर परीक्षाद्वारा यिनलाई भगवान् राम नै हुन् भन्ने जानेर यिनका चरणमा परेर मणि समेत मलाई उपहारको रूपमा अर्पण गरिदिए । यसरी म यिनकी दासी भएँ ॥ १० ॥ अनि कालिन्दी भन्दछिन्—आफ्ना चरण-स्पर्शको कामनाले

टशेख रितांघ्रिरेणुः ॥ नित्ये मृगेन्द्र इव भागमजाविर्यूथात् तच्छ्रीनिकेतचरणोऽस्तु ममार्चनाय ॥ ८ ॥ सत्यभामोवाच ॥ यो मे सनाभिवधतप्तहृदा ततेन लिप्ताभिशापमपमार्ष्टुमुपाजहार ॥ जित्वर्क्षराजमथ रत्नमदात्स तेन भीतः पिताऽदिशत मां प्रभवेऽपि दत्ताम् ॥ ९ ॥ जाम्बवत्युवाच ॥ प्राज्ञाय देहकृदमुं निजनाथदैवं सीतापतिं त्रिणवहान्यमुनाऽभ्ययुध्यत् ॥ ज्ञात्वा परीक्षित उपाहरदर्हणं मां पादौ प्रगृह्य मणिनाऽहममुष्य दासी ॥१०॥ कालिन्द्युवाच ॥ तपश्चरन्तीमाज्ञाय स्वपादस्पर्शनाशया ॥ सख्योपेत्याग्रहीत्पाणिं योऽहं तद्गृहमार्जनी ॥ ११ ॥ मित्रविन्दोवाच ॥ यो मां स्वयंवर उपेत्य विजित्य भूपान् निन्ये श्वयूथगमिवात्मबलिं द्विपारिः ॥ भ्रातॄँश्च मेऽपकुरुतः स्वपुरं श्रियौकस्तस्यास्तु मेऽनुभवमङ्घ्र्यवनेजनत्वम् ॥१२॥ सत्योवाच ॥ सप्तोक्षणोऽतिबलवीर्यसुतीक्ष्णशृङ्गान् पित्रा कृतान्क्षितिपवीर्यपरीक्षणाय ॥ तान्वीरदुर्मदहनस्तरसा निगृह्य क्रीडन्बबन्ध ह यथा शिशवोऽजतोकान् ॥ १३ ॥ य इत्थं वीर्यशुल्कां मां दासीभिश्चतुरङ्गिणीम् ॥ पथि निर्जित्य राजन्यान्निन्ये तद्दास्यमस्तु मे ॥ १४ ॥ भद्रोवाच ॥ पिता मे मातुलेयाय

तपस्या गरिरहेकी देखेर श्रीहरिले आफ्ना सखा अर्जुनसित मेरो नजीकै आई पाणिग्रहण गर्नुभयो । अब म उनकै घरमा कुचो लगाउने चौटी दासी हुँ ॥ ११ ॥ मित्रविन्दा भन्दछिन्–सिंह जसरी कुकुरसित भाग खोस्तछ त्यसै गरी मेरो स्वयंवरमा आएका अन्य राजा र मेरा अपकारी दाजु–भाईलाई जितेर मलाई द्वारकापुरी ल्याउनु भयो, ती श्रीकृष्ण भगवान्को पादप्रक्षालन गर्ने सौभाग्य मलाई प्रत्येक जन्म प्राप्त होस् ॥१२॥ सत्याले भनिन्–मेरा पिताले राजाहरूको पुरुषार्थ जाँच्नको निम्ति बलवान् र पराक्रमी, तीखा-तीखा सींग भएका सात गोरू नियुक्त गरेका थिए । वीरहरूको मद चूर्ण पार्ने ती गोरूलाई भगवान् कृष्णले बलपूर्वक समातेर यसरी बाँधिदिए, जसरी बालक बाख्राको पाठोलाई सहजै बाँधिदिन्छन् ॥ १३ ॥ यसरी पुरुषार्थरूपी मूल्य दिएर बाटोमा विघ्न पार्ने राजाहरूलाई जितेर जसले मलाई चतुरङ्गिणी सेना तथा दासीहरू सहित आफ्नू पुरीमा ल्याए, ती भगवान् कृष्णको दास्यभाव मलाई

उतार्थे पिन्डामा बस्नुहुन्छ । अनि चार बनाले तिनलाई बोकेर पिन्डामा बसाले । त्यो देखेर सेठकी रिसाई हुनामसित भन्नलागे–'यो केटो त लँगडो पनि रहेछ ।' हुनामले उत्तर दियो–'सेठजी ! आफ्नू बुद्धिलाई दोष किन दिनु हुन्न ! मैले त ठकाठका भनि दिएकै थिएँ–चार जना मान्छेले त हिंड्दछन् ।' सेठजी चुपलागे । उनले जस्तो गरे, उस्तै पाए ।

सदा प्राप्त भइरहोस् ॥१४॥ भद्रा भन्दछिन्–हे द्रौपदी ! मलाई चिनेमा अनुरक्त जानेपछि मेरा पिताले मामाका छोरा यी श्रीकृष्णलाई डाकेर एक अक्षौहिणी सेना र दाइजोहरू समेत मलाई स्वयं अर्पण गरिदिएका थिए ॥ १५ ॥ म आफ्नू कर्मानुसार संसारमा जहाँ गए पनि, त्यही जन्म-जन्म मलाई इनको चरण-स्पर्श प्राप्त भइरहोस् । किनकि आत्माको परम कल्याण यसैमा छ ॥ १६ ॥ लक्ष्मणाले भनिन्–हे द्रौपदी ! नारदको मुखबाट श्रीकृष्णको दिव्यजन्म र दिव्य कर्महरूको वृत्तान्त सुनेर यो विचार गरेर–अहो लक्ष्मीजीले पनि समस्त लोकपालहरूलाई त्यागेर विष्णु भगवान्लाई नै वरेकी थिइन्, त्यसै कारण मेरो मन श्रीकृष्णमा लीनभयो ॥ १७ ॥ हे साध्वि ! मेरो अभिप्राय जानेर मेरा पुत्रीवत्सला पिता राजा बृहत्सेनले त्यसको पूर्तिका निमित्त यौटा उपाय गरे ॥ १८ ॥ हे महारानी ! जस्तै अर्जुनलाई प्राप्त गर्नको निम्ति तिम्रा पिताले स्वयंवरमा मत्स्यवेधको आयोजन गरेका थिए, त्यस्तै मेरा पिताले पनि गरे । हामीकहाँको मत्स्य बाहिरबाट ढाकिएको थियो, केवल जलमा त्यसको प्रतिविम्ब देखिन्थ्यो, यही विशेषता थियो ॥१९॥ जब मेरो स्वयंवरको समाचार सुनेर

स्वयमाहूय दत्तवान् ॥ कृष्णे कृष्णाय तच्चित्तामक्षौहिण्या सखीजनैः ॥ १५ ॥ अस्य मे पादसंस्पर्शो भवेज्जन्मनि जन्मनि ॥ कर्मभिर्भ्राम्यमाणाया येन तच्छ्रेय आत्मनः ॥ १६ ॥ लक्ष्मणोवाच ॥ ममापि राज्यच्युतधन्मकर्म श्रुत्वा मुहुर्नारदगीतमाश ह ॥ चित्तं मुकुन्दे किल पद्महस्तया वृतः सुसंमृश्य विहाय लोकपान् ॥ १७ ॥ ज्ञात्वा मम मतं साध्वि पिता दुहितृवत्सलः ॥ बृहत्सेन इति ख्यातस्तत्रोपायमचीकरत् ॥१८॥ यथा स्वयंवरे राज्ञि मत्स्यः पार्थेप्सया कृतः ॥ अयं तु बहिराच्छन्नो दृश्यते स जले परम् ॥ १९ ॥ श्रुत्वैतत्सर्वतो भूपा आययुर्मत्पितुःपुरम् ॥ सर्वास्त्रशस्त्रतत्त्वज्ञाः सोपाध्यायाः सहस्रशः ॥ २० ॥ पित्रा सम्पूजिताः सर्वे यथावीर्यं यथावयः ॥ आददुः सशरं चापं वेद्धुं पर्षदि मद्धियः ॥२१॥ आदाय व्यसृजन्के- चित्सज्यं कर्तुमनीश्वराः ॥ आकोटि ज्यां समुत्कृष्य पेतुरेकेऽमुना हताः ॥ २२ ॥ सज्यं कृत्वा परे वीरा मागधाम्बष्ठचेदिपाः ॥ भीमो दुर्योधनः कर्णो नाविन्दस्तदवस्थितिम् ॥ २३ ॥ मत्स्याभासं जले वीक्ष्य ज्ञात्वा च तदवस्थितिम् ॥ पार्थो यत्तोऽसृजद्बाणं नाच्छिनत्पस्पृशे परम् ॥ २४ ॥ राजन्येषु निवृत्तेषु भग्नमानेषु मानिषु ॥ भगवान्धनुरादाय सज्यं कृत्वाऽथ लीलया ॥ २५ ॥ तस्मिन्सन्धाय विशिखं मत्स्यं वीक्ष्य सकृज्जले ॥ छित्त्वेषुणाऽपातयत्तं सूर्ये चाभिजिति स्थिते ॥ २६ ॥ दिवि दुन्दुभयो नेदुर्जयशब्दयुता भुवि ॥ देवाश्च कुसुमासारान्मुमुचुर्हर्षविह्वलाः ॥२७॥

सबै अस्त्र-शस्त्र प्रहार गर्नमा कुशल अनेक राजा आदि आफ्ना पुरोहित सहित आएर मेरा पिताको नगरमा जम्मा भए ॥ २० ॥ अनि मेरा पिताले बल र आयुको अनुसार ती सबैको सत्कार गरे र ती सबै राजाहरूले मलाई प्राप्त गर्ने इच्छाले मत्स्यवेध गर्न सभाका धनुष-बाण उचाले ॥ २१ ॥ तिनमा कतिले त धनुषमा ताँदो चढाउनमै असमर्थ भई त्यो जहाँको त्यहीं राखिदिए । कतिपयले त्यसको डोरी धनुषको टुप्पासम्म ताने तर त्यसको आघातले नै पछारिए ॥२२॥ जरासन्ध, अम्बष्ठ, शिशुपाल, भीमसेन, दुर्योधन र कर्ण आदि वीरहरूले त धनुमा ताँदोसम्म चढाए, तर उनलाई लक्ष्यको स्थिति राम्रो ज्ञात हुन सकेन ॥ २३ ॥ अर्जुनले जलमा माछाको छाया देखेर त्यसको स्थिति पनि बुझे, तर जब उनले गर्दा र निकै सावधान भई बाण छाडे तब त्यसले लक्ष्यवेध नभएर स्पर्शमात्र भयो ॥ २४ ॥ यसरी सभामा मानभङ्ग हुनाले जब सबै अभिमानी राजाहरू पर-पर हटे, तब भगवान् श्रीकृष्णले

1213

धनुष उठाएर ताँदो चढाई त्यसमा वाण राखेर स्वयं अभिजित् नक्षत्रमा आएपछि माछालाई एकपल्ट जलमा हेरे र वाणले हानी तल खसालिदिए ॥ २५-२६ ॥ त्यस बेला श्रीकृष्णको सारा भूमण्डलमा जय-जयकार भयो र आकाशमा दुन्दुभीहरूको निनाद हुनलाग्यो। त्यसको साथै देवगण हर्षले विह्वल भएर पुष्प-वर्षा गर्नलागे ॥ २७ ॥ तब म नयां र रेशमी वस्त्र लगाई कपालमा पुष्प-माला बाँधेर लज्जापूर्वक मुसुक्क हाँस्तै हातमा सुन तथा टल्कने माला लिई पाउनेबको मधुर ध्वनि गर्दै रङ्गशालामा गएँ ॥ २८ ॥ उत्तम अलकावली र कुण्डलका कान्तिले सुशोभित कपोल-युक्त आफ्नू मनोहर मुख उठाएर शरच्चन्द्र झैं मधुर हाँसो तथा कटाक्ष-भङ्गिमाले सबै राजाहरूमा दृष्टिपात गर्दै मैले अनुरागपूर्ण चित्तले आफ्नू माला बिस्तारै श्रीकृष्णको घाँटीमा हालिदिएँ ॥ २८ ॥ अनि मृदङ्ग, पटह, शङ्ख, भेरी र नगरा आदि बाजाको निनाद हुन लाग्यो। नट नर्तकीहरू नाच्न लागे र गायक गाउन

तदङ्कमाविशमहं कलनूपुराभ्यां पद्भ्यां प्रगृह्य कनकोज्ज्वलरत्नमालाम् ॥ नूत्ने निवीय परिधाय च कौशिकाग्र्ये सव्रीडहासवदना कवरीधृतस्रक् ॥ २८ ॥ उन्नीय वक्त्रमुरुकुन्तलकुण्डलत्विड्गण्डस्थलं शिशिरहासकटाक्षमोक्षैः ॥ राज्ञो निरीक्ष्य परितः शनकैर्मुरारेरंसेऽनुरक्तहृदया निदधे स्वमालाम् ॥२९॥ तावन्मृदङ्गपटहाः शङ्खभेर्यानकादयः ॥ निनेदुर्नटनर्तक्यो ननृतुर्गायका जगुः ॥ ३० ॥ एवं वृते भगवति मयेशे नृपयूथपाः ॥ न सेहिरे याज्ञसेनि स्पर्धन्तो हृच्छयातुराः ॥३१॥ मां तावद्रथमारोप्य हयरत्नचतुष्टयम् ॥ शार्ङ्गमुद्यम्य सन्नद्धस्तस्थावाजौ चतुर्भुजः ॥ ३२ ॥ दारुकश्चोदयामास काञ्चनोपस्करं रथम् ॥ मिषतां भूभुजां राज्ञि मृगाणां मृगराडिव ॥ ३३ ॥ तेऽन्वसज्जन्त रा न्या निषेद्धुं पथि केचन ॥ संयत्ता उद्धृतेष्वासा ग्रामसिंहा यथा हरिम् ॥ ३४ ॥ ते शार्ङ्गच्युतबाणौघैः कृत्तबाह्वङ्घ्रिकन्धराः ॥ निपेतुः प्रधने केचिदेके सन्त्यज्य दुद्रुवुः ॥ ३५ ॥ ततः पुरीं यदुपतिरलंकृतां रविच्छदध्वजपटचित्रतोरणाम् ॥ कुशस्थलीं दिवि भुवि चाभिसंस्तुतां समाविशत्तरणिरिव स्वकेतनम् ॥ ३६ ॥ पिता मे पूजयामास सुहृत्सम्बन्धिबान्धवान् ॥ महार्हवासोऽलङ्कारैः शय्यासनपरिच्छदैः ॥ ३७ ॥ दासीभिः सर्वसम्पद्भिर्भटेभरथवाजिभिः आयुधानि महा-

लागे ॥ ३० ॥ हे याज्ञसेनी ! जब मैले त्यसरी मायापति भगवान् कृष्णलाई वरण गरें, तब अन्य कामी राजालाई स्पर्धावश त्यो सहन हुन सकेन ॥ ३१ ॥ अनि भगवान्ले चतुर्भुज भएर मलाई आफ्ना चार उत्तम अश्वयुक्त रथमा राख्नुभयो र स्वयं कवच धारण गरेर शार्ङ्गधनुष उचाली युद्धमा उद्यत हुनुभयो ॥ ३२ ॥ हे महारानी ! अनि भगवान्का दारुकले सुवर्णविमण्डित रथ हिंडाए र जस्तै मृगहरूका माझबाट सिंह आफ्नू भाग हरेर लैजान्छ, त्यस्तै मलाई सबै राजाहरूले देख्दा-देख्दै प्रभुले हरेर ल्याए ॥ ३३ ॥ जस्तै कुकुर सिंहलाई छेक्न त्यसको पछि-पछि दगुर्छ, त्यस्तै केही राजा भगवान्लाई बाटोमा छेक्न धनुष-वाण लिई युद्ध गर्न तम्सेर र पछि-पछि आए ॥३४॥ तर तीमध्ये अनेक राजा त शार्ङ्ग धनुषबाट छुटेका वाण समूह द्वारा भुजा, चरण र टाउको आदि काटिनाले युद्धभूमिमा नै मरेर ढले र कति युद्धभूमि त्यागेर भागे ॥३५॥ अनि सूर्यदेव जसरी अस्ताचलतिर जान्छन् त्यस्तै नै यदुनाथ भगवान् स्वर्ग तथा भूलोकमा प्रशंसित आफ्नी नगरी द्वारकापुरीमा प्रविष्ट भए—जुन त्यस बेला नाना प्रकारका रंगी-रंगी ध्वजा-पताका तथा फूल-माला आदिले सजाइएकी थिई ॥ ३६ ॥ मेरा पिताले सुहृद्, सम्बन्धी र बन्धुजनलाई थरि-थरिका बहुमूल्य वस्त्र, अलङ्कार, शय्या, आसन र पात्र आदि वस्तु दिएर राम्ररी सम्मानित

गरे ॥३७॥ पूर्णकाम भगवान्‌लाई पनि दासी, सबै थरिका सम्पत्ति, हात्ती घोडा, रथ र घोडाहरू समेत अनेक मूल्यवान् वस्तु निकै भक्तिभावले अर्पण गरे ॥३८॥ हे द्रौपदि ! हामीले संग त्यागेर अवश्य कुनै ठूलो तप गरेका रहेछौं, जसको प्रभावले यस जन्ममा हामी आत्माराम भगवान् कृष्णका गृह-दासी हुनपायौं ॥३९॥ सोह्र हजार रानीहरूले भने—त्यो भौमासुरले भूमण्डलको दिग्विजय गर्दा जितेका अनेक राजाहरूका कन्यालाई आफ्नू महलमा रोकिराखेको छ—यो जानेर भगवान्‌ले युद्धमा सेनासहित त्यसको संहार गरेर आफू सबैतिरबाट पूर्णकाम भएर पनि संसारका भयबाट मुक्त पार्ने उनका चरणको स्मरण गर्ने हामी दासीहरूलाई बन्धनमुक्त पारेर उनले हाम्रो पाणिग्रहण गरे ॥ ४० ॥ हे साध्वि ! हामी साम्राज्य, इन्द्रपद अथवा यी दुवैका भोग, अणिमादि ऐश्वर्य, ब्रह्मपद, मोक्ष र सालोक्य-सामीप्य आदि मुक्ति—केही पनि खोज्दैनौं । उनको गाई चराउँदा गोप, जंगलका गोपिनी, भिल्लिनी, दूबो तथा झारादि पनि लक्ष्मीका कुच-कुंकुमका गन्धले सुगन्धित श्रीगदाधरका चरण-कमलको रज नै आफ्ना मस्तकमा धारण गर्ने कामना गर्दछन्, हामीलाई पनि उनै चरणको

र्हाणि ददौ पूर्णस्य भक्तितः ॥३८॥ आत्मारामस्य तस्येमा वयं वै गृहदासिकाः ॥ सर्वसङ्गनिवृत्त्याऽद्धा तपसा च बभूविम ॥३९॥ महिष्य ऊचुः ॥ भौमं निहत्य सगणं युधि तेन रुद्धा ज्ञात्वाऽथ नः क्षितिजये जितराजकन्याः ॥ निर्मुच्य संसृतिविमोक्षमनुस्मरन्तीः पादाम्बुजं परिणिनाय य आप्तकामः ॥ ४० ॥ न वयं साध्वि साम्राज्यं स्वाराज्यं भौज्यमप्युत ॥ वैराज्यं पारमेष्ठ्यं च आनन्त्यं वा हरेः पदम् ॥ ४१ ॥ कामयामह एतस्य श्रीमत्पादरजःश्रियः ॥ कुचकुंकुमगन्धाढ्यं मूर्ध्ना वोढुं गदाभृतः ॥४२॥ व्रजस्त्रियो यद्वाञ्छन्ति पुलिन्द्यस्तृणवीरुधः ॥ गावश्चारयतो गोपाः पादस्पर्शं महात्मनः ॥ ४३ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे त्र्यशीतितमोऽध्यायः ॥ ८३ ॥

श्रीशुक उवाच ॥ श्रुत्वा पृथा सुबलपुत्र्यथ याज्ञसेनी माधव्यथक्षितिपपत्न्य उत स्वगोप्यः ॥ कृष्णेऽखिलात्मनि हरौ प्रणयानुबन्धं सर्वा विसिस्म्युरलमश्रुकलाकुलाक्ष्यः ॥१॥ इति सम्भाषमाणासु स्त्रीभिः स्त्रीषु नृभिर्नृषु ॥ आययुर्मुनयस्तत्र कृष्णरामदिदृक्षया ॥२॥ द्वैपायनो नारदश्च च्यवनो देवलोऽसितः ॥ विश्वामित्रः शतानन्दो भारद्वाजोऽथ गौतमः ॥ ३ ॥ रामः सशिष्यो भगवान्वसिष्ठो गालवो भृगुः ॥ पुलस्त्यः कश्यपोऽत्रिश्च मार्कण्डेयो बृहस्पतिः ॥४॥ द्वितस्त्रितश्चैकतश्च ब्रह्मपुत्रास्तथाऽङ्गिराः ॥ अगस्त्यो याज्ञवल्क्यश्च वामदेवादयोऽपरे ॥ ५ ॥ तान्दृष्ट्वा सहसोत्थाय प्रागासीना

अभिलाषा छ ॥४१॥४३॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पं० गौरीशंकरकृत 'प्राञ्जली' भाषाटीकायां त्र्यशीतितमोऽध्यायः ॥ ८३ ॥

(वसुदेवको यज्ञोत्सव) श्रीशुकदेव भन्दछन्—हे राजन् ! रुक्मिणी आदि कृष्णका पत्नीहरूको सर्वात्मा श्रीहरिमा यस्तो प्रेमानुबन्ध देखेर कुन्ती, गान्धारी, द्रौपदी, सुभद्रा आदि अन्य राजपत्नीहरू र श्रीकृष्णचन्द्रका प्रेयसी गोपिनीगण अतिशय विस्मित भए र तिनका नेत्रबाट आँसुका धारा बग्नलागे ॥ १ ॥ यसरी जब स्त्रीहरूका साथ सबै स्त्रीहरू र पुरुषहरूका साथ सबै पुरुषहरू परस्पर वार्तालाप गर्दै थिए, त्यसै बखत बलराम र कृष्णचन्द्रका दर्शनका निमित्त त्यहाँ व्यासदेव, नारद, च्यवन, देवल, असित, विश्वामित्र, शतानन्द, भरद्वाज, गौतम, शिष्यगण समेत परशुराम, भगवान् वसिष्ठ, गालव, भृगु, पुलस्त्य, कश्यप, अत्रि, मार्कण्डेय, बृहस्पति, द्वित, त्रित, एकत, ब्रह्माका छोरा सनकादि चारै भाइ, अङ्गिरा,

अगस्त्य, याज्ञवल्क्य तथा वामदेव आदि ऋषिगण आइपुगे ॥२-५॥ ती विश्वविख्यात मुनीश्वरहरूलाई देखेर राम, कृष्ण, पाण्डवगण र अन्य राजाहरूले—जो पहिलेदेखि नै त्यहाँ थिए—ती सबैले झुक्क उठेर उनलाई प्रणाम गरे ॥ ६ ॥ अनि स्वागत, आसन, पाद्य-अर्घ्य, माला, धूप-दीप, चन्दनादि उपचार द्वारा राजाहरू सँग बलराम सहित भगवान् कृष्णले तिनको पूजा गरे ॥ ७ ॥ धर्मको रक्षाका निम्ति नै शरीर धारण गर्ने श्रीहरिले सुखपूर्वक बसेका ती मुनीश्वरसित भने। त्यस वेला सभाका सबैजना मौनभावले भगवान्को भाषण सुनिरहेका थिए ॥८॥ भगवान्ले आज्ञा गर्नो—अहो! आज हामी जन्मधारीलाई जन्म लिएको फल प्राप्त भयो किनकि योगित भेट हुनु देवतालाई पनि कठिन छ, आज हामी उनै मुनीश्वरहरूको दर्शन गर्दछौं ॥ ९ ॥ जसले थोरै तपस्या गरेको छ र जो केवल प्रतिमामा नै देवदृष्टि राख्दछन्, के तिनलाई कहिल्यै हजुरहरूको दर्शन, स्पर्श, कुशल प्रश्न, प्रणाम तथा पूजनादिको सुअवसर प्राप्त हुन सक्दछ? ॥१०॥ जलपूर्ण तीर्थ हुँदैनन्, न माटो अथवा ढुङ्गाले बनेका देवता नै देवता हुन्। वास्तवमा साधुजन नै प्रधान तीर्थ र उत्तम

नृपादयः ॥ पाण्डवाः कृष्णरामौ च प्रणेमुर्विश्वबन्दितान् ॥ ६ ॥ तानानर्चुर्यथा सर्वे सहरामोऽच्युतोऽर्चयत् ॥ स्वागतासनपाद्यार्घ्यमाल्यधूपानुलेपनैः ॥७॥ उवाच सुखमासीनान्भगवान्धर्मगुप्तनुः ॥ सदसस्तस्य महतो यतवाचोऽनुशृण्वतः ॥८॥ श्रीभगवानुवाच ॥ अहो वयं जन्मभृतो लब्धा कार्त्स्न्येन तत्फलम् । देवानामपि दुष्प्रापं यद्योगेश्वरदर्शनम् ॥ ९ ॥ किं स्वल्पतपसां नृणामर्चायां देवचक्षुषाम् ॥ दर्शनस्पर्शनप्रश्नप्रह्वपादार्चनादिकम्॥१०॥ न ह्यम्मयानि तीर्थानि न देवा मृच्छिलामयाः ॥ ते पुनन्त्युरुकालेन दर्शनादेव साधवः ॥११॥ नाग्निर्न सूर्यो न च चन्द्रतारका न भूर्जलं खं श्वसनोऽथ वाङ्मनः ॥ उपासिता भेदकृतो हरन्त्यघं विपश्चितो घ्नन्ति मुहूर्तसेवया ॥१२॥ यस्यात्मबुद्धिः कुणपे त्रिधातुके स्वधीः कलत्रादिषु भौम इज्यधीः ॥ यत्तीर्थबुद्धिः सलिले न कर्हिचिज्जनेष्वभिज्ञेषु स एव गोखरः ॥ १३ ॥ श्रीशुक उवाच ॥ निशम्येत्थं भगवतः कृष्णस्याकुण्ठमेधसः ॥ वचो दुरन्वयं विप्रास्तूष्णीमासन्भ्रमद्धियः ॥१४॥ चिरं विमृश्य मुनय ईश्वरस्येशितव्यताम् ॥ जनसंग्रह इत्यूचुः स्मयन्तस्तं जगद्गुरुम् ॥१५॥ मुनय ऊचुः ॥ यन्मायया तत्त्वविदुत्तमा वयं विमोहिता विश्वसृजामधीश्वराः ॥ यदीशितव्यायति गूढ ईहया अहो विचित्रं भगवद्विचेष्टितम् ॥ ॥१६॥ अनीह एतद्-

देवता हुन्छन्, किनकि तीर्थ त धेरै दिन सेवन गरेपछि नै पवित्र पार्दछन् र साधुजन केवल दर्शनले नै कृतार्थ पारिदिने गर्दछन् ॥ ११ ॥ अग्नि, सूर्य, चन्द्रमा, तारागण, पृथ्वी, जल, आकाश, वायु, वाणी र मनका अधिष्ठाता देवता उपासना गरेर पनि भेदबुद्धि राख्ने प्राणीका पाप अर्थात् अज्ञानको नाश गर्दैनन्, तर ज्ञानी महात्मा जनको केवल एक मुहूर्तको सेवाले नै सबै अज्ञानको नाश गरिदिन्छन् ॥१२॥ जुन प्राणीलाई वात, पित्त र कफ—यी तीन धातुले बनेको शवतुल्य देहमा नै आत्मबुद्धि रहन्छ, जो स्त्री आदिलाई आफ्नू मान्दछन्, जसको केवल पार्थिव प्रतिमाहरूमा देवबुद्धि र केवल जलमा नै तीर्थबुद्धि रहन्छ र जो ज्ञानी महात्मा जनमा कहिल्यै पूज्यबुद्धि राख्दैन, त्यो गोरू र गधा समान बन्दछ ॥१३॥ श्रीशुकदेव भन्दछन्—हे राजन्! जसको बुद्धि कहिल्यै कुण्ठित हुन सक्तैन, ती कृष्ण भगवान्को गूढ भाषण सुनेर समस्त ऋषिहरूको बुद्धि भ्रममा पर्नगयो र ती चुपलागेर बसे ॥१४॥ धेरै बेरसम्म भगवान्को समवचामा विचार गरेर ती मुनीश्वर जगद्गुरु श्रीकृष्णसित यो भनेर कि—'हजुरको कथन लोक संग्रहको निम्ति हो, मुसु-मुसु हाँस्तै भन्नलागे ॥१५॥

मुनिजनले भने—जपहो मायाले प्रजापतीहरूका अधीश्वर मरीचि आदि प्रजापति र तत्त्वज्ञानीहरूमा श्रेष्ठ हामी सबै मोहित भइरहेका छौं र जो आफ्नू गूढ चेष्टाले स्वयं ईश्वर भएर पनि परतन्त्र जीव झैं आचरण गर्दछन्, त्यस्ता हजुरको लीला विचित्र छ ॥ १६ ॥ जस्तै पार्थिव पदार्थहरूले पृथ्वी अनेक रूपकी देखिन्छिन्, त्यस्तै हजुर निश्चेष्ट भएर पनि एकमात्र आफू द्वारा नै यो बहुविध जगत्‌को रचना, पालन र संहार गर्नुहुन्छ, तापनि यसमा लिप्त रहनु हुन्न । अहो ! हजुर सर्वव्यापकको यो विचित्र कार्य केवल लीलामात्र हो ॥ १७ ॥ हे प्रभो ! हजुर प्रकृतिदेखि टाढा साक्षात् पुराणपुरुष भएर पनि बेला बेलामा आफ्ना भक्तजनको रक्षा र दुष्टजनको दमन गर्न विशुद्ध सत्त्वमय शरीर धारण गरी आफ्ना लीलारूपी

हृषीक आत्मना सृज्यत्यवत्यत्ति न बध्यते यथा ॥ भौमैर्हि भूमिर्बहुनामरूपिणी अहो विभूम्नश्चरितं विडम्बनम् ॥ १७ ॥ अथापि काले स्वजनाभिगुप्तये बिभर्षि सत्त्वं खलनिग्रहाय च ॥ स्वलीलया वेदपथं सनातनं वर्णाश्रमात्मा पुरुषः परो भवान् ॥ १८ ॥ ब्रह्म ते हृदयं शुक्लं तपःस्वाध्यायसंयमैः ॥ यत्रोपलब्धं सद्व्यक्तमव्यक्तं च ततः परम् ॥ १९ ॥ तस्माद्ब्रह्मकुलं ब्रह्मन्शास्त्रयोनेस्त्वमात्मनः ॥ सभाजयसि सद्धाम तद्ब्रह्मण्याग्रणीर्भवान् २० ॥ अद्य नो जन्मसाफल्यं विद्यायास्तपसो दृशः ॥ त्वया सङ्गम्य सद्गत्य यदन्तः श्रेयसां परः ॥ २१ ॥ नमस्तस्मै भगवते कृष्णायाकुण्ठमेधसे ॥ स्वयोगमायायाच्छन्नमहिम्ने परमात्मने ॥ २२ ॥ न यं विदन्त्यमी भूपा एकारामाश्च वृष्णयः ॥ मायाजवनिकाच्छन्नमात्मानं काल-

आचरणद्वारा सनातन वेदमार्गको रक्षा गर्नुहुन्छ किनकि वर्णाश्रमका आत्मा हजुर नै हुनुहुन्छ ॥ १८ ॥ वेद हजुरको हृदय हो—जसले तप, स्वाध्याय र इन्द्रियनिग्रह द्वारा व्यक्त अर्थात् कार्य अव्यक्त अर्थात् कारण र यी दुवैबाट विलक्षण सत्स्वरूप परमात्माको प्राप्ति हुन्छ ॥ १९ ॥ अतः हे परमात्मन् ! वेदका आधारभूत हजुरका स्वरूपको उपलब्धि हुने जो स्थान छन् ती ब्राह्मणहरूको हजुर सम्मान गर्नुहुन्छ । यसै निमित्त हजुर सबै ब्राह्मणमा अग्रणी हुनुहुन्छ ॥ २० ॥ २१ ॥ सबै कल्याणका परमावधि र साधुजनका पारसमणिरूपी हजुर श्रीकृष्णलाई

* दृष्टान्त ( पारसमणिको कथा )—कोही योगीले एक सेठलाई यस्तो पारसमणि दिए, जसमा छुनासाथ फलाम, सुन बन्दथ्यो, तर योगीले भने यो हजुरको केवल सात दिनको निमित्त दिन्छु । त्यसपछि एक दिन पनि तिमी राख्न सक्नेछैनौ । सेठजी पारसमणि लिएर प्रसन्न हुँदै घर पुगे । उनले विचार गरे—घरमा फलाम कहाँ छ ? केवल कुटो, कोदालो, हँसिया, चुलो चक्कु जस्ता फलामे चिजले के हुन्छ ? अहिले त सात दिन बाँकी छ । तुरुन्त आफ्ना कारिन्दालाई बोलेर कोही जबलपुर र अरूलाई बम्बई पठाए र भने—जति सक्दो धेरै फलाम सात दिन भित्र नै यहाँ आइपुग्नु पर्दछ ! तिनले बम्बई पुग्नमै दुइ दिन लाग्यो । त्यहाँ पुगेर फलाम लिई रेलमा यस्तै दुइदिन बित्यो । यसरी फलाम पठाएको बाटोमा दुई दिन बित्यो । फेरि प॥ रले चल्न-चल्न सातौं दिन बिहान फलाम स्टेशनमा ल्याइयो । स्टेशनबाट सेठको घर पुग्दा साँझ पर्‍यो । फलाम बाहिर पुगिएको थियो । सेठले विचार गरे—यदि ढोकामै मणि छोइदिनें हो भने चोर डाकाले खोलेर लैजान्छन् । अतः सबकहीं सेवक लगाएर फलाम भित्र राख्न लगाउँदै थिए, रातको बाह बज्यो । योगि आफ्नू कथन अनुसार मणि लिन आइपुगे । उनले भने—ल्याऊ मणि !' सेठले भने—अहिलेसम्म त फलाम भित्र्याउँदै थिएँ । मणिको स्पर्श गरेकै छैन पर्खनोस् !' महात्माले भने—एक छिनको त के कुरा, एक पल पनि पर्खन्न, ल्याऊ मेरो मणि सेठले भने—म त दुःखी भएर मणि स्पर्श गराई तुरुन्त ल्याउँछु !' यति भनेर सेठ उठ्नै लागेका थिए । तर योगीले मणि बलपूर्वक खोसेर लिए । यसको निष्कर्ष हो—परमात्मारूपी योगीले सेठलाई मनुष्य देहरूपी मणि सात दिनको निमित्त ( केही दिन भनेको सात नै हुन्छ ) दिएका थिए—यसको उपयोगले मोक्षरूपी सुन बनाउन । तर जीवात्मा शरीर पाएर संसारी वस्तुहरूको संग्रहरूपी फलामको व्यवस्था गर्नमै अलमलियो । सात दिन बितेपछि परमात्मा मणि माग्न आए तब जीव भन्दछ—यदि अरू केही दिन बाँच्न पाए धर्म-कर्म गर्ने थिएँ । अरू केही नभए पनि एक पटक श्रीमद्भागवत सप्ताह नै सुन्ने थिएँ, तर मृत्यु पर्खेको कुरा सुन्दैन । जीव यस मणिको कुनै पनि उपयोग गर्न पाएन । व्यर्थमै समय बितेर गयो र हातबाट मणि (जीवन) फुत्कियो । 'देश, जाति र धर्मको निमित्त जे जति कर्तव्य हो, त्यो भोलि गर्ने, भोलि गर आज गर्ने भए अहिल्यै गर जीवन क्षणिक छ,

अनेकशः—नमस्कार छ ॥ २२ ॥ सबैका आत्मा जगत्‌का आदिकारण र नियन्ता भएर पनि मायारूपी पर्दाले ढाकिएका छौ । अतः ती राजाहरू र हजुरसितै क्रीडा गर्ने यादव पनि हजुरलाई जान्न सक्तैनन् ॥ २३ ॥ जस्तै निदाएको पुरुष स्वप्नका मिथ्या पदार्थलाई सत्य ठान्दछ र इन्द्रियले प्रतीत हुने नाममात्रको स्वप्न देहलाई नै वास्तविक देह हो भन्ने ठान्दछ र त्योदेखि भिन्न जाग्रत देहको केही सम्झना गर्दैन ॥ २४ ॥ त्यस्तै जाग्रत् अवस्थामा पनि जसको मन समस्त इन्द्रियका प्रवृत्तिरूपी मायाले मोहित भएर केवल नाममात्रको विषयमा डुलिरहन्छ, त्यो विवेकशक्ति आच्छादित भएपछि स्वयं आफूलाई जान्दैन ॥ २५ ॥ मलाई आज हजुरका ती युगल चरण कमलको दर्शन मिलेको छ, जसलाई मुनिजन

मीश्वरम् ॥२३॥ यथा शयानः पुरुष आत्मानं गुणतत्त्वदृक् ॥ नाममात्रेन्द्रियाभातं न वेद रहितं परम् ॥२४॥ एवं त्वां नाममात्रेषु विषयेष्विन्द्रियेहया ॥ मायया विभ्रमच्चित्तो न वेद स्मृत्युपप्लवात् ॥ २५ ॥ तस्याद्य ते ददृशिमाङ्घ्रिमघौघमर्षतीर्थास्पदं हृदि कृतं सुविपक्वयोगैः ॥ उत्सिक्तभक्त्युपहताशयजीवकोशा आपुर्भवद्गतिमथोऽनुगृहाण भक्तान् ॥ २६ ॥ श्रीशुक उवाच ॥ इत्यनुज्ञाप्य दाशार्हं धृतराष्ट्रं युधिष्ठिरम् ॥ राजर्षे स्वाश्रमान्गन्तुं मुनयो दधिरे मनः ॥ २७ ॥ तद्वीक्ष्य तानुपव्रज्य वासुदेवो महायशाः ॥ प्रणम्य चोपसंगृह्य बभाषेदं सुयन्त्रितः ॥ २८ ॥ वसुदेव उवाच ॥

योगबल द्वारा आफ्नू हृदयमा ध्यान गर्दछन् र जो पापराशिलाई विध्वंस पार्ने गंगाजीका पनि आधार हुनुहुन्छ । अतः हे देव ! हजुर हामी भक्तगणमा कृपा गर्नोस् किनकि जसको पक्षीसदृश लिंगदेहरूपी जीवकोश हजुरको उत्कृष्ट भक्तिले आर्द्र हुन्छ, उनै हजुरका परमपदमा प्राप्त हुन्छन् ॥ २६ ॥ शुकदेवजी भन्नुहुन्छ—हे राजर्षे ! भगवान्‌को यसरी स्तुति गरेर ती मुनीश्वरहरूले बलराम, श्रीकृष्ण, धृतराष्ट्र र युधिष्ठिरादिबाट आज्ञा लिएर सबैले आ-आफ्ना आश्रममा जाने विचार गरे ॥ २७ ॥ तिनलाई त्यसरी जान उद्यत देखेर

⊙ दृष्टान्त ( पक्षी ) आफ्नू गुँडमा बसेको यौटा पक्षी मधुर स्वरले गाइरहेको थियो । प्रातः कालको मन्द-मन्द वायु चित्त प्रसन्न पारिरहेको थियो । भास्कर भगवान्‌को स्वागत गर्न सहयोगी पक्षीहरूको कलरव आनन्द वर्षाइरहेको थियो । त्यो नैसर्गिक शोभा कुनै अलक्षित प्रेम राज्यको स्मरण गराइरहेको थियो । अकस्मात् यौटा शिकारी आएर गुँडको अघिल्तिर उभियो । उसले भीषण हुङ्कार गरेर पक्षीलाई सचेत पार्‍यो र धनुषमा बाण सन्धान्यो । गुँड केराको पात झैं थर्र काम्यो । पक्षीले व्यग्र भएर भन्यो—'तिमी को हौ ?' शिकारीले कडकेर उत्तर दियो—मलाई सबै काल कराल काल भन्दछन् ।' पक्षीले फेरि सोध्यो—'तिमी आउने कारण के हो ?' शिकारीले निस्पृहतापूर्वक भन्यो—'म तिम्रो अन्त्य गर्न आएको हुँ ।' पक्षीले मुसुक्क हाँसेर उत्तर दियो—'मैले के अपराध गरें ?' शिकारीले भन्यो—'तिमीले कर्मसूत्र छिनालेनौ । तिम्रो अपराध यति हो ।' पक्षी गलल्ल हाँस्न लाग्यो र भृकुटी अग्लो पारेर भन्यो—'तिमी महामूर्ख छौ ।' शिकारीले भन्यो—'यो उद्दण्डता किन ! तिमी मलाई कुन आधारमा मूर्ख ठुन्याइरहेका छौ ?' पक्षीले उत्तर दियो—'यो कुरा नजान्नु नै मूर्खता हो, जसलाई जीवको धर्म भन्दछन् ।' शिकारीले कराएर भन्यो—'म त्रिकालज्ञ हुँ, म के जान्न सक्तिन ?' पक्षी शान्त भावले बोल्यो—'उसो भए भन म को हुँ ?' शिकारी बोल्यो—पाँच भौतिक देहधारी संसारी जीव ।' पक्षीले अट्टहास गर्‍यो र भर्त्सना गर्दै भन्यो—'यही तिम्रो अज्ञान हो जुन तिमी गुँडलाई मेरो रूप मानिरहेका छौ । त्यसैले मलाई पाञ्चभौतिक मानिरहेका छौ । यो नष्ट भए पनि म रहिरहने छु भन्ने जान्दैनौ ।' शिकारी ले हकपरेर गुँडतिर हेरेर भन्यो—'लौ त, तिमी नै आफ्नू वास्तविक स्वरूप भन ।' पक्षीले भन्यो—'म उही हुँ, जसको भेद आजन्म कसैले पनि पाउन न पाउन सक्नेछ । वेदले जसको अन्त्य पाएनन्, जसमा मृत्युको प्रभाव पर्दैन । जो काल कर्म र स्वभावको बन्धनबाट मुक्त छ जसलाई नित्य, निरंजन र सच्चिदानन्द भन्दछन् ।' शिकारी रातारात आँखा पारेर करायो—इसको के प्रमाण छ ?' पक्षीले दृढतापूर्वक भन्यो—'प्रत्यक्षलाई लिखित प्रमाणको आवश्यकता किन पर्‍यो, प्रयोग गरेर हेर ।' शिकारीले कानसम्म प्रत्यञ्चा तानेर बाण छाड्यो, त्यसले गुँड हाँगाको आधार त्यागेर तल खस्यो । शिकारीले देख्यो—माँसपात बाहेक त्यसमा अन्य कुनै पार्थिव पदार्थ छैन । एकै दिनपछि शिकारीले स्पष्ट देख्यो—अर्को गुँडमा बसेको उही पक्षी अत्यन्त ललित, आकर्षक एवं मधुर गीत गाइरहेको छ ।

महायशस्वी वसुदेवजी उनको नजीकै गए, उनलाई प्रणाम गरे र तिनको पाउ समातेर एकाग्र चित्तले यसरी भने ॥२८॥ वसुदेव भन्दछन्–हे सर्वदेवमय ऋषीश्वर हो ! हजुरलाई मेरो प्रणाम छ । हजुरहरू मेरो यौटा प्रार्थना सुन्नोस् । जुन कर्मको विधिबाट आचरण गर्नाले मोक्ष-मार्गकाप्रतिबन्धक कर्महरूबाट्टुम्नसकिन्छ, त्यो कर्म हजुर मलाई भन्नोस् ॥२९॥श्रीनारदजी भन्नलागे–हे विप्रगण ! आफ्ना पुत्र भगवान् कृष्णलाई बालक ठानेर र आफ्नू कल्याणका साधन जान्नको निम्ति जनलाई छाडेर जो हजुरले हामीसित प्रश्न गर्नु भयो,योकुनै छक्क पर्ने कुरा होइन ॥ ३० ॥ किनकि संसारमा समीपता मनुष्यका अनादरको कारण बन्दछ । जस्तै–गङ्गा तटमा बस्ने मानिस आफ्नू शुद्धिका लागि गङ्गाजल छाडेर अन्य तीर्थहरुमा जान्छन् ॥३१॥ जसको ज्ञान कालले, जगत्को उत्पत्ति, स्थिति र प्रलय द्वारा, आफूबाट अथवा अर्काबाट र गुणसंगले कहिल्यै क्षीण हुँदैन ॥ ३२ ॥ जसको ज्ञानमय स्वरूप राग-द्वेषादि क्लेश, पुण्य-पापमय कर्म, सुख-दुःखादि कर्मफल र सत्वादि गुणका प्रवाहले खण्डित हुँदैन, ती अद्वितीय परमेश्वरलाई साधारण व्यक्ति मेघ र कुइरोले ढाकिएका सूर्य झैं

नमो वः सर्वदेवेभ्य ऋषयः श्रोतुमर्हथ ॥ कर्मणा कर्मनिर्हारो यथा स्यान्नस्तदुच्यताम् ॥ २९ ॥ नारद उवाच ॥ नातिचित्रमिदं विप्रा वसुदेवो बुभुत्सया ॥ कृष्णं मत्वाऽर्भकं यन्नः पृच्छति श्रेय आत्मनः ॥ ३० ॥ सन्निकर्षोऽत्र मर्त्यानामनादरणकारणम् ॥ गाङ्गं हित्वा यथाऽन्याम्भस्तत्रत्यो याति शुद्धये ॥ ३१ ॥ यस्यानुभूतिः कालेन लयोत्पत्त्यादिनाऽस्य वै ॥ स्वतोऽन्यस्माच्च गुणतो न कुतश्चन रिष्यति ॥ ३२ ॥ तं क्लेशकर्मपरिपाकगुणप्रवाहैरव्याहतानुभवमीश्वरमद्वितीयम् ॥ प्राणादिभिः स्वविभवैरुपगूढमन्यो मन्येत सूर्यमिव मेघहिमोपरागैः ॥ ३३ ॥ अथोचुर्मुनयो राजन्नाभाष्यानकदुन्दुभिः ॥ सर्वेषां शृण्वतां राज्ञां तथैवाच्युतरामयोः ॥ ३४ ॥ कर्मणा कर्मनिर्हार एष साधु निरूपितः ॥ यच्छ्रद्धया यजेद्विष्णुं सर्वयज्ञेश्वरं मखैः ॥ ३५ ॥ चित्तस्योपशमोऽयं वै कविभिः शास्त्रचक्षुषा ॥ दर्शितः सुगमो योगो धर्मश्चात्ममुदावहः ॥३६॥ अयं स्वस्त्ययनः पन्था द्विजातेर्गृहमेधिनः ॥ यच्छ्रद्धयाप्तवित्तेन शुक्लेनेज्येत पूरुषः ॥ ३७ ॥ वित्तैषणां यज्ञदानैर्गृहैर्दारसुतैषणाम् ॥ आत्मलोकैषणां देव कालेन विसृजेद् बुधः ॥ ग्रामे त्यक्तैषणाः सर्वे ययुर्धीरास्तपोवनम् ॥ ३८ ॥ ऋणैस्त्रिभिर्द्विजो जातो देवर्षिपितृणां प्रभो ॥ यज्ञाध्ययनपुत्रैस्तान्यनिस्तीर्य त्यजन्प-

इन्द्रियादिले आच्छादित ठान्दछन् ॥३३॥ अनि हे राजन् ! ती मुनीश्वरहरूले वसुदेवलाई सम्बोधित गरी बलराम र श्रीकृष्ण तथा अन्यान्य राजाहरूको समक्ष उनीसित भने—॥३४॥ कर्मद्वारा कर्म-नाश पार्ने सबैभन्दा सजिलो उपाय यही कहिएको छ—यज्ञादि द्वारा यज्ञपति भगवान् विष्णुको पूजा गरियोस् ॥ ३५ ॥ सुयोग्य विद्वान्ले शास्त्रदृष्टिबाट यही चित्तशान्तिको उपाय, सुगम मोक्ष-साधन र चित्त प्रसन्न पार्ने धर्म कहेका छन् ॥ ३६ ॥ व्यक्ति आफ्नू न्यायोपार्जित धनले श्रद्धापूर्वक पुरुषोत्तम भगवान्को पूजा गरोस् । यही नै द्विजातीय गृहस्थको निम्ति कल्याणकारी बाटो छ ॥३७॥ हे वसुदेव ! विचारशील पुरुषले यज्ञ-दानादि द्वारा वित्तैषणा, गृहस्थोचित भोगद्वारा स्त्री-पुत्रको एषणा र कालक्रमले स्वर्गादि पनि छुटेर जान्छन्, यस विचारले लोकैषणा त्यागिदिनुपर्दछ । यसरी तीनै थरि एषणा घरमा बसेर नै त्यागेर पूर्वकालमा धीर पुरुष तपोवन जान्थे ॥ ३८ ॥ हे राजन ! ब्राह्मण, क्षत्रिय र वैश्य यी द्विजातिमात्र तथा देवता, ऋषि, पितृ, सत्वादि त्रिगुणयुक्त उत्पन्न हुन्छन् र यज्ञ, अध्ययन तथा पुत्रोत्पत्ति आदि कर्मद्वारा तीबाट अऋणी नभई जो

संसारलाई त्यागिदिन्छन्, ती पतित भएर जान्छन् ॥३९॥ हे महामते ! हजुर पितृऋण र ऋषिऋण दुवैबाट मुक्त हुनुभयो, अब यज्ञानुष्ठान द्वारा देवऋणबाट अऋणी भएर भगवान्‌को शरणमा जानोस् ॥४०॥ हे वसुदेव ! हजुरले अवश्य भक्तिपूर्वक जगत्पति विष्णुको पूजा गर्नुभएको छ । त्यसैले ती भगवान् हजुर दुवै दम्पतीकहाँ पुत्ररूपले अवतार लिएका छन् ॥४१॥ श्रीशुकदेव भन्दछन्–हे राजन् ! ऋषिगणका वचन सुनेर महामना वसुदेवले उनलाई न्पुरेर प्रणाम गरे र ती सबैलाई प्रसन्न पार्दै आफ्ना ऋत्विक् तुल्याए ॥ ४२ ॥ हे राजन् ! धर्मपूर्वक वरण गरिएका ती ऋत्विक्हरूले त्यो पवित्र प्रभास क्षेत्रमा महामना वसुदेवजीले उत्तम सामग्री युक्त अनेक यज्ञहरूद्वारा नारायण भगवान्‌को पूजन गराए ॥ ४३ ॥ हे राजन् ! यो यज्ञमा जब वसुदेवले यज्ञको दीक्षा लिएपछि राम्ररी स्नान गरेर राम्रा वस्त्र र घाँटीमा कमलको माला लगाई सबै यादवगण तथा वस्त्रालङ्कारहरूले विभूषित सबै राजा तथा उत्तम वस्त्र, चन्दनादि अङ्गराज र घाँटीमा पदक धारण गरेका प्रसन्नवदना महारानीहरू हातमा अनेक प्रकारका सामग्री लिई यज्ञशालामा प्रविष्ट भइन् ॥४४॥४५॥ अनि मृदङ्ग, पटह, शङ्ख,

तेत् ॥ ३९ ॥ त्वं त्वद्य मुक्तो द्वाभ्यां वै ऋषिपित्रोर्महामते ॥ यज्ञैर्देवर्णमुन्मुच्य निरृणोऽशरणो भव ॥ ४० ॥ वसुदेव भवान्नूनं भक्त्या परमया हरिम् ॥ जगतामीश्वरं प्रार्चः स यद्वां पुत्रतां गतः ॥ ४१ ॥ श्रीशुक उवाच ॥ इति तद्वचनं श्रुत्वा वसुदेवो महामनाः ॥ तानृषीनृत्विजो वव्रे मूर्ध्नाऽऽनम्य प्रसाद्य च ॥ ४२ ॥ त एनमृषयो राजन्वृता धर्मेण धार्मिकम् ॥ तस्मिन्नयाजन्क्षेत्रे मखैरुत्तमकल्पकैः ॥ ४३ ॥ तद्दीक्षायां प्रवृत्तायां वृष्णयः पुष्करस्रजः ॥ स्नाताः सुवाससो राजन्राजानः सुष्ठ्वलंकृताः ॥ ४४ ॥ तन्महिष्यश्च मुदिता निष्ककण्ठ्यः सुवाससः ॥ दीक्षाशालामुपाजग्मुरालिप्ता वस्तुपाणयः ॥४५॥ नेदुर्मृदङ्गपटहशङ्खभेर्यानकादयः ॥ ननृतुर्नटनर्तक्यस्तुष्टुवुः सूतमागधाः ॥ जगुः सुकण्ठ्यो गन्धर्व्यः सङ्गीतं सहभर्तृकाः ॥ ४६ ॥ तमभ्यषिञ्चन्विधिवदक्तमभ्यक्तमृत्विजः ॥ पत्नीभिरष्टादशभिः सोमराजमिवोडुभिः ॥ ४७ ॥ ताभिर्दुकूलवलयैर्हारनूपुरकुण्डलैः ॥ स्वलंकृताभिर्विबभौ दीक्षितोऽजिनसंवृतः ॥ ४८ ॥ तस्यर्त्विजो महाराज रत्नकौशेयवाससः ॥ ससदस्या विरेजुस्ते यथा वृत्रहणोऽध्वरे ॥ ४९ ॥ तदा रामश्च कृष्णश्च स्वैः स्वैर्बन्धुभिरन्वितौ ॥ रेजतुः स्वसुतैर्दारैर्जीवेशौ स्वविभूतिभिः ॥ ५० ॥ ईजेऽनुयज्ञं विधिना अग्निहोत्रादिलक्षणैः ॥

भेरी र आनक आदि बाजा बज्न लागे, नट र नर्तकीहरू नाच्न लागे । सूत र मागध स्तुति-गान गर्नलागे र आफ्आफ्ना पतिसहित सुन्दर स्वर हुने गन्धर्वका पत्नीहरू गान गर्नलागे । ॥४६॥ शरीरमा बेसार, तेल आदि अनेक थरिका बुकुवा लगाएका वसुदेवको ऋत्विज् जनले तिनका देवकी आदि अठार पट्टरानीहरूका साथै उसै गरी महाभिषेकको विधिले अभिषेक गराए, जसरी पूर्वकालमा नक्षत्र समेत चन्द्रमाको अभिषेक भएको थियो ॥ ४७ ॥ त्यस बेला यज्ञको दीक्षा ग्रहण गरेका हुनाले कृष्णमृगचर्मले आवृत वसुदेव राम्रा सारी, कङ्कण, हार, नूपुर र कुण्डलादि आभूषणले राम्ररी अलङ्कृत आफ्ना पत्नीहरूसहित अत्यन्त शोभित भए ॥४८॥ हे महाराज ! वसुदेवका ऋत्विक् तथा सदस्यगण रत्न जडित आभूषणहरू र रेशमी वस्त्र पहिरेर यस्ता सुशोभित भए—जस्तै पूर्वकालमा इन्द्र यज्ञमा शोभायमान भएका थिए ॥ ४९ ॥ त्यस बेला आफ्ना बन्धुहरूका साथै राम र कृष्ण आफ्ना अंशरूप छोरा र स्त्रीहरूसित जीव र ईश्वर झैं देखिए ॥५०॥ फेरि वसुदेवले अग्निहोत्रादि स्वरूप अर्थात् अग्निष्टोम, दर्श तथा पौर्णमास आदि प्राकृत यज्ञ तथा सौरसत्रादि वैकृत यज्ञहरू द्वारा द्रव्य,

1220

यज्ञ र क्रियाका अधिपति विष्णु भगवान्को पूजा गरे ॥ ५१ ॥ उनले बेलामा वस्त्रालङ्कारले सुसज्जित ब्राह्मणहरूलाई आज्ञाअनुसार बहुमूल्य दक्षिणा, गाई पृथ्वी र राम्रा-राम्रा कन्या दान गरे ॥ ५२ ॥ अनि ती महर्षिहरूले पत्नी सहित अवभृथ स्नानका सबै कृत्य गराए र यजमानलाई अघि लगाएर परशुरामले रचेका कुण्डमा स्नान गर्न लगाए ॥ ५३ ॥ स्नान गरिसकेपछि वसुदेव र तिनका पत्नीले बन्दीजनहरूलाई अनेक थरिका अलङ्कार र वस्त्रादि दिए र स्वयं पनि अनेक थरिका राम्रा वस्त्रालङ्कार धारण गरेर वसुदेवले सबै वर्ण र श्वानपर्यन्त समस्त जीवलाई भोजन दिएर तृप्त पारे ॥ ५४ ॥ आफ्ना बन्धुगण, तिनका स्त्री-पुत्र तथा विदर्भ, कौशल, कुरु, काशी, केकय तथा सृञ्जय आदि देशका राजाहरू, सदस्यगण, ऋत्विज, देवता, मनुष्य, भूत, पितर तथा चारणादिलाई प्रचुर सामग्री दिई बिदा गरे । ती पनि भगवान् लक्ष्मीपतिसित आज्ञा लिएर यज्ञको प्रशंसा गर्दै आफ्ना-आफ्ना घर गए ॥५५॥५६॥ उता धृतराष्ट्र, विदुर, कुन्तीका सबै छोरा युधिष्ठिर, भीम, अर्जुन, नकुल, सहदेव तथा भीष्म, द्रोण, कृप, नारद, भगवान् व्यासदेव तथा अन्य सुहृद्-सम्बन्धी र बान्धव-

प्राकृतैर्वैकृतैर्यज्ञैर्द्रव्यज्ञानक्रियेश्वरम् ॥ ५१ ॥ अथर्त्विग्भ्योऽददात्काले यथाऽऽम्नातं स दक्षिणाः ॥ स्वलंकृतेभ्योऽलङ्कृत्य गोभूकन्या महाधनाः ॥५२॥ पत्नीसंयाजावभृथ्यैश्चरित्वा ते महर्षयः ॥ सस्नू रामह्रदे विप्रा यजमानपुरःसराः ॥ ५३ ॥ स्नातोऽलङ्कारवासांसि वन्दिभ्योऽदात्तथा स्त्रियः ॥ ततः स्वलङ्कृतो वर्णानाश्वभ्योऽन्नेन पूजयत् ॥ ५४ ॥ बन्धून्सदारान्ससुतान्पारिबर्हेण भूयसा ॥ विदर्भकोसलकुरून्काशिकेकयसृञ्जयान् ॥ ५५ ॥ सदस्यर्त्विक्सुरगणान्नृभूतपितृचारणान् ॥ श्रीनिकेतमनुज्ञाप्य शंसन्तः प्रययुः क्रतुम् ॥ ५६ ॥ धृतराष्ट्रोऽनुजः पार्था भीष्मो द्रोणः पृथा यमौ ॥ नारदो भगवान्व्यासः सुहृत्सम्बन्धिबान्धवाः ॥ ५७ ॥ बन्धून्परिष्वज्य यदून्सौहृदाक्लिन्नचेतसः ॥ ययुर्विरहकृच्छ्रेण स्वदेशांश्चापरे जनाः ॥ ५८ ॥ नन्दस्तु सह गोपालैर्बृहत्या पूजयाऽर्चितः ॥ कृष्णरामोग्रसेनाद्यैर्न्यवात्सीद्बन्धुवत्सलः ॥ ५९ ॥ वसुदेवोऽञ्जसोत्तीर्य मनोरथमहार्णवम् ॥ सुहृद्वृतः प्रीतमना नन्दमाह करे स्पृशन् ॥ ६० ॥ वसुदेव उवाच ॥ भ्रातरीशकृतः पाशो नृणां यः स्नेहसंज्ञितः ॥ तं दुस्त्यजमहं मन्ये शूराणामपि योगिनाम् ॥१६॥ अस्मास्वप्रतिकल्पेयं यत्कृताऽज्ञेषु सत्तमैः ॥ मैत्र्यर्पिताऽफला वापि न निवर्तेत कर्हिचित् ॥ ६२ ॥ प्रागकल्पाच्च कुशलं भ्रातरो नाचराम ॥ अधुना श्रीमदान्धाक्षा न पश्यामः पुरः सतः ॥ ६३ ॥ मा राज्यश्रीरभूत्पुंसः श्रेयस्कामस्य मानद ॥ स्वजनानुत बन्धून्वा न पश्यति

हरूले आफ्ना बन्धु यादवहरूलाई स्नेहार्द्र चित्तले आलिङ्गन गरे र तिनका विरह-व्यथाले आकुल भएर ती बडो कष्टले आफ्नू-आफ्नू देश फर्किए ॥ ५७ ॥ ५८ ॥ ती सुहृद् यादवप्रति अत्यन्त प्रेम हुनाले गोपाल सहित नन्दजी, भगवान् कृष्ण, बलराम तथा उग्रसेन आदि यादवद्वारा विविध सामग्रीहरूले सत्कृत भई केही दिन त्यहीं निवास गरे ॥ ५९ ॥ अनि वसुदेवले मनोभिलषित यज्ञ विषयक मनोरथरूपी समुद्रबाट पारी तरी आफ्ना बन्धुका साथ प्रसन्न मनले नन्दजीको हात समातेर भने ॥ ६० ॥ वसुदेवले भने—हे नन्दजी ! भगवानले बनाएका मनुष्यको स्नेहपाश त्याग्न म शूरवीर योगीहरूका निम्ति पनि कठिन मान्छु ॥ ६१ ॥ किनकि हामी अज्ञमाथि साधुशिरोमणि तिमीले जुन उपकार गरेका छौ, त्यसको यद्यपि हामीले कुनै साटो फेर्न सकेनौं तापनि यो प्रेम-बन्धन कहिल्यै चुँडिने छैन ॥ ६२ ॥ हे भाइ ! पहिले त हामी बन्दीगृहमा थुनिएर असमर्थ थियौं । अतः तिम्रो कुनै पनि उपकार

गर्न सकेनौं अब हाम्रा नेत्र श्रीमदले अति अन्धा भएका छन् कि हामी आपन् सामुन्ने उपस्थित भएर पनि तिमीलाई देखिरहेका छैनौं ॥ ६३ ॥ हे सम्मान दिने मित्र ! कल्याणकामी पुरुषलाई भगवान् कहिल्यै राज्यलक्ष्मी नदेउन्, किनकि त्यसद्वारा अन्धो भएको पुरुष आफ्ना अनुगामी बन्धुहरूलाई पनि देख्दैन ॥६४॥ श्रीशुकदेव भन्दछन्–यसरी प्रेमको प्रबलताले गद्गद् भएर वसुदेवजी नन्दजीको सौहार्द स्मरण गरेर आँखा रसाएर रुन लागे ॥ ६५ ॥ नन्दजी पनि आफ्ना सखाको मन राख्नको निम्ति र श्रीकृष्ण तथा बलरामको स्नेहवश यादवहरूबाट सम्मानित भएर आज-भोलि गर्दागर्दै त्यहाँ तीन महीना बसे ॥६६॥ अनि नन्दजी गाई र गोपग्वालहरू समेत बहुमूल्य वस्त्राभूषण र अनेक थरिका उत्तम भोजन सामग्रीले सत्कृत भई वसुदेव, उग्रसेन, कृष्ण र उद्धवादि द्वारा प्राप्त उपहारहरू ग्रहण गरेर सबैसित सादर बिदा भई आफ्नू घर हिंडे ॥ ६७ ॥ ६८ ॥ त्यस बखत नन्दजी र सबै गोपगण तथा गोपिनीहरू भगवान् कृष्णका चरणकमलमा लागेका मन त्यहाँबाट तान्न असमर्थ भएर नै मथुरा फर्के ॥ ६९ ॥ यसरी सबै बन्धुगण बिदा भएपछि—जसका कृष्ण नै एकमात्र

यथाऽन्धदृक् ॥ ६४ ॥ श्रीशुक उवाच ॥ एवं सौहृदशैथिल्यचित्त आनकदुन्दुभिः ॥ रुरोद तत्कृतां मैत्रीं स्मरन्नश्रुविलोचनः ॥ ६५ ॥ नन्दस्तु सख्युः प्रियकृत्प्रेम्णा गोविन्दरामयोः ॥ अद्य श्व इति मासाँस्त्रीन्यदुभिर्मानितोऽवसत् ॥ ६६ ॥ ततः कामैः पूर्यमाणः सव्रजः सहबान्धवः ॥ परार्ध्याभरणक्षौमनानाऽनर्घ्यपरिच्छदैः ॥ ६७ ॥ वसुदेवोग्रसेनाभ्यां कृष्णोद्धवबलादिभिः ॥ दत्तमादाय पारिबर्हं यापितो यदुभिर्ययौ ॥ ६८ ॥ नन्दो गोपाश्च गोप्यश्च गोविन्दचरणाम्बुजे ॥ मनः क्षिप्तं पुनर्हर्तुमनीशा मथुरां ययुः ॥ ६९ ॥ बन्धुषु प्रतियातेषु वृष्णयः कृष्णदेवताः ॥ वीक्ष्य प्रावृषमासन्नां ययुर्द्वारवतीं पुनः ॥ ७० ॥ जनेभ्यः कथयाञ्चक्रुर्यदुदेवमहोत्सवम् ॥ यदासीत्तीर्थयात्रायां सुहृत्सन्दर्शनादिकम् ॥ ७१ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे तीर्थयात्रानुवर्णनं नाम चतुरशीतितमोऽध्यायः ॥ ८४ ॥

श्रीबादरायणिरुवाच ॥ अथैकदात्मजौ प्राप्तौ कृतपादाभिवन्दनौ ॥ वसुदेवोऽभिनन्द्याह प्रीत्या सङ्कर्षणाच्युतौ ॥ १ ॥ मुनीनां स वचः श्रुत्वा पुत्रयोर्धामसूचकम् ॥ तद्वीर्यैर्जातविश्रम्भः परिभाष्याभ्यभाषत ॥ २ ॥ कृष्ण कृष्ण महायोगिन्सङ्कर्षण सनातन ॥ जाने वामस्य यत्साक्षात्प्रधानपुरुषौ

इष्टदेव थिए ती यादव पनि वर्षाकाल नजीकै आएको देखेर द्वारकापुरी फर्किए ॥ ७० ॥ द्वारका पुगेर तिनले सर्वसाईं वसुदेवको यज्ञोत्सव र तीर्थयात्रामा बन्धुगणको दर्शन-मिलनको वृत्तान्त सुनाए ॥ ७१ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे नेपाली भाषाटीकायां चतुरशीतितमोऽध्यायः ॥ ८४ ॥

( वसुदेवको सर्वत्र भगवद्दृष्टि हुनु र भगवान् द्वारा परलोकबाट आफ्नी आमालाई उनको मरेका छोरा ल्याएर दिनु )—शुकदेवजी भन्दछन्—हे राजन ! एक दिनको कुरा हो वसुदेवले आफ्ना पुत्र बलराम र कृष्णले प्रणाम गरेपछि तिनलाई मनले आशीर्वाद दिएर केही भन्ने विचार गरे ॥ १ ॥ मुनिजनका मुखबाट आफ्ना छोराको प्रभाव वर्णित गर्ने *उपदेश सुनेर तथा तिनको पराक्रम देखेर वसुदेवलाई तिनको ईश्वरतामा विश्वास भइसकेको थियो । अतः तिनले राम-कृष्णलाई सम्बोधित गरेर विनयपूर्वक भने—॥२॥

* उपदेश ( परिस्थितमा विचार गर ) मनुष्य पापलाई जो पाप हो भन्ने थाहा पाउँदै पनि पाप गर्दछ भने त्यसले जो पाप गर्दछ त्यसको अनुपात हो—[illegible]

त्यसको आश्रय शब्द तथा नाद ( परा ), वर्ण ( पश्यन्ती ), ओङ्कार ( मध्यमा ) र वर्णहरूको विभाजन गर्ने ( वैखरी ) वाणी पनि हजुर नै हुनुहुन्छ ॥९॥ इन्द्रिय र त्यसका विषय-प्रकाशिनी शक्ति तथा तिनका अधिष्ठाता देवता हजुर नै हुनुपर्दछ । हजुर नै बुद्धिकी निश्चयात्मिका शक्ति र जीवको शुद्ध स्मृति हो ॥ १० ॥ प्राणिहरूको कारणरूप तामस अहङ्कार, उनका कारण राजस अहङ्कार, इन्द्रियमा अधिष्ठाता, देवतामा तिनका कारण स्वरूप सात्त्विक अहङ्कार र जीवको आवागमनको कारणरूपिणी माया पनि हजुर नै हुनुहुन्छ ॥ ११ ॥ जस्तै—मृत्तिका आदि द्रव्यका विकाररूप घट आदिमा मृत्तिका सधैं वर्तमान रहन्छ, त्यस्तै उपर्युक्त नश्वर पदार्थमा तिनका कारणरूपी अविनाशी तथा नित्यसत्य स्वरूपले हजुरनै सदा

त्विन्द्रियाणां त्वं देवश्च तदनुग्रहः ॥ अवबोधो भवान्बुद्धेर्जीवस्यानुस्मृतिः सती ॥ १० ॥ भूतानामसि भूतादिरिन्द्रियाणां च तैजसः ॥ वैकारिको विकल्पानां प्रधानमनुशायिनाम् ॥११॥नश्वरेष्विव भावेषु तदसि त्वमनश्वरम् ॥ यथा द्रव्यविकारेषु द्रव्यमात्रं निरूपितम् ॥१२॥ सत्त्वं रजस्तम इति गुणास्तद्वृत्तयश्च याः ॥ त्वय्यद्धा ब्रह्मणि परे कल्पिता योगमायया ॥१३॥ तस्मान्न सन्त्यमी भावा यर्हि त्वयि विकल्पिताः ॥ त्वं चामीषुविकारेषु ह्यन्यदव्यावहारिकः ॥ १४ ॥ गुणप्रवाह एतस्मिन्नबुधास्त्वखिलात्मनः ॥ गतिं सूक्ष्मामबोधेन संसरन्तीह कर्मभिः ॥ १५ ॥ यदृच्छया नृतां प्राप्य सुकल्पामिह दुर्लभाम् ॥ स्वार्थे प्रमत्तस्य वयो गतं त्वन्माययेश्वर ॥ १६ ॥ असावहं ममैवैते देहे चास्यान्वयादिषु ॥ स्नेहपाशैर्निबध्नाति भवान्म-

विद्यमान हुनुहुन्छ ॥१२॥ सत्त्व, रज, तम—यी तीनै गुण तथा तिनका वृत्ति एवं महत्तत्त्वादि हजुर परब्रह्ममा योगमायाद्वारा कल्पित छन् । १३॥ अतएव ती सबै भावविकार हजुरमा वास्तविक होइनन् । जब हजुरमा यिनको कल्पना हुन्छ, तब हजुरनै यी विकारमा कारणरूपले अनुगत प्रतीत हुनुहुन्छ । कालान्तरमा निर्विकल्प रूपले एकमात्र हजुर नै शेष रहनु हुन्छ ॥१४॥ यस गुण प्रवाहरूपी जगत्मा हजुर सर्वात्माका सूक्ष्म गतिलाई नजान्नाले अज्ञानी जन आफ्ना कर्मानुसार जन्म-मरणरूपी संसारमा गाडिन्छन् ॥१५॥ हे ईश्वर ! मलाई भाग्यवश

---

दाजु भाई कौरव र पाण्डवको उदाहरण उपस्थित गर्दछन् ! ( १७ ) अर्काको दोष र निन्दा गर्ने व्यक्ति प्रमाण दिन्छन्—बैकले रोग चिन्दैन र चिन्दैन पनि भनिदिदैन भने त्यो चिकित्सा बरोबार न्युन हुन्छ र रोगीको प्राण जान्छ । अरू भन्दछन्—यदि हामी अर्काको दोष नदेखौं एवं त्यसको विषयमा बताएर सावधान नपारौं तब कसरी तिनको नजाति बानी छुट्दछ र कसरी मानिस रहन दोषबाट बाँचिन्छन् । ( १८ ) वर्णाश्रमानुकूल कर्म, सन्ध्या वन्दनादि त्याग्ने व्यक्ति आफूलाई प्रेमी घोषित गरेर भन्दछन्—"सुन भाई ! यी सबै त उनको निमित्त हुन्, जसले प्रेमको सुख देखेका छैनन् । प्रेम राज्यमा तिनको के काम ! ती नारायण स्वामीको यो दोहा सुनाउँछन्—'तब लौं यह पाँती भली, बरनाश्रम व्रत नेम । नारायण जब लौं नहीं सुख दिखलावै प्रेम । धर्म-धैर्य संयम-नियम सोच विचार अनेक । नारायण प्रेमी निकट, इनमें रहे न एक । ( १९ ) कर्तव्य कर्मको त्याग गर्ने व्यक्ति आफूलाई ज्ञानी मानेर भगवान्का वचन सुनाउँछ—यस्त्वात्मरतिरेवस्यादात्मतृप्तश्च मानवः । आत्मन्येव च सन्तुष्टस्तस्य कार्यं न विद्यते । अर्थात् जसको आत्ममै तृप्ति छ र आत्मामै सन्तुष्ट छ, त्यसको निमित्त कुनै कर्तव्य कर्म छैन । ( २० ) आहार विहारमा पशुवत् व्यवहार गर्ने गीताका श्लोक सुनाउँछन्—विद्या विनय सम्पन्ने ब्राह्मणे गवि हस्तिनि । शुनि चैव श्वपाके च पण्डिताः समदर्शिनः ॥ विद्या विनय सम्पन्न ब्राह्मण, चाण्डाल, गाई, हात्ती, र कुकुर यी सबैमा ज्ञानी पुरुष समदर्शी हुन्छन् । यस्तै गरी अरू पनि अनेक थरिका उदाहरण दिन्छन्—नजाति वा नराम्रा कुराको समर्थन गर्नका लागि । वस्तुतः यो ती सद्विचार र सद्युक्तिहरूको भीषण दुरुपयोग र अनर्थ हो, जुन मूर्खता वा दम्भको आफ्नू दुर्बलता लुकाउनको निमित्त प्रयोग गरिन्छ । अतः आफ्नू हृदयलाई छामेर हेर्नुहोस्—त्यसमा लुकेको कुनै यस्तो दोष त छैन—जुन युक्तिवादले परिस्थितिको निहुँ पारेर तपाईंलाई अनर्थतिर । फेरि यो धर्मको कथा—केवल ब र भगवान्को पवित्र नाममा दिनुहुन्छ यो जीवनको परम कर्तव्य ठान्दछ, त्यसको निमित्त त भुला बाटो छ, त्यहाँ कुनै 'किन्तु-परन्तु' भन्ने स्थान नै छैन । जो त यस्तो कुनै पनि कर्म, कुनै पनि देखूने गर्दैन, जुन अधर्ममा गनिन्छ र भगवान्को पवित्र यथार्थ सहायले होस् ।

१२२५

इन्द्रियादिको सामर्थ्यले युक्त दुर्लभ मानव शरीर पाइयो, तर हजुरकी मायाको वशीभूत भएर आफ्नू मुख्य पदार्थबाट असावधान रहनाले आयुष्य व्यर्थ बितेर जान्छ ॥ १६ ॥ आफ्नू देहमा 'म हुँ' र देहका सम्बन्धीहरूमा 'यी मेरा हुन्' यस प्रकारका अभिमानरूपी स्नेहपाशले हजुरले सारा जगत्लाई बाँधिरहनुभएको छ ॥ १७ ॥ हजुर दुवै मेरा पुत्र होइनौं । यस सारा जगत्‌का कारण, प्रधान र पुरुषका पनि अधीश्वर हुनुहुन्छ । 'मैले पृथ्वीका भारस्वरूप राजाहरूलाई मार्नको निमित्त नै अवतार लिएको हुँ' यस्तो पहिल्यै भन्नुभएको छ ॥१८॥ हे दीनबन्धो ! अब म शरणागतलाई संसारको भयबाट मुक्त पार्ने हजुरका चरणको शरणमा छु । यो इन्द्रियलोलुपताबाट म अघाएँ । यसैले गर्दा मलाई यो मरणशील शरीरमा आत्मबुद्धि तथा हजुर परमात्मामा पुत्रबुद्धि उत्पन्न भएको थियो ॥ १९ ॥ अजन्मा भएर पनि हजुरले स्वरचित धर्मको रक्षाका लागि युग-युगमा हामीकहाँ अवतार लिनुभएको छ । यो कुरा सूतिकागृहमै भन्नुभएको थियो । हजुर आकाश झैं अनेक देह धारण गरेर त्यागिदिनु हुन्छ । हे उरुगाय ! हजुरकी विभूति स्वरूपिणी मायालाई कसले जान्न सक्छ ?' ॥ २० ॥

त्वमिदं जगत् ॥ १७ ॥ युवां न नः सुतौ साक्षात्प्रधानपुरुषेश्वरौ ॥ भूभारक्षत्रक्षपण अवतीर्णौ तथाऽऽत्थ ह ॥ १८ ॥ तत्ते गतोऽस्म्यरणमद्य पदारविन्दमापन्नसंसृतिभयापहमार्तबन्धो ॥ एतावताऽलमलमिन्द्रियलालसेन मर्त्यात्मदृक् त्वयि परे यदपत्यबुद्धिः ॥ १९ ॥ सूतीगृहे ननु जगाद भवानजो नौ संजज्ञ इत्यनुयुगं निजधर्मगुप्त्यै ॥ नानातनूर्गगनवद्विदधज्जहासि को वेद भूम्न उरुगायविभूतिमायाम् ॥ २० ॥ श्रीशुक उवाच ॥ आकर्ण्येत्थं पितुर्वाक्यं भगवान्सात्वतर्षभः ॥ प्रत्याह प्रश्रयानम्रः प्रहसन्श्लक्ष्णया गिरा ॥ २१ ॥ श्रीभगवानुवाच ॥ वचो वः समवेतार्थं तातैतदुपमन्महे ॥ यन्नः पुत्रान्समुद्दिश्य तत्त्वग्राम उदाहृतः ॥ २२ ॥ अहं यूयमसावार्य इमे च द्वारकौकसः ॥ सर्वेऽप्येवं यदुश्रेष्ठ विमृश्याः सचराचरम् ॥ २३ ॥ आत्मा ह्येकः स्वयंज्योतिर्नित्योऽन्यो निर्गुणो गुणैः ॥ आत्मसृष्टैस्तत्कृतेषु भूतेषु बहुधेयते ॥ २४ ॥ खं वायुर्ज्योतिरापो भूस्तत्कृतेषु यथाशयम् ॥ आविस्तिरोऽल्पभूर्येको नानात्वं यात्यसावपि ॥ २५ ॥ श्रीशुक उवाच ॥ एवं भगवता राजन्वसुदेव उदाहृतः ॥ श्रुत्वा विनष्टनानाधीस्तूष्णीं प्रीतमना अभूत् ॥ २६ ॥ अथ तत्र कुरुश्रेष्ठ देवकी सर्वदेवता ॥ श्रुत्वाऽऽनीतं गुरोः पुत्रमात्मजाभ्यां सुविस्मिता ॥ २७ ॥ कृष्णरामौ

श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! आफ्ना पिताको वचन सुनेर यदुश्रेष्ठ श्रीकृष्णले नम्रता पूर्वक हाँस्तै मधुरवाणीमा भन्नुभयो ॥ २१ ॥ श्रीभगवान भन्नुहुन्छ—हे पिताजी ! हजुरले हामी छोरालाई जे तत्त्वोपदेश दिनुभयो, यो हामीलाई हजुरको भनाई, युक्तिसंगत लाग्दैछ ॥ २२ ॥ हे यदुश्रेष्ठ ! म, हजुर बलरामजी र सबै द्वारका निवासी समेत सबै चराचर जीव भगवत्स्वरूप नै हुन्—यस्तो जान्नोस् ॥ २३ ॥ जस्तै—वायु, आकाश, जल, अग्नि र पृथिवी—यी पञ्चमहाभूत आफ्ना कार्य हाटादिमा सानू-ठूलो, एक र अनेक जस्तै प्रतीत हुन्छन, त्यस्तै नै स्वयं प्रकाश, नित्य र निर्गुण आत्मा पनि स्वरचित महतत्वादि गुण द्वारा तिनको कार्यरूप मनुष्यादि शरीरमा एक भए पनि अनेक र अनेकवत् भासमान हुन्छ ॥ २४ ॥ २५ ॥ श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! भगवान्‌ले यति भनेपछि उनले बताएका एकताको निरूपण सुन्नाले भेदबुद्धि नष्ट भयो र वसुदेवजी अतिशय प्रसन्न भई मौन भए ॥ २६ ॥ हे कुरुश्रेष्ठ ! एक दिन सर्वदेवमयी देवकीलाई यो सुनेर विस्मय भयो—मेरा पुत्र कृष्ण-बलराम आफ्ना गुरु सान्दीपनिका मरेका पुत्रलाई परलोकबाट ल्याएका

थिए ॥ २७ ॥ अतः ती कंसका हातबाट मारिएका आफ्ना छोराहरूको स्मरण गरेर चिन्तित भइन् र अत्यन्त विह्वल भावले आँखामा आँशु भरेर राम-कृष्ण दुवैलाई सम्बोधन गरेर भनिन् ॥ २८ ॥ देवकी भन्दछिन्—हे राम ! हे अप्रमेयात्मन् ! हे योगेश्वर ! हे राम ! हे कृष्ण ! म जान्दछु तिमी प्रजापतिहरूका पति र आदिपुरुष साक्षात् नारायण हौ ॥ २९ ॥ कालक्रमले जुन राजाहरूका पुरुषार्थ क्षीण भएका छ, जो शास्त्र-मार्गको उल्लंघन गरेर हिंड्दछन् र जो भूमिको निम्ति भारस्वरूप छन्, ती राजाको नाश गर्न तिमी दुवै मेरो गर्भबाट उत्पन्न भएका छौ ॥ ३० ॥ हे विश्वात्मन् ! हे आद्य ! तिमी मायारूपी अंशांशले उत्पन्न गुणको लेश मात्रले जगत्को उत्पत्ति र लयादि हुन्छन् । म तिम्रो शरणमा छु ॥ ३१ ॥ मैले सुनेकी छु—तिम्रा गुरु सान्दीपनिले जब तिमीसित आफ्ना धेरै पहिले मरेका छोरा ल्याउन भने तब तिमी दुवैले गुरुदक्षिणास्वरूप त्यस बालकलाई यमराज कहाँबाट ल्याएर दिएका थियौ ॥ ३२ ॥ हे योगेश्वर ! गुरुजीको जस्तै तिमी मेरो इच्छा पनि पूर्ण पार । म पापी कंसद्वारा मारिएका आफ्ना पुत्रहरूलाई देख्न चाहन्छु तिमी उनलाई

समाश्राव्य पुत्रान्कंसविहिंसितान् ॥ स्मरन्ती कृपणं प्राह वैक्लव्यादश्रुलोचना ॥ २८ ॥ देवक्युवाच ॥ राम रामाप्रमेयात्मन्कृष्ण योगेश्वरेश्वर ॥ वेदाहं वां विश्वसृजामीश्वरावादिपूरुषौ ॥ २९ ॥ कालविध्वस्तसत्त्वानां राज्ञामुच्छास्त्रवर्तिनाम् ॥ भूमेर्भारायमाणानामवतीर्णौ किलाद्य मे ॥ ३० ॥ यस्यांशांशभागेन विश्वोत्पत्तिलयोदयाः ॥ भवन्ति किल विश्वात्मंस्तं त्वाद्याहं गतिं गता ॥ ३१ ॥ चिरान्मृतसुतादाने गुरुणा किल चोदितौ ॥ आनिन्यथुः पितृस्थानाद्गुरवे गुरुदक्षिणाम् ॥ ३२ ॥ तथा मे कुरुतं कामं युवां योगेश्वरेश्वरौ ॥ भोजराजहतान्पुत्रान्कामये द्रष्टुमाहृतान् ॥३३॥ ऋषिरुवाच ॥ एवं सञ्चोदितौ मात्रा रामः कृष्णश्च भारत ॥ सुतलं संविविशतुर्योगमायामुपाश्रितौ ॥ ३४ ॥ तस्मिन्प्रविष्टावुपलभ्य दैत्यराड् विश्वात्मदैवं सुतरां तथात्मनः ॥ तद्दर्शनाह्लादपरिप्लुताशयः सद्यः समुत्थाय ननाम सान्वयः ॥ ३५ ॥ तयोः समानीय वरासनं मुदा निविष्ट-योस्तत्र महात्मनोस्तयोः ॥ दधार पादाववनिज्य तज्जलं सवृन्द आब्रह्म पुनद्यदम्बु ह ॥ ३६ ॥ समर्हयामास स तौ विभूतिभिर्महार्हवस्त्रा-भरणानुलेपनैः ॥ ताम्बूलदीपामृतभक्षणादिभिः स्वगोत्रवित्तात्मसमर्पणेन च ॥ ३७ ॥ स इन्द्रसेनो भगवत्पदाम्बुजं बिभ्रन्मुहुः प्रेमविभिन्नया धिया ॥ उवाच हानन्दजलाकुलेक्षणः प्रहृष्टरोमा नृप गद्गदाक्षरम् ॥ ३८ ॥ बलिरुवाच ॥ नमोऽनन्ताय बृहते नमः कृष्णाय वेधसे ॥ सांख्य-

ल्याऊ ॥ ३३ ॥ श्री शुकदेव भन्दछन्—हे भारत ! यस प्रकार आमाले भनेपछि भगवान् राम र कृष्ण योगमायाको आश्रय लिएर सुतललोकमा गए ॥ ३४ ॥ जगत्का आत्मा परमदेव तथा आफ्ना इष्टदेव ती बलराम र कृष्णलाई सुतललोकमा आएका देखेर दैत्यराज बलिले उनका दर्शनले आनन्दमा निमग्न भएर तत्काल आफ्ना कुटुम्बसहित सरर उठी प्रणाम गरे ॥ ३५ ॥ अनि प्रसन्न चित्तले उनलाई उत्तम आसन दिए र जब महात्मा बलराम र कृष्ण सुखपूर्वक बसे तब तिनका चरण पखालेर ब्रह्मालाई समेत पवित्र पार्ने त्यो चरणोदक कुटुम्ब सहित शिरमा लगाए ॥ ३६ ॥ बहुमूल्य वस्त्र, आभूषण, चन्दन, ताम्बूल, धूप-दीप र अमृत समान भोजन आदि सामग्रीले तथा आफ्ना पुत्र-पौत्र, धन र शरीरादिसमेत अर्पण गरेर बलिले उनको पूजन गरे ॥ ३७ ॥ हे राजन् ! राजा बलिले भगवान्‌का चरण-कमललाई प्रेमाकुल चित्तले समाते । उस बेला तिनका नेत्रमा आनन्दाश्रु उर्लेर आए र ती शरीरले

1226

पुलकित भएर गद्गद वाणीमा बोले ॥३८॥ बलिले भने–समस्त विश्वलाई आफ्ना फणामा धारण गर्ने बृहत्काय भगवान् अनन्त र निखिल विश्वका रचयिता श्रीकृष्णचन्द्रलाई नमस्कार छ। कपिलरूपले सांख्य र पतञ्जलि रूपले योग शास्त्रको विस्तार गर्ने हजुर ब्रह्मस्वरूप परमात्मालाई नमस्कार छ ॥३९॥ सबै जीवलाई हजुरको दर्शन दुर्लभ छ तापनि यदि हजुरको कृपा भयो भने त्यो पनि सुलभ हुन्छ, अतः कृपा गरेर नै आज हजुरले आफ्नू स्वेच्छाले मजस्तो रजोगुणी तथा तमोगुणविशिष्ट व्यक्तिलाई दर्शन बक्सियो ॥४०॥ हामी तथा हामी जस्तै अन्य दैत्य, दानव गन्धर्व, सिद्ध, विद्याधर, यक्ष, राक्षस, भूत, पिशाच र प्रमथगण आदि विशुद्ध सत्वस्वरूप हजुर देवमूर्तिमित नित्य वैरत्व राख्नु हुन्छ। तिनीमध्ये केही व्यक्ति शत्रुताले, कैयौं भक्तिले र अनेकानेक थरि-थरिका कामनाले ती परम पदमा प्राप्त भएका छन्, जसलाई हजुरका समीपस्थ सत्वप्रधान देवता पनि पाउन सक्तैनन्॥४१-४३॥ हे योगेश्वर! हजुरकी योगमाया यही र इनै हुन्, यस विषयमा ठूला-ठूला योगेश्वर पनि जान्दैनन् भने मेरो गणना नै के छ? ॥ ४४ ॥ हे नाथ! अब हजुर यस्तो कृपा गर्नोस्

योगवितानाय ब्रह्मणे परमात्मने ॥ ३९ ॥ दर्शनं त्वां हि भूतानां दुष्प्रापं चाप्यदुर्लभम् ॥ रजस्तमःस्वभावानां यन्नः प्राप्तौ यदृच्छया ॥ ४० ॥ दैत्यदानवगन्धर्वाः सिद्धविद्याध्रचारणाः ॥ यक्षरक्षःपिशाचाश्च भूतप्रमथनायकाः ॥ ४१ ॥ विशुद्धसत्त्वधाम्न्यद्धा त्वयि शास्त्रशरीरिणि ॥ नित्यं निबद्धवैरास्ते वयं चान्ये च तादृशाः ॥ ४२ ॥ केचनोद्बद्धवैरेण भक्त्या केचन कामतः ॥ न तथा सत्त्वसंरब्धाः सन्निकृष्टाः सुरादयः ॥ ४३ ॥ इदमित्थमिति प्रायस्तव योगेश्वरेश्वर ॥ न विदन्त्यपि योगेशा योगमायां कुतो वयम् ॥ ४४ ॥ तन्नः प्रसीद निरपेक्षविमृग्ययुष्मत्पादारविन्द-धिषणान्यगृहान्धकूपात् ॥ निष्क्रम्य विश्वशरणांघ्र्युपलब्धवृत्तिः शान्तो यथैक उत सर्वसखैश्चरामि ॥ ४५ ॥ शाध्यस्मानीशितव्येश निष्पापान्कुरु नः प्रभो ॥ पुमान्यच्छ्रद्धया तिष्ठँश्चोदनाया विमुच्यते ॥ ४६ ॥ श्रीभगवानुवाच ॥ आसन्मरीचेः षट् पुत्रा ऊर्णायां प्रथमेऽन्तरे ॥ देवाः कं जहसुर्वीक्ष्य सुतां यभितुमुद्यतम् ॥ ४७ ॥ तेनासुरीमगन्योनिमधुनाऽवद्यकर्मणा ॥ हिरण्यकशिपोर्जाता नीतास्ते योगमायया ॥ ४८ ॥ देवक्या उदरे जाता राजन्कंसविहिंसिताः ॥ तांश्छोचत्यात्मजान्स्वाँस्त इमेऽध्यासयतेऽन्तिके ॥ ४९ ॥ इत एतान्प्रणेष्यामो मातृशोकापनुत्तये ॥ ततः शापाद्वि-

जसले निरपेक्ष पुरुषहरूले खोज्ने योग्य हजुरका चरणकमलरूपी आश्रय लिएर गृहरूपी अन्धकूपबाट निस्केर जगत्‌का एकमात्र आश्रय हजुरका चरण-कमलमा अनुरक्त भई म शान्त-भावले एक्लै तथा सबैको सखा साधुजनसित स्वेच्छानुसार डुलौं ॥ ४५ ॥ हे जीवका ईश! हे प्रभो! हजुरले भनेका जुन सदाचारको श्रद्धापूर्वक अवलम्बन गर्नाले पुरुष विधिनिषेध-रूपी बन्धनबाट मुक्त भएर जान्छ, आफ्नू यो आदेश कृपया मलाई पनि आज्ञा हवस् र मलाई निष्पाप तुल्याउनोस् ॥४६॥ भगवान् आज्ञा हुन्छ–प्रथम स्वायम्भुव मन्वन्तरमा मरीचि प्रजापतिकी ऊर्णा नामकी स्त्रीबाट छ पुत्र जन्मेका थिए। ती देवता हीं तेजस्वी ऋषिपुत्र प्रजापति ब्रह्माद्वारा आफ्नी कन्यासित संगम गर्न उद्यत देखेर हाँस्नलागे ॥४७॥ त्यस दुष्कर्मले ब्रह्माजीले तिनलाई श्राप दिए, जसले ती बालक दैत्ययोनिमा प्राप्त भए। पहिले ती हिरण्यकशिपुकहाँ उत्पन्न भए, फेरि योगमायाको प्रेरणाले तिनले देवकीको उदरबाट जन्म लिए। हे राजन्! त्यहाँ ती कंसको हातबाट मारिए। माता देवकी ती बालकको निम्ति शोकाकुल छन् र ती बालक यस बखत तिमीकहाँ छन् ॥४ ॥४९॥ हामी आमाको शोक निवारण

गर्न तिनलाई यहाँबाट कहिलें लैजान्छौं पछि ती श्रापमुक्त भएर सुखपूर्वक फेरि आफ्नू लोकमा जानेछन् ॥ ५० ॥ मेरो कृपाले स्मर, उद्‌गीथ, परिष्वङ्ग, पतङ्ग, क्षुद्रभृत् र घृणी यी ६ बालक फेरि सद्‌गति प्राप्त गर्नेछन् ॥५१॥ यसरी भनेर ती बालकहरू लिई राम र कृष्ण बलिद्वारा पूजित भई द्वारकापुरी फर्केर आए र माता देवकीलाई ती पुत्र सुम्पिदिए ॥५२॥ तिनलाई देखेर पुत्रस्नेहवश देवकीका स्तनमा दूध उर्लेर आयो र तिनलाई छातीमा टाँसी काखमा लिई ती बारम्बार तिनको शिर सुँघ्न लागिन् ॥ ५३ ॥ फेरि जसद्वारा सारा सृष्टि चल्दछ, त्यस वैष्णवी मायाले मोहित भएर पुत्रहरूको स्पर्शले आनन्दित देवकीले तिनलाई प्रेमपूर्वक स्तनपान गराइन् ।.५४॥ श्रीकृष्णले पिएर रहेको त्यो अमृततुल्य दूध र भगवानको सम्पर्कले आफ्नू देवता भएको ज्ञान पाएर ती गोविन्द, देवकीजी, वसुदेवजी र बलभद्रलाई नमस्कार गरेर सबैले देख्तादेख्तै देवलोक जाँदा भए ॥ ५५ ॥ ॥ ५६ ॥ हे राजन् ! आफ्ना छोराहरूको आगमन देखेर देवकीलाई ठूलो विस्मय भयो र उनले त्यसलाई भगवान् कृष्णद्वारा रचित अलौकिक माया ठानिन् ॥५७॥ हे भारत ! अनन्त बलशाली

निर्मुक्ता लोकं यास्यन्ति विज्वराः ॥ ५० ॥ स्मरोद्‌गीथः हरिष्वङ्गः पतङ्गः क्षुद्रभृद्‌घृणी ॥ षडिमे मत्प्रसादेन पुनर्यास्यन्ति सद्‌गतिम् ॥ ५१ ॥ इत्युक्त्वा तान्समादाय इन्द्रसेनेन पूजितौ ॥ पुनर्द्वारवतीमेत्य मातुः पुत्रानयच्छताम् ॥ ५२ ॥ तान्दृष्ट्वा बालकान्देवी पुत्रस्नेहस्नुतस्तनी ॥ परिष्वज्याङ्कमारोप्य मूर्ध्न्यजिघ्रदभीक्ष्णशः ॥५३॥ अपाययत्स्तनं प्रीता सुतस्पर्शपरिप्लुता ॥ मोहिता मायया विष्णोर्यया सृष्टिः प्रवर्तते ॥५४॥ पीत्वाऽमृतं पयस्तस्याः पीतशेषं गदाभृतः ॥ नारायणाङ्गसंस्पर्शप्रतिलब्धात्मदर्शनाः ॥५५। ते नमस्कृत्य गोविन्दं देवकीं पितरं बलम् ॥ मिषतां सर्वभूतानां ययुर्धाम दिवौकसाम् ॥ ५६ ॥ तं दृष्ट्वा देवकी देवी मृतागमननिर्गमम् ॥ मनःसु विस्मिता मायां कृष्णस्य रचितां नृप ॥ ५७ ॥ एवं विधान्यद्‌भुतानि कृष्णस्य परमात्मनः ॥ वीर्याण्यनन्तवीर्यस्य सन्त्यनन्तानि भारत ॥ ५८ ॥ सूत उवाच ॥ य इदमनुशृणोति श्रावयेद्वा मुरारेश्चरितममृतकीर्तेर्वर्णितं व्यासपुत्रैः ॥ जगदघभिदलं तद्भक्तसत्कर्णपूरं भगवति कृतचित्तो याति तत्क्षेमधाम ॥ ५९ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे मृताग्रजानयनं नाम पञ्चाशीतितमोऽध्यायः ॥ ८५ ॥

राजोवाच ॥ ब्रह्मन्वेदितुमिच्छामः स्वसारं रामकृष्णयोः ॥ यथोपयेमे विजयो या ममासीत्पितामही ॥ १ ॥ श्रीशुक उवाच ॥ अर्जुनस्तीर्थया-

परमात्मा कृष्णका यस्तै अद्भुत र अगणित चरित्र छन् ॥ ५८ ॥ सूतजी भन्दछन्—जो प्राणी व्यासतनय भगवान् शुकदेव द्वारा वर्णित तथा संसारका पापलाई नष्ट पार्ने र भगवद्भक्तका कर्णपुटलाई आनन्दित पार्ने अमर कीर्ति भगवान् कृष्णको यस अद्भुत चरित्रलाई बारम्बार सुन्दछ अथवा भन्दछ, त्यो अन्त्य समय भगवान्मा चित्त लगाएर तिनको कल्याणमय परमधाममा पुग्दछ ॥५९॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पं० गौरीशंकर कृत 'वाल्मिष्ठी' भाषाटीकायां पञ्चाशीतितमोऽध्यायः ॥८५॥

( अर्जुन द्वारा सुभद्रा हरण र श्रीकृष्ण मिथिला पुरीमा गई राजा जनक र श्रुतदेवसित भेट्नु )—यति कथा सुनेर परीक्षितले सोधे—हे ब्रह्मन् ! राम-कृष्णकी बहिनी तथा मेरी पितामही सुभद्रा सित विजयले कसरी विवाह गरे ? यो प्रसङ्ग जान्ने इच्छा गर्दछु ॥१ शुकदेव भन्नुहुन्छ—हे राजन् ! एकपल्ट शत्रुको दमन गर्नमा समर्थ महावीर पार्थ तीर्थयात्राको

डुल्दै प्रभास क्षेत्रमा पुगे । त्यहाँ पुगेपछि उनले सुने—मेरो मामाकी पुत्री सुभद्रालाई बलराम दुर्योधनलाई दिने इच्छा गर्दैछन् तर अरु सबै जना यसमा सहमत छैनन् । उसै बेला सुभद्रालाई प्राप्त गर्ने इच्छाले त्रिदण्डी संन्यासीको रूप धारण गरेर अर्जुन द्वारकापुरी पुगे ॥२॥३॥ आफ्नु प्रयोजन सिद्ध पार्न ती चार महीनासम्म त्यहीं बसे । पुरवासीहरू र तिनले बसेको मर्म थाहा नपाउने बलरामले तिनको निकै सम्मान गरे ॥४॥ एक दिन बलरामले उनलाई भोजनको निम्ता दिए र आफ्नै घर ल्याई श्रद्धाले भिक्षान्न पस्के र दण्डीरूपधारी अर्जुनले भोजन गरे ॥५॥ त्यहाँ उनले वीर पुरुषको पनि मन हरण गर्ने यौटी तरुणी कन्या देखेर उनका नेत्र प्रसन्नताले प्रफुल्लित भए र उनले प्रेमभावले क्षुब्ध आफ्नु चित्त उनैमा लगाइदिए ॥६॥ ती कन्याले पनि कामिनीहरूका चित्त चोर्ने वीरवर अर्जुनलाई देखेर उनैलाई आफ्नु पति तुल्याउने इच्छा गरिन् । आफ्ना नेत्र र चित्त उनैमा लगाएर सलज्ज कटाक्ष विक्षेप सहित हाँस्तै ती उनैतिर हेर्न लागिन् ॥७॥ अनि मन-मनै उनकै चिन्तन गर्दै पार्थ तिनलाई हरेर लैजाने मौका खोज्न लागे । त्यस बेला महाबली कामको वेगले तिनको चित्त

त्रायां पर्यटन्नवनीं प्रभुः ॥ गतः प्रभासमशृणोन्मातुलेयीं स आत्मनः॥२॥ दुर्योधनाय रामस्तां दास्यतीति न चापरे ॥ तल्लिप्सुः स यतिर्भूत्वा त्रिदण्डी द्वारकामगात् ॥३॥ तत्र वै वार्षिकान्मासानवात्सीत्स्वार्थसाधकः ॥ पौरैः सभाजितोऽभीक्ष्णं रामेणाजानता च सः ॥४॥ एकदा गृहमानीय आतिथ्येन निमन्त्र्य तम् ॥ श्रद्धयोपाहृतं भैक्ष्यं बलेन बुभुजे किल ॥५॥ सोऽपश्यत्तत्र महतीं कन्यां वीरमनोहराम् ॥ प्रीत्युत्फुल्लेक्षणस्तस्यां भावक्षुब्धं मनो दधे ॥६॥ सापि तं चकमे वीक्ष्य नारीणां हृदयङ्गमम् ॥ हसन्तीं व्रीडितापाङ्गी तन्न्यस्तहृदयेक्षणा ॥७॥ तां परं समनुध्यायन्नन्तरं प्रेप्सुरर्जुनः ॥ न लेभे शं भ्रमच्चित्तः कामेनातिबलीयसा ॥ ८ ॥ महत्यां देवयात्रायां रथस्थां दुर्गनिर्गताम् ॥ जहारानुमतः पित्रोः कृष्णस्य च महारथः ॥९॥ रथस्थो धनुरादाय शूरांश्चारुन्धतो भटान् ॥ विद्राव्य क्रोशतां स्वानां स्वभागं मृगराडिव ॥१०॥ तच्छ्रुत्वा क्षुभितो रामः पर्वणीव महार्णवः ॥ गृहीतपादः कृष्णेन सुहृद्भिश्चान्वशाम्यत ॥ ११ ॥ प्राहिणोत्पारिबर्हाणि वरवध्वोर्मुदा बलः ॥ महाधनोपस्करेभरथाश्वनरयोषितः ॥ १२ ॥ श्रीशुक उवाच ॥ कृष्णस्यासीद् द्विजश्रेष्ठ श्रुतदेव इति श्रुतः ॥ कृष्णैकभक्त्या पूर्णार्थः शान्तः कविरलम्पटः ॥ १३ ॥ स उवास विदेहेषु मिथिलायां गृहाश्रमी ॥ अनीहया

भ्रान्त भयो र बलरामको उचित सत्कारले पनि तिनलाई शान्ति मिलेन ॥८॥ एक दिन जब ती राजकुमारी देवयात्रा-महोत्सव हेर्न रथमा बसेर दुर्गबाट बाहिर निस्किन् तब तिनका माता-पिता र श्रीकृष्णको अनुमतिले महारथी किरीटिले सुभद्रालाई हरेर लगे ॥९॥ अति शूरवीर सैनिक छेक्न आए, सबैलाई रथारूढ धनञ्जयले आफ्नु गाण्डीव धनुष देखाई भगाइदिए । सबै जनाले रुनु-कराउनु गर्दा पनि उनलाई त्यसै गरी हरेर लगे जसरी सिंह आफ्नु भाग हरेर लैजान्छ ॥१०॥ यो समचार सुनेर बलराम पूर्णिमामा उर्लने समुद्र झैं क्षुब्ध भए, तर श्रीकृष्ण तथा अन्य सुहृद्गणले पाउ समातेर शान्तिले बुझाएपछि बल्ल-बल्ल शान्त भए ॥११॥ अनि बलराम प्रसन्न भएर वर-वधूका निम्ति धन, सामग्री, घोडा, रथ, दास-दासीहरू दाइजोमा दिए ॥१२॥ श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! श्रुतदेव नामका यौटा श्रेष्ठ ब्राह्मण भगवान् कृष्णका भक्त थिए । श्रीकृष्णको भक्तिले ती पूर्णकाम, शान्त, विषयको आशाले

रहित र आसक्ति हीन थिए ॥ १३ ॥ ती विदेह जनकको मिथिलापुरीमा बस्तथे। गृहस्थ भएर पनि उद्योग नगरेरै जो मिल्दथ्यो उसैमा आफ्नू जीवन यापन गर्दथे ॥ १४ ॥ भाग्यवश तिनलाई दिनहुँ शरीरयात्रा गर्ने जति नै धन मिल्दथ्यो त्यो मन्दा बर्ताहोइन। ती त्यतिमै सन्तुष्ट रहन्थे ॥ १५ ॥ हे तात ! उनै जस्ता भक्त त्यस देशका राजा बहुलाश्व पनि थिए। मैथिल वंशमा उत्पन्न ती अहङ्कार हीन राजा थिए। ती दुवै श्रीकृष्ण भगवान्का प्रिय भक्त थिए। एक पल्ट दुवै माथि भगवान् श्रीहरि प्रसन्न भए र दारुक सारथी द्वारा ल्याइएको रथमा बसेर अनेक मुनिजनका साथै विदेह देश गए ॥ १६ ॥ १७ ॥विज्ञ ऋषिहरूमा नारद, वामदेव, अत्रि, वेदव्यास, परशुराम, असित, आरुण, म अर्थात् शुकदेव, बृहस्पति, कण्व, मैत्रेय र च्यवन आदि थिए ॥ १८ ॥ हे राजन् ! बाटोमा ती जहाँ जहाँ पुग्दथे, त्यहींका नागरिक हातमा पूजाको सामग्री लिई यसरी उपस्थित हुन्थे जस्तै

गताहार्यनिर्वर्तितनिजक्रियः ॥ १४ ॥ यात्रामात्रं त्वहरहर्दैवादुपनमत्युत ॥ नाधिकं तावता तुष्टः क्रियाश्चक्रे यथोचिताः ॥ १५ ॥ तथा तद्राष्ट्रपालोऽङ्ग बहुलाश्व इति श्रुतः मैथिलो निरहम्मान उभावप्यच्युतप्रियौ ॥ १६ ॥ तयोः प्रसन्नो भगवान्दारुकेणाहृतं रथम् ॥ आरुह्य साकं मुनिभिर्विदेहान्प्रययौ प्रभुः ॥ १७ ॥ नारदो वामदेवोऽत्रिः कृष्णो रामोऽसितोऽरुणिः ॥ अहं बृहस्पतिः कण्वो मैत्रेयश्च्यवनादयः ॥१८॥ तत्र तत्र तमायान्तं पौरा जानपदा नृप ॥ उपतस्थुः सार्घहस्ता ग्रहैः सूर्यमिवोदितम् ॥ १९ ॥ आनर्तधन्वकुरुजाङ्गलकङ्कमत्स्यपाञ्चालकुन्तिमधुकेकयकोसलार्णाः ॥ अन्ये च तन्मुखसरोजमुदारहासस्निग्धेक्षणं नृप पपुर्दृशिभिर्नृनार्यः ॥ २० ॥ तेभ्यः स्ववीक्षणविनष्टतमिस्रदृग्भ्यः क्षेमं त्रिलोकगुरुरर्थदृशं च यच्छन् ॥ शृण्वन्दिगन्तधवलं स्वयशोऽशुभघ्नं गीतं सुरैर्नृभिरगाच्छनकैर्विदेहान् ॥ २१ ॥ तेऽच्युतं प्राप्तमाकर्ण्य पौरा जानपदा नृप ॥ अभीयुर्मुदितास्तस्मै गृहीतार्हणपाणयः ॥ २२ ॥ दृष्ट्वा त उत्तमश्लोकं प्रीत्युत्फुल्लाननाशयाः ॥ कैर्धृताञ्जलिभिर्नेमुः श्रुतपूर्वांस्तथा मुनीन् ॥ २३ ॥ स्वानुग्रहाय सम्प्राप्तं मन्वानौ तं जगद्गुरुम् ॥ मैथिलः श्रुतदेवश्च पादयोः पेततुः प्रभोः ॥ २४ ॥ न्यमन्त्रयेतां दाशार्हमातिथ्येन

कोसल तथा अर्ण आदि अन्य देशका पनि नर-नारी आफ्ना नेत्रले उनको उदार हास्य एवं मनोहर सौन्दर्ययुक्त मुख कमलको शोभा पान गरे ॥ २० । उनको दर्शनले जन-जनका अज्ञान-दृष्टि नष्ट भएका थिए, ती सबैलाई आफ्नू कृपादृष्टिले अभयदान तथा तत्वज्ञान दिंदै त्रिलोक-वन्दनीय भगवान् श्रीकृष्ण बाटोमा देवता र मनुष्यहरू द्वारा गाइएको, दिशाहरूलाई प्रकाशित पार्ने आफ्नू पापनाशक सुयश सुन्दै विस्तार-विस्तार विदेहदेशमा पुगे ॥ २१ ॥ हे राजन् ! भगवान् कृष्णचन्द्रको आगमन सुनेर त्यहाँका सबै पुरवासी तथा देशवासी आफ्ना हातमा पूजा-सामग्री लिई प्रसन्नताले उनको सामु आए ॥ २२ ॥ पुण्यकीर्ति भगवान श्रीकृष्णचन्द्र तथा जसको विषयमा पहिल्यै सुनिसकेका थिए ती नारदादि मुनीश्वरलाई सबैले प्रसन्न मन तथा हर्षित हृदयले शिरमा दुवै हात लगी अभिवादन गरे। अखिल विश्वका गुरु भगवान् श्रीकृष्णलाई आफूमाथि अनुग्रह गर्न आएका भन्ने जानेर मिथिला-नरेश बहुलाश्व र श्रुतदेव ब्राह्मण दुवै भएर प्रभुका चरणमा लुटुपुटिए ॥ २३ ॥ २४ ॥ महाराज बहुलाश्व तथा श्रुतदेव दुवैले मुनीश्वर समेत भगवान् श्रीकृष्णचन्द्रलाई आतिथ्य

1230

ग्रहण गर्नको लागि हात जोरेर साथै निमन्त्रित गरे ॥ २५ ॥ भगवान्‌ले ती दुवैको प्रार्थना स्वीकार गरेर दुवैको प्रिय गर्नका लागि, ती दुवैले थाहै नपाई—अर्थात् प्रभु अन्यको घर पनि गइरहेका छन् भन्ने नजानी मुनिगण समेत दुइ रूप धारण गरेर ती दुवैका घर गए ॥ २६ ॥ बढेको भक्ति र हृदयोल्लासले गर्दा नेत्रमा जल भरेर महाराज जनकले दुराचारी पुरुषले जसको नाम सुन्न पनि कठिन थियो, आफ्नू घर आएका ती भगवान् कृष्ण र मुनीश्वरहरू सुखपूर्वक राम्रा आसनमा बसिसकेपछि आफ्ना कुटुम्बसहित राजाले

सह द्विजैः ॥ मैथिलः श्रुतदेवश्च युगपत्संहताञ्जली ॥ २५ ॥ भगवांस्तदभिप्रेत्य द्वयोः प्रियचिकीर्षया ॥ उभयोराविशद्गेहमुभाभ्यां तदलक्षितः ॥ २६ ॥ श्रोतुमप्यसतां दूराञ्जनकः स्वगृहागतान् ॥ आनीतेष्वासनाग्र्येषु सुखासीनान्महामनाः ॥ २७ ॥ प्रवृद्धभक्त्या उद्धर्षहृदयास्राविलेक्षणः ॥ नत्वा तदङ्घ्रीन्प्रक्षाल्य तदपो लोकपावनीः ॥ २८ ॥ सकुटुम्बोऽवहन्मूर्ध्ना पूजयाञ्चक्र ईश्वरान् ॥ गन्धमाल्याम्बराकल्पधूपदीपार्घ्यगोवृषैः ॥ २९ ॥

प्रणाम गरे। उनका पाउ धोएर चरणोदक शिरमा चढाए, अनि ती सबैको चन्दन, माला, वस्त्र, अलङ्कार, धूप-दीप, अर्घ्य, गाई तथा गोरू आदि अर्पण गरेर राम्ररी पूजा गरे ॥ २७॥२८ ॥ अन्नादिले तृप्त ती ब्राह्मणहरूलाई मीठो वाणीले तृप्त पारेर आफ्नू काखमा राखेका भगवान कृष्णका चरण कमललाई* विस्तार-विस्तार मिच्दै राजा बहुलाश्वले

---

* दृष्टान्त ( [illegible] ) :—दक्षिण भारतको यौटा सानू गामको यौटा सानै कोठामा अण्डीको तेलको बत्ती जलिरहेछ। कोठाको कच्चा आँगन र माटोको भित्ता गोबरले पोतेको स्वच्छ र राम्रो देखिइरहेछ। एक कुनामा [illegible] माटो छ, अर्कोतिर पानीको गाग्रो राखेको छ। अर्को कुनामा यौटा काँती, माटोका केही भाँडा र यौटा सानु खाट छ। बत्तीको नजीकै कुशासनमा यौटा पण्डितजी बसेका छन्। नजीकै माटोको मसिपात्र छ र हातमा कलम लिएर केही लेखिरहेका छन्। वरपर केही पुस्तक छन्। नजीकै पुस्तकहरू बाँध्ने बेठन छ। पण्डितजी ठूलो एकाग्रताले लेखिरहेछन्। बीच-बीचमा वरपर राखिएका पुस्तकमा पल्टाइ-पल्टाइ हेर्दछन् र त्यसलाई [illegible] [illegible]। एकछिनसम्म गहीरो विचार गरेपछि फेरि लेख्न थाल्दछन्। त्यतिनै बत्तीको तेल सकिएर बत्तीमा फूल जम्यो र प्रकाश मन्द भयो। उसैबेला यौटी प्रौढा स्त्री आएर बत्तीमा तेल थपेर फूल झारिदिन [illegible] [illegible] बत्ती निभ्यो। अन्धकारमा पण्डितजीको हात थामियो। स्त्री बत्ती बालेर तुरुन्त बाहिर निस्कन लागेकी थिइन तर पण्डितजीले देखेर छक्क परेर सोधे—'देवी ! तिमी को हौ ?' 'हजुर आफ्नू काम [illegible] [illegible] हजुरको काममा बाधा परेको हुनाले यस कामको निमित्त म अपराधिनी हुँ।' यति कुरा डराउँदै-डराउँदै तिनले भनिन्। पण्डितजीले फेरि भने—'एवंतोत् र तपाईं को हुनुहुन्छ र यहाँ किन [illegible] ?' [illegible] [illegible] ! हजुरको काममा विघ्न परिहेको छ, यसको निमित्त क्षमा गर्नुहोला।' यति सुन्नासाथ पण्डितजीले हातको पन्ना राखिदिए र कलम पनि राखे—मानो उनलाई जीवनको कुनै नयाँ तत्त्व प्राप्त भएको होस्। [illegible] आग्रहले बोले—'होइन, तपाईं आफ्नू परिचय दिनोस्। जबसम्म परिचय दिनुहुन्न म आफ्नू काम थाल्दिन।' स्त्रीका आँखा न्यूरिए र विनम्र भावले भनिन्—'प्राणनाथ ! म हजुरकी परिणीता पत्नी [illegible]। मलाई 'तपाईं' भनेर पाप नबोकाउनोस् !' पण्डितजीले छक्क परेर भने—'हैं, मेरी पत्नी ! मेरो विवाह कहिले भएको ?' स्त्रीले भनिन्—'झण्डै पचास वर्ष भयो होला, त्यसै बेलादेखि दासी हजुरका चरणमा छु।' पण्डितजीले भने—'तिमी यति वर्षदेखि भक्ति गरेकी छौ, मलाई आजसम्म थाहा किन भएन ?' स्त्रीले भनिन्—'प्राणनाथ ! हजुरले विवाह-मण्डपमा दाहिने हातले मेरो बायाँ हात समाउनुभएको थियो र हजुरको बायाँ हातमा [illegible] पत्र थियो। विवाह भयो तर हजुर यस पुस्तकमै संलग्न रहनु भयो। त्यसै बेलादेखि यी पुस्तकका पात निरन्तर भएका छन्।' पण्डितजीले भने—'पचास वर्षको लामो समय तिमीले कसरी बितायौ ? म तिमी [illegible] भन्ने कुरा यो भन्दा पहिले नै मलाई किन भनिनौ ?' स्त्रीले उत्तर दिइन्—'प्राणेश्वर ! हजुर दिन रात आफ्नू काममा लागिरहनु हुन्थ्यो र म आफ्नू काममा। मलाई यसैमा सुख प्राप्त हुन्थ्यो—हजुरको कार्य निर्विघ्न [illegible] छ। आज बत्ती निभ्नाले बाधा आयो। यसैले नै यो प्रसङ्ग पनि आयो।' पण्डितजी—'तिमी दिनहुँ के गरिरहन्थ्यौ ?' स्त्री—'नाथ ! अब के गर्ने ? सकेसम्म स्वामीको काम निर्विघ्न रहने प्रयत्न गर्दथें। विहान हजुर [illegible] पहिल्यै उठेर विस्तार-विस्तार निदाएपछि म सबै पुस्तक पात्रा बाँधेर बेठनमा राखी हजुरको शिरमुनि एक तकिया राखिदिएर हजुरका पाउ मिच्दै त्यहीं चरणनेर निदाउँथें।' पण्डितजी—'मैले त तिमीलाई

अतिशय प्रसन्न चित्त भएर मिथिलेश महाराज बहुलाश्व भन्दछन्—हे विभो ! हजुर सबै प्राणीका आत्मा, साक्षी र स्वयंप्रकाश ब्रह्म हुनुहुन्छ । यसै कारण हजुर यहाँ आएर आफ्ना चरणको

वाचा मधुरया प्रीणन्निदमाहाम्बर्तर्पितान् ॥ पादावङ्कगतौ विष्णोः संस्पृश्छनकैर्मुदा ॥ ३० ॥ राजोवाच ॥ भवान्हि सर्वभूतानामात्मा साक्षी स्वदृग्विभो ॥ अथ नस्त्वत्पदाम्भोजं स्मरतां दर्शनं गतः ॥ ३१ ॥ स्ववचस्तदृतं कर्तुमस्मद्दृग्गोचरो भवान् ॥ यदात्थैकान्तभक्तान्मे नानन्तः

चिन्तन गर्ने हामीलाई दर्शन बक्सियो ॥ २९-३१ ॥ हजुरले जो आज्ञा भएको थियो—'मलाई आफ्ना भक्तभन्दा प्रिय बलरामजी, लक्ष्मी र लोकपाल ब्रह्माजी पनि छैनन्' आफ्नू

---

कहिल्यै देखिन !' स्त्री—'देख्नु केवल आँखाले मात्र हुन्छ र ? त्यसको निम्ति मन चाहिन्छ ! ईश्वरित मन छैन भने यो भौतिक कसरी कसैलाई देख्न सक्छन् ? वस्तु सामुन्ने भए पनि देखिन्न । हजुरको मन निरन्तर तल्लीन रहन्छ अध्ययन, विचार र लेखनमा । अनि मलाई कसरी देख्नु हुन्थ्यो !' पण्डितजी—'उसो भए हाम्रो खान पिनको व्यवस्था कसरी हुन्छ ?' स्त्री—'दिउँसो अवकाशको मौकामा घर-घरका केटीहरूलाई हस्तकला र गानविद्या सिकाउदछु ती सबै आफ्ना-आफ्ना घरबाट चामल, दाल, गहुँ आदि ल्याइदिन्छन्, त्यसैले निर्वाह भइरहेको छ ।' यति सुनेर पण्डितजीको हृदय पग्लियो ती ठिङ्ग उभिए र गद्‌गद कण्ठले भने—'तिम्रो नाम के हो देवी !' स्त्रीले भनिन्—'भामती !' उनले भने—'भामती, भामती ! मलाई क्षमा गर । पचास वर्षसम्म नबोलेर तिम्रो सेवा ग्रहण गर्ने र सेविकालिर एकपल्ट हेर्नेसम्म शिष्टता नगर्ने यस पापीलाई क्षमा गर ।' यति भनेर पण्डितजी भामतीका पाउमा पर्न आँटे । भामतीले पछि सरेर नम्रतासाथ भनिन्—'देव ! हजुर यसरी भनेर मलाई पापग्रस्त नपार्नोस् । हजुरले मतिर दृष्टिपात भए, आज म मनुष्य नभएर तिर्यक्-विमुख पशु हुने थिए । हजुरले मलाई पशु आहार हुनबाट जोगाएर मनुष्य नै रहन दिनु भयो; यो मेरो अहोभाग्य हो ! हुनै अर्को घरमा विवाह भएको भए म संसारी प्रपञ्चमा कति गाडिने थिएँ र धुँगुर कुर सँ कति वंश वृद्धि हुने थियो ! हजुरको तपश्चर्याले म पवित्र भएँ । यो सबै हजुरकै प्रताप र प्रसाद हो । हजुर कृपा गरेर आफ्नू अध्ययन, लेखनमा लाग्नोस् र मलाई बिर्सिदिनोस् ।' यति भनेर ती जान लागिन् । पण्डितजी कराए—'भामती ! पर्ख, मेरो कुरा सुन ।' भामती—'नाथ ! हजुर आफ्नी जीवनसंगिनी साधनालाई बिर्सेर किन मोहको भाङ्ग्रामा पर्नुहुन्छ र मलाई पनि किन पापपङ्कमा चहलाउनु हुन्छ !' पण्डितजी कराए—'भामती ! म तिमीलाई पाप पङ्कमा अश्लाउन खोजिरहेको छैन । म त आफ्नू निम्ति विचार गर्दैछु—म पापगर्तमा परेको छु कि तुमें अग्लोमा छु ।' भामती—'नाथ ! हजुर त देवता हुनुहुन्छ । हजुरले लेख्नु हुन्छ त्यसले जगत्‌को उपकार हुनेछ ।' पण्डितजी—'भामती ! मेरो कुरा पत्याउ । भगवान् व्यासले धेरै वर्ष तपस्या गरेर यस ग्रन्थको रचना गरे र मैले जीवनभरि यसको पठन र मनन गरें परन्तु तिमी विश्वास गर, यति भन्दा-भन्दै पण्डितजी फेरि उनका पाउमा न्यूरन लागे । भामतीले उनलाई उठाएर विनम्रभावमा भनिन्—'पतिदेव ! हजुर यो के गर्दै हुनुहुन्छ ? मैले त आफ्नो जीवनमा हजुरको सेवा बाहेक केही इच्छा नै गरिन । बरु हजुरले मजस्ती नारीलाई यस्तो सेवाको अवसर दिनु भयो । यो हजुरको समाधि ठूलो उपकार हो । आजसम्म म प्रतिदिन हजुरका चरणमा श्रद्धापूर्वक सुतिरहेकी छु । तिनै चरणमा यसै गरी सुतेर चिरनिद्रामा पुगे भने मेरो भाग्य खुल्नेछ !' पण्डितजी—'भामतीदेवी ! सुन, मैले आफ्नू सारा जीवन यी पानाहरू लेख्नमै बिताइदिएँ । तर तिमीले मसित यस्तो जीवन बितायौ, त्यसको सामु मलाई आफ्नू जीवन अत्यन्त क्षुद्र र नगण्य प्रतीत भइरहेको छ । मलाई यस ग्रन्थको एकेक पानामा, एकेक पंक्तिमा र अक्षर-अक्षरमा तिम्रो जीवन देखिइरहेछ । अतः जगत्‌मा यो ग्रन्थ अब तिम्रो नै नामले प्रसिद्ध हुनेछ । तिमीले मेरो निम्ति जुन अपूर्व त्याग गरेकी छौ, त्यसको चिरस्मृतिका लागि मेरो यो अनुरोध स्वीकार गर !' स्त्री—'प्रभो ! हजुर यस्तो गर्नुहुन्छ कि यो अतुलनीय शास्त्र ज्ञानको सामुन्ने म जस्ती क्षुद्र नारीलाई संसारले बिर्सिदेओस् । हजुर आफ्नू काममा लाग्नु इवस् देव !' यति भनेर भामती जान लागिन् । पण्डितजी—'तिमीलाई जहाँ जाने इच्छा छ जाऊ । तर अब म जीवित एवं मूर्तिमान् वेदान्तको मूल वाक्को स्पर्श गर्न सक्दिन ।' यति भनेर पण्डितजीले पुस्तक पोको पारे । पण्डितजी द्वारा रचित त्यो महान् ग्रन्थ आज पनि वेदान्तको यौटा अप्रतिम रत्न मानिन्छ । त्यस ग्रन्थको नाम हो—ब्रह्मसूत्रको व्याख्या 'भामती' र त्यसका लेखक हुन्—पण्डित वाचस्पति मिश्र ।

1232

पत्र वाक्यलाई सत्य पार्नको निम्ति नै आज हजुर दृष्टिगोचर हुनु भएको छ ॥३२॥ हजुरको विषयमा यो कुरा निश्चितरूपले जान्ने यस्तो कुन पुरुष छ, जो यी चरणकमलाई बिर्सला ! हजुर निष्किञ्चन र शान्त मुनीश्वरहरूलाई आफ्नू स्वरूपसम्म सुम्पिदिनु हुन्छ। हजुरले यदुवंशमा अवतार लिएर जन्म-मरणरूपी संसार-चक्रमा प्राणिहरूको ताप-पाप शान्त पार्नको निम्ति नै त्रिलोकको पाप नष्ट पार्ने आफ्नू सुयश फिजाउनु भएको छ। अकुण्ठ-बुद्धि तथा शान्त भावले तपस्या गर्ने ऋषिवर नारायणस्वरूप हजुर भगवान् कृष्णलाई मेरो नमस्कार छ ॥ ३३-३५ ॥ हे भूमन् ! हजुर, यी द्विजहरूका साथैं केही दिन हाम्रो घरमा बसिदिनोस् र आफ्ना चरणरजले यो निमिकुललाई पवित्र पार्नोस् ॥ ३६ ॥ यसरी राजा बहुलाश्वले प्रार्थना गरेपछि लोकपालक भगवान् कृष्ण मिथिलापुरीका नर-नारीहरूको कल्याण गर्दै केही दिन त्यहीं बस्नुभयो ॥३७॥ यता भगवद्भक्त विप्र श्रुतदेव आफ्नू घर आएका श्रीकृष्ण र मुनीश्वरहरूलाई नमस्कार गरेर हर्षले आफ्ना लुगा उफार्दै गद्गद् भावले नाच्न लागे ॥ ३८ ॥ पीढा र कुशासनमा सबैलाई बसाली स्वागत-प्रश्नादिले तिनको अभिनन्दन

श्रीरजः प्रियः ॥ ३२ ॥ को नु त्वच्चरणाम्भोजमेवंविद्विसृजेत्पुमान् ॥ निष्किञ्चनानां शान्तानां मुनीनां यस्त्वमात्मदः ॥ ३३ ॥ योऽवतीर्य यदो-र्वंशे नृणां संसरतामिह ॥ यशो वितेने तच्छान्त्यै त्रैलोक्यवृजिनापहम् ॥ ३४ ॥ नमस्तुभ्यं भगवते कृष्णायाकुण्ठमेधसे ॥ नारायणाय ऋषये सुशान्तं तप ईयुषे ॥ ३५ ॥ दिनानि कतिचिद्भूमन्गृहान्नो निवस द्विजैः ॥ समेतः पादरजसा पुनीहीदं निमेः कुलम् ॥ ३६ ॥ इत्युपामन्त्रितो राज्ञा भगवाँल्लोकभावनः ॥ उवास कुर्वन्कल्याणं मिथिलानरयोषिताम् ॥ ३७ ॥ श्रुतदेवोऽच्युतं प्राप्तं स्वगृहाञ्जनको यथा ॥ नत्वा मुनीन्सुसंहृष्टो धुन्वन्वासो ननर्त ह ॥ ३८ ॥ तृणपीठबृसीष्वेतानानीतेषूपवेश्य सः ॥ स्वागतेनाभिनन्द्याङ्घ्रीन्सभार्योऽवनिजे मुदा ॥ ३९ ॥ तदम्भसा महाभाग आत्मानं जगृहान्वयम् ॥ स्नापयाञ्चक्र उद्धर्षो लब्धसर्वमनोरथः ॥ ४० ॥ फलार्हणोशीरशिवामृताम्बुभिर्मृदा सुरभ्या तुलसीकुशाम्बुजैः ॥ आराधयामास यथोपपन्नया सपर्यया सत्त्वविवर्धनान्धसा ॥ ४१ ॥ स तर्कयामास कुतो ममान्वभूद्गृहान्धकूपे पतितस्य सङ्गमः ॥ यः सर्वतीर्थास्पदपाद-रेणुभिः कृष्णेन चास्यात्मनिकेतभूसुरैः ॥ ४२ ॥ सूपविष्टान्कृतातिथ्याञ्छ्रुतदेव उपस्थितः ॥ सभार्यः स्वजनापत्य उवाचाङ्घ्र्यभिमर्शनः ॥ ४३ ॥ श्रुतदेव उवाच ॥ नाद्य नो दर्शनं प्राप्तः परं परमपूरुषः ॥ यर्हीदं शक्तिभिः सृष्ट्वा प्रविष्टो ह्यात्मसत्तया ॥ ४४ ॥ यथा शयानः पुरुषो मनसैवात्ममा-

गर्दै आफ्नो भार्यासहित तिनले हर्षपूर्वक तिनका पाउ पखाले ॥ ३९ ॥ कुटुम्बसहित महाभाग श्रुतदेवले त्यो चरणोदक आफ्नू शिरमा चढाए। भगवान्‌को चरणस्पर्शले तिनलाई अपार हर्ष भयो र तत्काल उनका सबै मनोरथ पूर्ण भए ॥ ४० ॥ अनि फल, गन्ध, पुष्पादि पूजाका सामग्री, खस ( उशिर ) मिसाएको मीठो जल, कस्तुरी, तुलसी, कुश, कमल तथा सहजै प्राप्त पूजाका सामग्री एवं सात्त्विक अन्नले तिनको पूजा गरे ॥ ४१ ॥ उनले विचार गरे—गृहरूपी अन्धकूपमा परेको म अभागीलाई श्रीकृष्ण तथा जसका चरणरज सबै तीर्थका आश्रय छन् र जो भगवान्‌को मङ्गलमयी मूर्तिका आश्रयस्थान स्वरूप छन्, मलाई ती मुनीश्वरहरूको समागम कसरी प्राप्त भयो ॥ ४२ ॥ आतिथ्य ग्रहण गरेर सुखपूर्वक बसेका ती मुनीश्वरहरूका साम्नु स्त्री-पुत्रादि सहित उपस्थित भएर श्रुतदेवले तिनको चरण-स्पर्श गरेर भने—॥४३॥ श्रुतदेव भन्दछन्—हे भगवन् ! परमपुरुषले मलाई आजै दर्शन दिन

भन्ने होइन, जब-जब आफ्ना शक्ति सहित यस जगत्‌को रचना गरे र यसमा आफ्नू सत्तास्वरूपले प्रवेश गरे, उसै बेलादेखि तपाईहरूलाई सुलभ छन् ॥ ४४ ॥ जस्तै निद्राको पुरुष स्वप्नमा अविद्यावश आफ्नै मनले स्वप्न जगत्‌को रचना गर्छ र त्यसैमा प्रविष्ट भएर स्वयं भासमान हुन्छ, त्यस्तै आफ्नी मायाले यस जगत्‌को रचना गरेर त्यसमा अनुप्रविष्ट भई विविध प्रकारले भासमान भइरहेछन् ॥ ४५ ॥ जो निरन्तर, हजुरको स्मरण कीर्तन, पूजन र अभिनन्दन गर्दै परस्पर हजुरकै चर्चा गर्ने गर्दछन्, ती शुद्धचित्त भएका पुरुषलाई उनकै हृदयमा दर्शन दिनुहुन्छ ॥ ४६ ॥ तर लौकिक र वैदिक कर्मले जसको चित्त विक्षिप्त हुन्छ, तिनको हृदयमा रहेर पनि हजुर धेरै पर रहनु हुन्छ । हजुर अन्तःकरणका अहङ्कारादि शक्तिद्वारा ग्रहण गरिनु हुन्न, तापनि जो हजुरको गुणगानले सम्पन्न छन्, हजुर तिनकै नजीच रहनु हुन्छ ॥ ४७ ॥ अतः आत्मज्ञानीका परमधाम दाता, अनात्म-भिमानीहरूका आत्मादेखि भिन्न मरणशील संसारको प्राप्ति गराउने, महत्तत्वादि कार्य र प्रकृतिरूपी कारणमा शासन गर्ने र आफ्नी मायाले स्वयं अनाच्छादित रहेर पनि अन्यको

यया सृष्ट्वा लोकं परं स्वाप्नमनुविश्यावभासते ॥ ४५ ॥ शृण्वतां गदतां शश्वदर्चतां त्वाऽभिवन्दताम् ॥ नृणां संवदतामन्तर्हृदि भास्यमलात्मनाम् ॥ ४६ ॥ हृदिस्थोऽप्यतिदूरस्थः कर्मविक्षिप्तचेतसाम् ॥ आत्मशक्तिभिरग्राह्योऽप्यन्त्युपेतगुणात्मनाम् ॥ ४७ ॥ नमोऽस्तु तेऽध्यात्मविदां परात्मने अनात्मने स्वात्मविभक्तमृत्यवे ॥ सकारणाकारणलिङ्गमीयुषे स्वमायया संवृतरुद्धदृष्टये ॥ ४८ ॥ स त्वं शाधि स्वभृत्यान्नः किं देव करवामहे ॥ एत-दन्तो नृणां क्लेशो यद्भवानक्षिगोचरः ॥४९॥ श्रीशुक उवाच ॥ तदुक्तमित्युपाकर्ण्य भगवान्प्रणतार्तिहा ॥ गृहीत्वा पाणिना पाणिं प्रहसंस्तमुवाच ह ॥५०॥ श्रीभगवानुवाच ॥ ब्रह्मंस्तेऽनुग्रहार्थाय सम्प्राप्तान्विद्ध्यमून्मुनीन् ॥ सञ्चरन्ति मया लोकान्पुनन्तः पादरेणुभिः ॥ ५१ ॥ देवाः क्षेत्राणि तीर्थानि दर्शनस्पर्शनार्चनैः ॥ शनैः पुनन्ति कालेन तदप्यर्हत्तमेक्षया ॥ ५२ ॥ ब्राह्मणो जन्मना श्रेयान्सर्वेषां प्राणिनामिह ॥ तपसा विद्यया तुष्ट्या किमु मत्कलया युतः ॥ ५३ ॥ न ब्राह्मणान्मे दयितं रूपमेतच्चतुर्भुजम् ॥ सर्ववेदमयो विप्रः सर्वदेवमयो ह्यहम् ॥ ५४ ॥ दुष्प्रज्ञा अविदित्वै-वमवजानन्त्यसूयवः ॥ गुरुं मां विप्रमात्मानमर्चादाविज्यदृष्टयः ॥ ५५ ॥ चराचरमिदं विश्वं भावा ये चास्य हेतवः ॥ मद्रूपाणीति चेतस्याधत्ते विप्रो

दृष्टि अवरुद्ध पार्ने हजुर परमात्मालाई नमस्कार छ ॥ ४८ ॥ हे देव ! हजुर हामी सेवकलाई आज्ञा दिनोस्, हामी हजुरको के सेवा गरौं ? प्रभो ! जबसम्म हजुर दृष्टिको समक्ष आउनुहुन्न, तबसम्म व्यक्तिले विविध क्लेश भोग्नु पर्दछ ॥ ४९ ॥ श्रीशुकदेव भन्नुहुन्छ—श्रुतदेवको भनाइ सुनेर शरणागत-भयभञ्जन भगवान्‌ले आफ्नै हातले तिनको हात समातेर हाँस्तै भन्नुभयो ॥ ५० ॥ भगवान आज्ञा हुन्छ—हे ब्रह्मन् ! मसित यी मुनीश्वरहरूलाई तिमी आफ्नै माथि कृपा गर्न आएका भन्ने जान । आफ्ना चरण-रजले यी सबै लोकलाई पवित्र पार्दै विचरण गरिरहन्छन् ॥ ५१ ॥ देवता, पुण्यक्षेत्र र तीर्थादि दर्शन, स्पर्श र पूजनले विस्तार-विस्तार धेरै समयपछि पवित्र पार्दछन् तर महापुरुष केवल दृष्टिले पवित्र पारिदिन्छन् ॥ ५२ ॥ जन्मैदेखि ब्राह्मण संसारमा सबै प्राणीभन्दा श्रेष्ठ हुन्छन् ! ती यदि तप, विद्या, सन्तोष र मेरो भक्तिले युक्त छन् भने त कुरै छैन ॥ ५३ ॥ मलाई ब्राह्मणको अपेक्षा आफ्नो चतुर्भुज रूप पनि प्रिय छैन ; ब्राह्मण सर्व वेदमय छन् र म सर्वदेवमय हुँ ॥ ५४ ॥ यस रहस्यलाई नबुझेर मूर्खहरूमा देख्ने दृष्टि भन मूढ, आत्मा,

ब्राह्मण र मेरो अवहेलना गरेर केवल प्रतिमामै पूज्यबुद्धि स्थापित गर्दछन् ॥ ५५ ॥ एकमात्र ब्राह्मण नै मेरो साक्षात्कार गरेर आफ्नू चित्तमा यो निश्चय गर्दछन्—यो चराचर जगत् र यसको कारण स्वरूप महत्तत्वादि श्रीकृष्णकै रूप हुन् ॥ ५६ ॥ अतः हे ब्रह्मन् ! यी मेरै स्वरूप हुन्' यस्तो विश्वास गरेर हजुर यी ब्रह्मर्षिहरूको पूजा गर्नोस् । यसले गर्दा मेरो पूजा पनि हुनेछ, नभए धेरै-धेरै सामग्रीले पनि मेरो पूजा हुँदैन ॥ ५७ ॥ श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! आफ्ना प्रभुको यस्तो आदेश पाएर भक्त श्रुतदेव र मिथिलापति बहुलाश्व श्रीकृष्णका साथै ती ब्राह्मणहरूको पनि श्रद्धापूर्वक आराधना गरेर परमपदमा पुगे ॥ ५८ ॥ हे राजन् ! भक्तहरूका भक्त भगवान् आफ्ना दुवै भक्तको प्रिय गर्नका लागि केही दिन मिथिलापुरीमा बसेर उनलाई सन्मार्गको उपदेश दिई फर्कनुभयो ॥ ५९ ॥ श्रीमद्भागवते महापुराणे दशमस्कन्धे नेपाली भाषाटीकायां षडशीतितमोऽध्यायः ॥८६॥

( वेदहरूद्वारा भगवान्को स्तुति ) यति कथा सुनेर राजा परीक्षितले भने—हे ब्रह्मन् ! जो वर्णन भन्दा पर छन्, जो सत् अर्थात् कारण र असत् अर्थात् कार्यभन्दा पार गुणरहित

मदीक्षया ॥ ५६ ॥ तस्माद्ब्रह्मऋषीनेतान्ब्रह्मन्मच्छ्रद्धयाऽर्चय ॥ एवं चेदर्चितोऽस्म्यद्धा नान्यथा भूरिभूतिभिः ॥ ५७ ॥ श्रीशुक उवाच ॥ स इत्थं प्रभुणादिष्टः सहकृष्णान्द्विजोत्तमान् ॥ आराध्यैकात्मभावेन मैथिलश्चाप सद्गतिम् ॥५८॥ एवं स्वभक्तयो राजन्भगवान्भक्तभक्तिमान् ॥ उषित्वादिश्य सन्मार्गं पुनर्द्वारावतीमगात् ॥ ५९ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे श्रुतदेवानुग्रहो नाम षडशीतितमोऽध्यायः ॥ ८६ ॥

परीक्षिदुवाच ॥ ब्रह्मन्ब्रह्मण्यनिर्देश्ये निर्गुणे गुणवृत्तयः ॥ कथं चरन्ति श्रुतयः साक्षात्सदसतः परे ॥ १ ॥ श्रीशुक उवाच ॥ बुद्धीन्द्रियमनःप्राणाञ्जनानामसृजत्प्रभुः ॥ मात्रार्थं च भवार्थं च आत्मनेऽकल्पनाय च ॥ २ ॥ सैषा ह्युपनिषद्ब्राह्मी पूर्वेषां पूर्वजैर्धृता ॥ श्रद्धया धारयेद्यस्तां क्षेमं गच्छेदकिञ्चनः ॥ ३ ॥ अत्र ते वर्णयिष्यामि गाथां नारायणान्विताम् ॥ नारदस्य च संवादमृषेर्नारायणस्य च ॥ ४ ॥ एकदा नारदो लोकान्पर्यटन्भगवत्प्रियः ॥ सनातनमृषिं द्रष्टुं ययौ नारायणाश्रमम् ॥ ५ ॥ यो वै भारतवर्षेऽस्मिन्क्षेमाय स्वस्तये नृणाम् ॥ धर्मज्ञानशमोपेतमाकल्पादास्थितस्तपः ॥ ६ ॥ तत्रोपविष्टमृषिभिः कलापग्रामवासिभिः ॥ परीतं प्रणतोऽपृच्छदिदमेव कुरूद्वह ॥ ७ ॥ तस्मै ह्यवोचद्भगवानृषीणां शृण्वता-

छ, अनि गुणमयी श्रुतिहरू उसलाई कसरी भन्न सक्छन् ? ॥ १ ॥ श्रीशुकदेव भन्दछन्—हे राजन् ! सर्वसमर्थ ती भगवान्ले शब्दादि विषय-ग्रहण गर्नको निम्ति पुनर्जन्म र स्वर्गादि लोकका भोगको प्राप्ति तथा मोक्षलाभको लागि नै जीवका मन, बुद्धि, इन्द्रिय र प्राणको रचना गरे ॥ २ ॥ यस परब्रह्मपरायणा श्रुतिलाई पूर्वजका पनि पूर्वज सनकादिमुनिहरूले आफ्नू महान बुद्धिद्वारा हृदयङ्गम गरेका छन् । जो पुरुष यसलाई श्रद्धापूर्वक धारण गर्दछ, त्यो देहादि उपाधिबाट मुक्त भएर क्षेमस्वरूप परमपद प्राप्त गर्दछ ॥ ३ ॥ अब म नारायणको यौटा गाथा-भन्दछु, जसमा भगवान् कृष्ण र नारदको कथोपकथन छ ॥ ४ ॥ एक दिन भगवानका प्रियभक्त देवर्षि नारद सबै लोक डुल्दै आदि ऋषि नारायणको दर्शन गर्न बदरिकाश्रम गए ॥ ५ ॥ ती नारायण यही भारतवर्षमा सबै जीवको कल्याणका लागि कल्पको आरम्भदेखि धर्म, ज्ञान र शमपूर्वक तपस्या गर्दछन् ॥ ६ ॥ हे कुरुनन्दन ! कलापग्रामवासी मुनिजनको माझमा बसेका नारायणसित देवर्षि नारदले विनयपूर्वक यौटा प्रश्न गरे ॥ ७ ॥ नारायणले ती सबै ऋषिगणको समक्ष नारदमुनिलाई

पूर्वकालमा जनलोकनिवासी महर्षिहरूमा ब्रह्मविषयक जुन मीमांसा भएथ्यो, त्यो सबै सुनाए ॥ ८ ॥ भगवान्—हे ब्रह्मपुत्र ! पूर्वकालमा एकपल्ट जनलोकमा बस्ने ब्रह्माजीका छोरा र ऊर्ध्वरेता मुनीश्वरकहाँ ब्रह्मयज्ञको अनुष्ठान भयो ॥ ९ ॥ त्यस वेला तिमी श्वेतद्वीपका अधिपति र मेरा दिव्य विग्रह अनिरुद्धको दर्शन गर्न श्वेतद्वीप गयौ । त्यहाँ उस वेला उनको विषयमा श्रुति मौन हुन्छन्, ती ब्रह्मको राम्रो विवेचन भयो । त्यहाँ पनि यही प्रश्न उपस्थित भएको थियो, जुन तिमी मपित सोधिरहेका छौ ॥ १० ॥ यद्यपि ती सनकादि चारै भाई विद्या, तप, र स्वभावमा समान छन्, ती चारैको दृष्टिमा शत्रु-मित्र र उदासीन समान छन्, तैपनि अन्य सबैले श्रवणेच्छुक भएर सनन्दनलाई नै वक्ता रूपमा छाने ॥ ११ ॥ सनन्दन भन्दछन्—जस्तै निदाएका सम्राटलाई प्रातः अनुचर बन्दीजन तिनका यश र पराक्रम वर्णन गरेर जागा गराउँछन्, त्यस्तै आफूले रचेका शक्ति समेत समस्त प्रपञ्चलाई आफूमै लीन गरेर सुतेका परमात्मालाई प्रलयको अन्त्यमा श्रुतिहरू उनका महत्त्वको प्रतिपादन गर्ने वाक्यहरू द्वारा यसरी जगाउन लागे ॥ १२॥१३ ॥ श्रुति

मिदम् ॥ यो ब्रह्मवादः पूर्वेषां जनलोकनिवासिनाम् ॥ ८ ॥ श्रीभगवानुवाच ॥ स्वायम्भुवं ब्रह्मसत्रं जनलोकेऽभवत्पुरा ॥ तत्रस्थानां मानमानां मुनीनामूर्ध्वरेतसाम् ॥९॥ श्वेतद्वीपं गतवति त्वयि द्रष्टुं तदीश्वरम् ॥ ब्रह्मवादः सुसंवृत्तः श्रुतयो यत्र शेरते ॥ तत्र ह्ययमभूत्प्रश्नस्त्वं मां यमनुपृच्छसि ॥ १० ॥ तुल्यश्रुततपः शीलास्तुल्यस्वीयारिमध्यमाः ॥ अपि चक्रुः प्रवचनमेकं शुश्रूषवोऽपरे ॥ ११ ॥ सनन्दन उवाच ॥ स्वसृष्टमिदमापीय शयानं सह शक्तिभिः ॥ तदन्ते बोधयाञ्चक्रुस्तल्लिङ्गैः श्रुतयः परम् ॥ १२ ॥ यथा शयानं सम्राजं वन्दिनस्तत्पराक्रमैः ॥ प्रत्यूषेऽभ्येत्य सुश्लोकैर्बोधयन्त्यनुजीविनः ॥ १३ ॥ श्रुतय ऊचुः ॥ जय जय जह्यजामजित दोषगृभीतगुणां त्वमसि यदात्मना समवरुद्धसमस्तभगः ॥ अगजगदोकसामखिलशक्त्यवबोधक ते क्वचिदजयात्मना च चरतोऽनुचरेन्निगमः ॥ १४ ॥ बृहदुपलब्धमेतदवयन्त्यवशेषतया यत उदयास्तमयौ विकृतेर्मृदि वाऽविकृतात् ॥ अत ऋषयो दधुस्त्वयि मनोवचनाचरितं कथमयथा भवन्ति भुवि दत्तपदानि नृणाम् ॥ १५ ॥ इति तव सूयस्त्र्यधिपतेऽखिललोकमलक्षपणकथामृताब्धिमवगाह्य तपांसि जहुः ॥ किमुत पुनः स्वधामविधुताशयकालगुणाः परम भजन्ति ये पदमजस्रसुखानुभवम् ॥ १६ ॥

हरूले भने—' अजित ! हजुरको जय होस् । सबै स्थावर, जङ्गम प्राणी जसका आश्रित रहन्छन् ती सबै जीवका अविद्या हजुर नष्ट गरिदिनोस्, जसले जीवका गुणको आच्छादन गर्नका लागि नै सत्त्वादि गुण स्वीकार गरेको छ, किनकि हजुर स्वभावैले सबै ऐश्वर्ययुक्त रहनु हुन्छ । अखिल शक्तिलाई जाग्रत पार्ने हे परमेश्वर ! चारै वेदहरू कहिले मायासित क्रीडा गर्ने र कहिले आफ्नै स्वरूपमा स्थित रहने हजुर परमेश्वरको अनुसरण गर्दछन् ॥ १४ ॥ सबै ऋषि यस दृश्यमान जगत्लाई हजुर परब्रह्मको एकमात्र स्वरूप मान्दछन् । किनकि प्रलयकालमा जगत् नाश भइसकेपछि एकमात्र हजुर नै शेष रहनु हुन्छ । घटादि विकारको उत्पत्ति र लय माटोमै हुन्छ । त्यसै प्रकार हजुर निर्विकार स्वरूप परमेश्वर बाट नै जगत्को उत्पत्ति र प्रलय हुन्छ । अतः मुनिगण मन र वाणीद्वारा ग्राह्य सम्पूर्ण जगत् हजुरमै स्थित देख्दछन्, किनकि पृथ्वीमा राखिएका मानवहरूको चरण पृथिवीमा राखिएका होइनन् भन्ने कसरी मानिन्छ ? ॥ १६ ॥ हे त्रिगुणमयी मायाका अधिपति ! कुनै पनि विवेकशील पुरुषले सबै लोकका मलापहारी हजुरका कथा-

रूपी अमृतसिन्धुमा डुबुल्की लगाएर सबै सन्ताप त्यागिदिएको छ । हे परमपुरुष ! आत्मज्ञान द्वारा जसको अन्तःकरणका रागादि धर्म र कालकृत जरा-मरणादि दोष नष्ट भइसकेका छन्, जो महात्मा सधैं सुखानुभवरूपी हजुरका स्वरूपको भजन गर्दछन्, तिनको विषयमा केही भन्नु छैन ॥१६॥ जब प्राणी हजुरको अनुसरण गर्छन्, अनि तिनको जीवन सफल हुन्छ । नभए खलाँती झैं व्यर्थ सास फेर्छन्, किनकि जसको अनुग्रहले महत् र अहङ्कारादि ब्रह्माण्डको रचना हुन्छ, जो अन्नमय आदि विभिन्न कोशहरूमा पुरुषरूपले अनुगत तथा तिनका अवधि छन्, ती कार्य-कारणबाट भिन्न तथा सबैको नाश भएपछि पनि रहिरहने सत्यस्वरूप परमात्मा एकमात्र हजुर नै हुनुहुन्छ ॥१७॥ हे अनन्त ! जो ऋषिका सम्प्रदायमा स्थूलदृष्टि राख्नु हुन्छ, ती हजुरको उदर अर्थात् मणिपूरक चक्रमा रहने ब्रह्मरूपको उपासना गर्दछन् । अरुणवंशी मुनिजन जसबाट सबैतिर जाने नाडीहरू निस्कन्छन्, त्यस हृदयमा रहने दहरसंज्ञक आकाशरूप ब्रह्मको उपासना गर्दछन्, किनकि त्यस हृदयबाट नै हजुरको परमधाम अर्थात् हजुरको उपलब्धि स्थानस्वरूप सुषुम्ना मार्ग मस्तकसम्म माथितिर गएको छ, जसलाई पाएर जीव फेरि मृत्युको मुखमा पर्दैन ॥ १८ ॥ हे देव ! स्वयं द्वारा निर्मित देवता, मनुष्य र तिर्यक् आदि विचित्र योनिहरूमा कारणरूपले प्रविष्ट

दृतय इव श्वसन्त्यसुभृतो यदि तेऽनुविधा महदहमादयोऽण्डमसृजन्यदनुग्रहतः ॥ पुरुषविधोऽन्वयोऽत्र चरमोऽन्नमयादिषु यः सदसतः परं त्वमथ यदेष्ववशेषमृतम् ॥१७॥ उदरमुपासते य ऋषिवर्त्मसु कूर्पदृशः परिसर पद्धति हृदयमारुणयो दहरम् ॥ तत उदगादनन्त तव धाम शिरः परमं पुनरिह यत्समेत्य न पतन्ति कृतान्तमुखे ॥ १८ ॥ स्वकृतविचित्रयोनिषु विशन्निव हेतुतया तरतमश्चकास्यनलवत्स्वकृतानुकृतिः ॥ अथ वितथास्वमूष्ववि-तथं तव धाम समं विरजधियोऽन्वयन्त्यभिविपण्यव एकरसम् ॥ १९ ॥ स्वकृतपुरेष्वमीष्वबहिरन्तरसंवरणं तव पुरुष वदन्त्यखिलशक्तिधृतोंऽशकृ-तम् ॥ इति नृगति विविच्य कवयो निगमावपनं भवत उपासतेऽङ्घ्रिमभवं भुवि विश्वसिताः ॥ २० ॥ दुरवगमात्मतत्त्वनिगमाय तवात्ततनोश्चरित-महामृताब्धिपरिवर्तपरिश्रमणाः ॥ न परिलषन्ति केचिदपवर्गमपीश्वर ते चरणसरोजहंसकुलसङ्गविसृष्टगृहाः ॥२१॥ त्वदनुपथं कुलायमिदमात्मसुहृत्प्रिय-यवचरति तथोन्मुखे त्वयि हिते प्रिय आत्मनि च ॥ न बत रमन्त्यहो असदुपासनयात्महनो यदनुशया भ्रमन्त्युरुभये कुशरीरभृतः ॥ २२ ॥ निभृत-

भएर आफैंले बनाएका देवता आदि विविध आकृतिहरूको अनुसरण गर्दै काठमा प्रविष्ट अग्नि झैं उत्तम र अधम भावले सदैव प्रकट हुनुहुन्छ । अतः व ऐहिक र पारलौकिक कर्मभोगबाट विरत तथा निर्मलबुद्धि महानुभाव आफ्ना मिथ्या रूपमा हजुरको सत्य समान र एकरस स्वरूप देख्दछन् ॥१९॥ हे प्रभो ! निजकृत कर्मद्वारा मनुष्यादि शरीरमा विद्यमान कार्य-कारणरूपी आवरण रहित जीवलाई तत्त्वज्ञानीजन हजुर सर्वशक्तिसम्पन्न परमात्माको अंश भन्दछन् । यसरी जीवतत्त्वको स्वरूप नियमन गरेर विवेकशील व्यक्ति सबै वैदिक कर्मको क्षेत्रस्वरूप संसारबाट मुक्त पार्ने हजुरका चरणको श्रद्धापूर्वक उपासना गर्दछन् ॥२०॥ हे परमात्मन् ! हे अच्युत ! दुर्ज्ञेय आत्मतत्त्वको ज्ञान गराउनको निमित्त शरीर धारण गर्ने श्रीहरिको चरित्ररूपी अमृतको महासागरमा स्नान गरेर जो श्रमरहित भइसकेका छन्, त्यस्ता केही भक्तजन मुक्तिको पनि इच्छा गर्दैनन् । हंसको समान हजुरका चरणकमलको सेवन गर्ने भक्त, भक्तमण्डलीको संगतिले आफ्नू घर-बार पनि छाडिदिन्छन् ॥२१॥ हे प्रभो ! हजुरको सेवाको साधन बनाएर अनुसरण गर्ने यो मानव शरीर नै आफ्ना,

सुहृद् तथा प्रियजनको समान आचरण गर्दछ । खेदको कुरा त यो हो कि यसलाई पाएर पनि मनुष्य सधैं सम्मुख रहने, आफ्ना परम हितकारी, प्रिय र आत्मारूप हजुरसित प्रेम गर्दैनन्, बरु ती देह-गेह आदि असत्य पदार्थको लालन-पालनमा संलग्न रहेर आत्मघात गर्दछन् । ती वासनाहरूमा गाडिएर निन्दित योनिहरू धारण गर्दै महान् भयपूर्ण संसारमा चक्र झैं घुमिरहन्छन् ॥२२॥ हे नाथ ! प्राण, मन तथा इन्द्रियको संयम गरेर बलियो योगासनको अभ्यास गर्ने मुनिजन जुन पदको इच्छा गर्छन्, त्यही पदलाई हजुरसित शत्रुता राख्ने असुर पनि केवल स्मरणमात्रले प्राप्त गरिसकेका छन् । जसको हृदय शेषनाग झैं विशाल र कोमल हजुरका भुजाहरूमा आसक्त रहन्छ, ती परिच्छिन्न दृष्टि हुने गोपिनीहरू र हजुरका चरण-कमलको ध्यान गर्ने हामी अर्थात् अपरिच्छिन्न दृष्टि भएका श्रुतिहरू पनि हजुरको दृष्टिमा समान छौं ॥ २३ ॥ जसबाट ब्रह्माजी र त्यसपछि दुवै थरिका देवता उत्पन्न भएका छन्, समस्त सृष्टिका पूर्ववर्ती ती हजुरलाई यस संसारमा पछि उत्पन्न तथा नष्ट हुने कुन पुरुषले जान्न सक्दछ ? जब हजुर सारा प्रपंच आफूमा लीन गरेर सुत्नु हुन्छ, तब सत् अर्थात् आकारादि सम्पन्न स्थूल जगत्, असत्, सूक्ष्म महत्तत्वादि स्थूल-सूक्ष्म दुवै प्रकारका शरीर, यिनका आधारभूत कालको वेग तथा तिनको बोध गराउने

मरुन्मनोऽक्षदृढयोगयुजो हृदि यन्मुनय उपासते तदरयोऽपि ययुः स्मरणात् ॥ स्त्रिय उरगेन्द्रभोगभुजदण्डविषक्तधियो वयमपि ते समाः समदृशोऽङ्घ्रिसरोजसुधाः ॥ २३ ॥ क इह नु वेद बतावरजन्मलयोऽग्रसरं यत उदगादृषिर्यमनु देवगणा उभये ॥ तर्हि न सन्न चासदुभयं न च कालजवः किमपि न तत्र शास्त्रमवकृष्य शयीत यदा ॥२४॥ जनिमसतः सतो मृतिमुतात्मनि ये च भिदां विपणमृतं स्मरन्त्युपदिशन्ति त आरुपितैः ॥ त्रिगुणमयः पुमानिति भिदा यदबोधकृता त्वयि न ततः परत्र भवेदवबोधरसे ॥ २५ ॥ सदिव मनस्त्रिवृत्त्वयि विभात्यसदामनुजात् सदभिमृशन्त्यशेषमिदमात्मतयाऽऽत्मविदः ॥ न हि विकृतिं त्यजन्ति कनकस्य तदात्मतया स्वकृतमनुप्रविष्टमिदमात्मतयाऽवसितम् ॥ २६ ॥ तव परि ये चरन्त्यखिलसत्त्वनिकेततया त उत पदाक्रमन्त्यविगणय्य शिरो निर्ऋतेः ॥ परिवयसे पशूनिव गिरा विबुधानपि तांस्त्वयि कृतसौहृदाः खलु पुनन्ति न ये विमुखाः ॥२७॥ त्वमकरणः स्वराडखिलकारकशक्तिधरस्तव बलिमुद्वहन्ति समदन्त्यजयाऽनिमिषाः ॥ वर्षभुजोऽखिलक्षितिपतेरिव विश्वसृजो विदधति यत्र

शास्त्रादि पनि रहन्न ॥२४॥ जो जन जगत्को उत्पत्ति र सत्को नाश मान्दै आत्मामा भेदको प्रतिपादन गर्दै तथा काम्य कर्महरूका फल नित्य मान्दछन्, ती केवल भ्रमले आरोपित सिद्धान्तको नै प्रतिपादन गर्दछन् । पुरुष त्रिगुणमय छ—यो भेदभाव पनि अज्ञानजनित नै जान्नु पर्दछ । अतएव हजुर अज्ञानबाट भिन्न हुनुहुन्छ, अतः ज्ञानस्वरूप हजुरमा यस्तो कुनै भेदभाव रहन्न ॥२५॥ मनो विलासरूपी यो त्रिगुणात्मक असत्य जगत् परमेश्वरदेखि भिन्न जानिने भोक्ता पुरुष असत् भए पनि हजुरमा अधिष्ठित हुनाले सत्य झैं भासमान हुन्छ । यही कारण हो कि आत्मज्ञानी पुरुष पनि यस जगत्लाई आत्मारूपले सत्य मान्दछन् । जस्तै सुवर्णका तत्त्वज्ञ जन सुवर्णका विकाररूप गहनालाई पनि सुवर्ण मान्दछन् । त्यसैले त्याग्न सक्दैनन् । त्यस्तै आत्माद्वारा निर्मित र आत्मामै व्याप्त यो जगत् आत्मज्ञानीद्वारा आत्मरूपनै मानिन्छ ॥२६॥ हे प्रभो ! हजुर सबै जीवका आश्रयस्थान हुनुहुन्छ यस्तो जानेर जो पुरुष हजुरको सेवा गर्दछन्, ती मृत्युलाई नगण्य जानेर अपहेलनापूर्वक त्यसको टाउकोमा खुट्टा राख्दछन् । हजुरसित प्रेम राख्ने ज्ञानीजन तीने-

लोकलाई पवित्र पार्दछन् । जो व्यक्ति हजुरबाट विमुख छन् ती कसैलाई पवित्र पार्न सक्तैनन् । ती विद्वान भए पनि हजुर तिनलाई कर्मप्रतिपादिनी श्रुतिले पशु झैं बाँधिदिनु हुन्छ ॥२७॥ हजुर मन, बुद्धि र इन्द्रियरूपी उपकरणले रहित भएर पनि ज्ञानवान् हुनाले समस्त कारणका शक्तिले सदा सम्पन्न रहनु हुन्छ । इन्द्रादि देवता र ब्रह्मादि लोकपाल अविद्याको आश्रय लिएर हव्य कव्यादिलाई स्वयं भोग्दै हजुरलाई उपहार दिन्छन् । जस्तै–देश-देशान्तरका राजा प्रजासित कर एकत्रित गरेर त्यो भोग्दै सार्वभौम सम्राट्लाई पनि कर अर्पण गर्दछन् हे देव ! ब्रह्मादि देवता जुन-जुन काममा नियुक्त गरिएका छन् त्यस कार्यमा कालस्वरूप हजुरको भयले ती सदा सावधानीपूर्वक तत्पर रहन्छन् ॥२८॥ हे नित्यमुक्त ! जब मायाको अभिमुख भएर हजुर मायातीत परमात्माको क्रीडा हुन्छ । अनि हजुरको अवलोकनले जाग्रत् कर्म र लिङ्ग शरीरले युक्त समस्त स्थावर जङ्गम प्राणीहरूको उत्पत्ति हुन्छ । जो आकाश झैं सम तथा शून्यको समता धारण गर्दै तथा मन र वाणीको अगोचर रहनु हुन्छ, त्यस्ता परमेश्वरको दृष्टिमा कोही पनि आफ्नू अथवा विरानो हुँदैन ॥ २९ ॥ हे नित्यस्वरूप ! यदि ! असंख्य देहधारी जीव नित्य तथा सर्वगत मानिए पनि हजुर द्वारा तिनको नियन्त्रण हुन सक्तैन । यदि ती हजुरको समान छैनन् भने हजुर तिनका नियामक हुन सक्छ । यी सबै

ये त्वधिकृता भवतश्चकिताः ॥२८॥ स्थिरचरजातयः स्युरजयोत्थनिमित्तयुतो विहर उदीक्षया यदि परस्य विमुक्त ततः ॥ न हि परमस्यकश्चिन्निजान परश्च भवेद्वियत इवापदस्य तव शून्यां दधतः ॥ २९ ॥ अपरिमिता ध्रुवास्तनुभृतो यदि सर्वगतास्तर्हि न शास्यतेति नियमो ध्रुव नेतरथा ॥ अजनि च यन्मयं तदविमुच्य नियन्तृ भवेत् सममनुजानतां यदमतं मतदुष्टतया ॥ ३० ॥ घटत उद्भवः प्रकृतिपूरुषयोरुभययुजा भवन्त्यसुभृतो जल-बुद्बुदवत् ॥ त्वयि त इमे ततो विविधनामगुणैः परमे सरित इवार्णवे मधु निलिल्युरशेषरसाः ॥ ३१ ॥ नृषु तव मायया भ्रममभीष्ववगत्य भृशं त्वयि सुधियोऽभवे दधति भावमनुप्रभवम् ॥ कथमनुवर्ततां भवभयं तव यद्भ्रुकुटिः सृजति मुहुस्त्रिणेमिरभवच्छरणेषु भयम् ॥ ३२ ॥ विजितहृषीकवायुभिर-दान्तमनस्तुरगं य इह यतन्ति यन्तुमतिलोलमुपायखिदः ॥ व्यसनशतान्विताः समवहाय गुरोश्चरणं वणिज इवाज सन्त्यकृतकर्णधरा जलधौ

जीव हजुरबाटै प्रकट भएका हुन्, यसै कारण यिनको त्याग नगरे पनि हजुर यिनका नियन्ता हुनुहुन्छ, किनकि सबै उचित वस्तु दोषपूर्ण हुन्छन् । अतः सर्वत्र समान हुनुहुन्छ र 'हामी जान्दछौं' यस्तो मान्नेहरूलाई थाहा हुँदैन ॥३०॥ जो जन्मरहित प्रकृति र पुरुष छन्, तिनको उत्पन्न हुनु बन्न सक्तैन, बरु ती दुवैको अविद्याजनित संयोग हुनाले नै जलका थोपा झैं प्राणीहरूको जन्म हुन्छ । फेरि आफ्ना भिन्न-भिन्न नाम तथा गुणसहित ती जीव महमा रहेको फूलहरूको मीठो रस झैं एवं समुद्रमा नदीहरूको समान हजुर उपाधि शून्य परमात्मामा लीन हुनुहुन्छ ॥ ३१ ॥ सबै जीव हजुरकै मायाले बारम्बार जन्म धारण गर्दछन् र यस संसारचक्रमा चक्कर खाइरहन्छन्–यस्तो जानेर बुद्धिमान् जन संसारचक्रको निवृत्ति गर्ने हजुर परमेश्वरमा अत्यन्त भक्ति गर्दछन् । हजुरको भ्रुकुटिविलासरूपी शीत ग्रीष्म र वर्षा यी तीन भाग हुने कालचक्र बारम्बार उनैलाई भयभीत पार्दछ–जो हजुरको शरण प्राप्त गर्दैनन् । हजुरका अनुगत भक्तलाई जन्म-मरणरूपी संसारको भय कसरी हुन सक्छ ? ॥३२॥ हे अजन्मा ! जुन व्यक्तिले आफ्ना इन्द्रिय र प्राण वशमा पारेको छ, ती योगीजन द्वारा पनि जसको दमन गर्न सकिन्न, यस्तो अति चञ्चल चित्तरूपी घोडालाई वशमा पार्ने यत्न गर्दछन् । आफ्ना गुरु चरणको शरण त्यागेर अन्य उपाय गर्ने परिश्रमी मनुष्य त्यसै गरी

विविध विपत्तिमा पर्दछन्–जसरी कर्णधारको बिना समुद्रमा यात्रा गर्ने व्यापारी धरि-धरिका कष्ट भोग्दछन् ।।३३।। आफ्ना आश्रितहरूका आत्मा र सर्वानन्दन्दमय हजुर परमात्मा छँदाछँदै प्राणीलाई स्वजन, पुत्र, देह, स्त्री, धन, धाम, पृथ्वी, प्राण र रथ आदिले लाभ ? यो सत्य सिद्धान्तले अनभिज्ञ हुँदा स्त्री-सुखमा रत व्यक्तिलाई स्वभावैले नश्वर र क्षणभंगुर संसारमा कसले सुखी पार्न सक्छ ! ॥ ३४ ॥ जो जन ऐश्वर्यादिको मदले रहित भएर हजुरका चरणकमललाई हृदयमा धारण गर्नेहरू छन् तथा जसको चरणोदक पापपुञ्जलाई नष्ट पार्दछ,ती मुनिजन यस पृथ्वीतलमा अत्यन्त पुण्यमय तीर्थस्थान समान छन् । जो व्यक्ति एकपल्ट पनि नित्य सुखस्वरूप हजुर परमात्मामा चित्त लगाउँछन्, ती विवेक, वैराग्य, धैर्य, क्षमा र शान्ति आदि गुणको नाश पार्ने गृहस्थीमा फेरि आसक्त हुँदैनन् ।।३५।। यदि हजुर भन्नुहुन्छ–'यो सबै प्रपञ्च सत्‌बाट उत्पन्न भएको हो, अतः यो स्वयं पनि सत् हो । अनि अनुमान तर्कले बाधित हुनेछ । फेरि यो अनुमान कहीं-कहीं व्यभिचरित भएको पनि देखिन्छ ! उपर्युक्त अनुमान कहीं-कहीं असत्य पनि सिद्ध हुन्छ । यस्तै दुइटा अर्थात् ब्रह्म र माया-को संयोगले उत्पन्न यो प्रपञ्च पनि सत् होइन । अन्धपरम्पराले जुन यो भ्रम चलिआएको छ, यसलाई व्यवहार निर्वाह मात्रका लागि व्यावहारिक सत्यको रूपमा स्वीकार गरिन्छ ।

॥ ३३ ॥ स्वजनसुतात्मदारधनधामधरासुरथैस्त्वयि सति किं नृणां श्रयत आत्मनि सर्वरसे ॥ इति सदजानतां मिथुनतो रतये चरतां सुखयति को न्विह स्वविहते स्वनिरस्तभगे ॥ ३४ ॥ भुवि पुरुपुण्यतीर्थसदनान्यृषयो विमदास्त उत भवत्पदाम्बुजहृदोऽघभिदङ्घ्रिजला ॥ दधति सकृन्मनस्त्वयि य आत्मनि नित्यसुखे न पुनरुपासते पुरुषसारहरावसथान् ॥ ३५ ॥ सत इदमुत्थितं सदिति चेन्ननु तर्कहतं व्यभिचरति क्व च मृषा न तथोभययुक् ॥ व्यवहृतये विकल्प इषितोऽन्धपरम्परया भ्रमयति भारती त उरुवृत्तिभिरुक्थजडान् ॥ ३६ ॥ न यदिदमग्र आस न भविष्यदतो निधनादनुमितमन्तरा त्वयि विभाति मृषैकरसे ॥ अत उपमीयते द्रविणजातिविकल्पपथैर्वितथमनोविलासमृतमित्यवयन्त्यबुधाः ॥ ३७ ॥ स यदजया त्वजामनुशयीत गुणाँश्च जुषन् भजति सरूपतां तदनु मृत्युमपेतभगः ॥ त्वमुत जहासि तामहिरिव त्वचमात्तभगो महसि महीयसेऽष्टगुणितेऽपरिमेयभगः ॥३८॥ यदि न समुद्धरन्ति यतयो हृदि कामजटा दुरधिगमोऽसतां हृदिगतोऽस्मृतकण्ठमणिः ॥ असुतृपयोगिनामुभयतोऽप्यसुखं भगव-

हे ईश ! गौणी लक्षणादि विधि वृत्तिद्वारा कर्मफलादिको प्रशंसा गर्ने हजुरकी वेदरूपिणी वाणी कर्मफलमा श्रद्धा राख्ने जडबुद्धि पुरुषका लागि मोहमा पार्दछ ॥ ३६ ॥ यो जगत् सृष्टिभन्दा पहिले थिएन र प्रलयपछि पनि रहने छैन । यसले यो सिद्ध हुन्छ कि बीचमा पनि यो एकरसस्वरूप हजुर परमेश्वरमा मिथ्या नै प्रतीत हुन्छ । अतः यसको द्रव्यजाति अर्थात् मृत्तिका लौह आदि र विकल्प अर्थात् कार्यरूप घट-कुण्डलादि हैं समानताले निरूपण गरिन्छ । अतः यो अर्थ मनोविलास मात्र जगत्‌लाई मूढजन नै सत्य मान्दछन् ।।३७।। जब जीव मायाले मोहित भएर अविद्याको आश्रय लिन्छ, अनि त्यो गुणका कार्य देह-इन्द्रियादिको सेवन गर्दै उनी जस्तै भएर जन्म-मरणरूपी संसारमा प्राप्त हुन्छ । हजुर त सदा आफ्नु नित्यप्राप्त ऐश्वर्यमा स्थित रहनुहुन्छ । यसै निम्ति हजुर ती मायालाई उसैगरी छाडिदिनु हुन्छ, जसरी सर्प काँचुली छाडिदिन्छ । अनि हजुर अपरिमित ऐश्वर्य-युक्त भएर आफ्ना अणिमादि विभूतियुक्त महिमामा विराजमान रहनु हुन्छ ॥ ३८ ॥ यदि मानिस संन्यासी भएर पनि आफ्नु हृदयमा स्थित कामको मूल स्वरूप वासनाहरू फाल्दैन भने यो भगत

पुरुले हजुरलाई पाउन कठिन छ, जस्तै विस्मृतिवश काँधीमा लगाएको मणि हराएर पाइन्न । केवल प्राण-पोषण गर्ने योगीजनलाई यो लोक र परलोकमा अनेकानेक कष्ट मिल्दछ । यस लोकमा कहिल्यै नबिराउने मृत्युस्वरूप हजुरसित भयभीत हुनुपर्दछ र परलोकमा जसका स्वरूपको ज्ञान भएको रहन्न, त्यस्ता व्यक्तिलाई हजुरको भय बनिरहन्छ ॥ ३९ ॥ हे षडैश्वर्य सम्पन्न प्रभो ! हजुरका स्वरूपको ज्ञाता पुरुष हजुर कर्मदाता ईश्वरबाट उत्पन्न पाप-पुण्यको फलस्वरूप सुख-दुःख भोग्दैन र त्यस बेला देहाभिमानीपुरुष विधि-निषेधरूपिणी वेदवाणीतिर पनि ध्यान रहन्न, किनकि जो व्यक्ति प्रतियुगमा परम्परादेखि गरिएको हजुरका लीला-कथा निरन्तर श्रवण गरेर हजुरलाई आफ्नू हृदयमा धारण गरिराख्छ, त्यसलाई हजुर मोक्षरूपमा प्राप्त हुनुहुन्छ ॥४०॥ हे भगवन् ! स्वर्गादिका अधिपति इन्द्रादि देवताले पनि हजुरको अन्त्य पाएनन् । उनै हजुर अनन्त हुनाले स्वयं पनि आफ्नू अन्त्य भेट्नू हुन्न । जस्तै-आकाशमा वायुद्वारा रजकण उड्दै रहन्छन्, त्यस्तै कालचक्र पृथ्वी आदि आवरण समेत अनन्त ब्रह्माण्ड समूह हजुरमा एकैसाथ घुमिरहन्छन् । हजुरमै अन्त्य

ऽनपगतान्तकादनधिरूढपदाद्भवतः ॥ ३९ ॥ त्वदवगमी न वेत्ति भवदुत्थशुभाशुभयोर्गुणविगुणान्वयांस्तर्हि देहभृतां च गिरः ॥ अनुयुगमन्वहं सगुण गीतपरम्परया श्रवणभृतो यतस्त्वमपवर्गगतिर्मनुजैः ॥ ४० ॥ द्युपतय एव ते न ययुरन्तमनन्ततया त्वमपि यदन्तराण्डनिचया ननु सावरणाः ॥ ख इव रजांसि वान्ति वयसा सह यच्छ्रुतयस्त्वयि हि फलन्त्यतन्निरसनेन भवन्निधनाः ॥ ४१ ॥ श्रीभगवानुवाच ॥ इत्येतद्ब्रह्मणः पुत्रा आश्रुत्यात्मानुशासनम् ॥ सनन्दनमथानर्चुः सिद्धा ज्ञात्वात्मनो गतिम् ॥ ४२ ॥ इत्यशेषसमाम्नायपुराणोपनिषद्रसः ॥ समुद्धृतः पूर्वजातैर्व्योमयानैर्महात्मभिः ॥ ४३ ॥ त्वं चैतद्ब्रह्मदायाद श्रद्धयात्मानुशासनम् ॥ धारयँश्चर गां कामं कामानां भर्जनं नृणाम् ॥ ४४ ॥ श्रीशुक उवाच ॥ एवं स ऋषिणादिष्टं गृहीत्वा श्रद्धयात्मवान् ॥ पूर्णः श्रुतधरो राजन्नाह वीरव्रतो मुनिः ॥ ४५ ॥ नारद उवाच ॥ नमस्तस्मै भगवते कृष्णायामलकीर्तये ॥ यो धत्ते सर्वभूतानामभवायोशतीः कलाः ॥ ४६ ॥ इत्याद्यमृषिमानम्य तच्छिष्यांश्च महात्मनः ॥ ततोऽगादाश्रमं साक्षात्पितुर्द्वैपायनस्य मे ॥४७॥ सभाजितो भगवता कृतासनपरिग्रहः ॥ तस्मै तद्वर्णयामास नारायणमुखाच्छ्रुतम् ॥ ४८ ॥ इत्येतद्वर्णितं राजन्यन्नः प्रश्नः कृतस्त्वया ॥ यथा

पाउने श्रुतिहरू स्थूल-सूक्ष्मादि अनात्म वस्तुको निषेध गर्दै हजुरमै विलीन भएर सफल हुन्छन् ॥४१॥ नारायण भन्नुहुन्छ—हे नारद ! यो वेदस्तुति स्वरूप आत्मतत्त्वको उपदेश सुनेर ब्रह्मपुत्र सनकादिले आत्माको स्वरूप चिनेर सनन्दनको पूजा गरे ॥४२॥ सृष्टिको आरम्भमा उत्पन्न आकाशचारी महात्माले यसरी सबै वेद, पुराण र उपनिषद्को सार झिकेका थिए ॥४३॥ हे ब्रह्मपुत्र ! मनुष्यका वासनाहरू भस्म पार्ने यस आत्मतत्त्वको उपदेश तिमी पनि श्रद्धापूर्वक हृदयमा धारण गरेर पृथ्वीमा डुलिरहू ॥ ४४ ॥ शुकदेव भन्नुहुन्छ—हे राजन् ! ऋषि सनन्दनले यसरी उपदेश दिएपछि श्रद्धापूर्वक हृदयङ्गम गरेर ज्ञानी, पूर्णकाम र सुनेको अर्थ हृदयङ्गम गर्ने नैष्ठिक ब्रह्मचारी देवर्षि नारदले भने ॥४५॥ नारद भन्दछन्—जो सबै प्राणीहरूलाई मोक्ष दिन कमनीय कलापूर्ण अवतार धारण गर्दछन्, त्यस्ता हजुर, कीर्ति सम्पन्न भगवान् कृष्णलाई मेरो नमस्कार छ ॥ ४६ ॥ त्यसपछि आदि-ऋषि नारायण र उनका शिष्यगणलाई प्रणाम गरेर नारद प्रसन्नचित्तमेरा पिता कृष्णद्वैपायन व्यासको आश्रमतिर गए ॥ ४७ ॥ त्यहाँ भगवान् व्यासद्वारा राम्ररी सम्मानित भएर

नारदजी आसनमा बसेपछि नारायणको मुखबाट जे सुनेका थिए, त्यो सबै सुनाए ॥ ४८ ॥ हे राजन् ! तिमीले जो प्रश्न गरेका थियौ, तदनुसार—'जो निरूपणदेखि पर र निर्गुण छन्, त्यस ब्रह्ममा श्रुतिको गति कसरी हुन्छ ?' त्यो सबै मैले सुनाइदिएँ ॥ ४९ ॥ यो वेदस्तुतिको सारांश हो जो यस विश्वको उत्पत्ति र संहारको विषयमा उत्प्रेक्षा गर्दछन्, जो प्रकृति र पुरुषका ईश्वर छन्, जो यस ब्रह्माण्डको रचना गरेर यसमा जीवसित आत्मारूपले प्रविष्ट भएर भिन्न-भिन्न देहको रचना र तिनको पालन एवं संहार गर्दछन् । जसरी गाढ निद्रामा सुतेको पुरुष शरीरको ज्ञान छाडिदिन्छ, त्यस्तै जसलाई पाएर जीव मायाबाट मुक्त हुन्छ, ती आफ्नू अखण्डरूपमा रहेर जगत्की मूलकारण स्वरूपा मायाको अन्त्य पार्ने अभयस्वरूप श्रीकृष्णको निरन्तर चिन्तन गर्नु प्रत्येक प्राणीको कर्तव्य हो ॥ ५० ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे नेपाली भाषाटीकायां सप्ताशीतितमोऽध्यायः ॥ ८७

( शम्भु-मोचनको कथा ) यति कथा सुनेर राजा परीक्षित्ले भने—हे ब्रह्मन् ! देवता, असुर र मनुष्यहरूमा जो अशिव शङ्करको सदा भजन गर्दछन्, ती प्रायः धनी र भोग सम्पन्न

ब्रह्मण्यनिर्देश्ये निर्गुणेऽपि श्रुतिश्चरेत् ॥ ४८ ॥ योऽस्योत्प्रेक्षक आदिमध्यनिधने योऽव्यक्तजीवेश्वरो यः सृष्ट्वेदमनुप्रविश्य ऋषिणा चक्रे पुरः शास्ति ताः ॥ यं संपद्य जहात्यजामनुशयी सुप्तः कुलायं यथा तं कैवल्यनिरस्तयोनिमभयं ध्यायेदजस्रं हरिम् ॥ ५० ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे नारदनारायणसंवादे वेदस्तुतिर्नाम सप्ताशीतितमोऽध्यायः ॥ ८७ ॥

राजोवाच ॥ देवासुरमनुष्येषु ये भजन्त्यशिवं शिवम् ॥ प्रायस्ते धनिनो भोजा न तु लक्ष्म्याः पतिं हरिम् ॥१॥ एतद्वेदितुमिच्छामः सन्देहोऽत्र महान्हि नः ॥ विरुद्धशीलयोः प्रभ्वोर्विरुद्धा भजतां गतिः ॥ २ ॥ श्रीशुक उवाच ॥ शिवः शक्तियुतःशश्वत्त्रिलिङ्गोगुणसंवृतः ॥ वैकारिकस्तैजसश्च तामसश्चेत्यहं त्रिधा ॥ ३ ॥ ततो विकारा अभवन्षोडशामीषु कञ्चन ॥ उपधावन्विभूतीनां सर्वासामश्नुते गतिम् ॥ ४ ॥ हरिर्हि निर्गुणः साक्षात्पुरुषः प्रकृतेः परः ॥ स सर्वदृगुपद्रष्टा तं भजन्निर्गुणो भवेत् ॥ ५ ॥ निवृत्तेष्वश्वमेधेषु राजा युष्मत्पितामहः ॥ शृण्वन्भगवतो धर्मानपृच्छदिदमच्युतम् ॥ ६ ॥ स आह भगवाँस्तस्मै प्रीतः शुश्रूषवे प्रभुः ॥ नृणां निःश्रेयसार्थाय योऽवतीर्णो यदोः कुले ॥ ७ ॥ श्रीभगवानुवाच ॥

हुन्छन् । तर जो लक्ष्मीपति विष्णुको भजन गर्दछन् , ती त्यस्ता भोगसम्पन्न र धनी हुँदैनन् । यसको रहस्य के हो ? ॥१॥ हे भगवन् ! यी विरुद्धस्वभाव हुने दुवै प्रभुका उपासकहरूलाई यस्तो विरुद्ध गति किन प्राप्त हुन्छ ? यो म जान्न खोज्दैछु—मलाई यस विषयमा ठूलो संशय छ ॥ २ ॥ श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! आफ्नी प्रबल माया शक्तियुक्त भगवान सदाशिव सबै गुणले युक्त छन् । उनको त्रिविध अहङ्कारले दस इन्द्रिय, पञ्चभूत र मन—यी सोह्र विकार उत्पन्न भएका छन् । अतः यी सबै अधिष्ठाता देवताहरूमा कुनै पनि यीहरूको उपासना गरेर प्राणी सबै ऐश्वर्यको गति पाउँदछ ॥३॥४॥ तर विष्णु भगवान् प्रकृतिदेखि अलग्ग पुराण पुरुष र निर्गुण छन् । ती सर्वज्ञ र सबैका अन्तःकरणका साक्षी छन् । उनको भजन गर्नाले प्राणी गुणातीत हुन्छन् ॥५॥ हे राजन् ! तिम्रा पितामह राजा युधिष्ठिरले अश्वमेध यज्ञ समाप्त भएपछि भागवत धर्म सुन्ने बेलामा भगवान् श्रीकृष्णचन्द्रसित यही प्रश्न गरेका थिए ॥६॥ अनि प्राणीको आत्यन्तिक कल्याणका लागि यदुकुलमा अवतीर्ण र षडैश्वर्य सम्पन्न श्रीकृष्णचन्द्रले प्रसन्नतापूर्वक महाराज युधिष्ठिरसित यसरी भन्नुभयो ॥ ७७ ॥

भगवान् भन्नुहुन्छ—म जसमाथि कृपा गर्दछु, त्यसको सबै धन बिस्तार-बिस्तार हरिलिन्छु । त्यसले निर्धन र दुःख भोगेको देखेर त्यसका स्वजनले छाडिदिन्छन् ॥८॥ अनि त्यसबार उद्योग गरेर पनि धन कमाउन समर्थ हुँदैन, अनि धनप्राप्तिको चेष्टाबाट विरक्त भएर त्यो मेरा भक्तहरूको संगतमा लाग्दछ, अनि म कृपा गर्न थाल्दछु ॥ ९ ॥ अनि त्यसलाई परम सूक्ष्म चिन्मात्र, सत्यस्वरूप र अनन्त ब्रह्मको प्राप्ति हुन्छ । यसरी मेरो आराधना कठिन छ । अतः सबै मलाई छाडेर अन्य देवताको उपासना गर्न थाल्दछन् ॥ १० ॥ अत्यन्त शीघ्र प्रसन्न हुने अन्य देवताहरूसित राज्य र धन-वैभव पाएर ती उन्मत्त हुन्छन् । यसरी अति घमण्डी र उद्धत भएर ती वरदायक देवताहरूको पनि महत्त्व बिर्सेर उनैको अपमान गर्न थाल्दछन् ॥ ११ ॥ श्रीशुकदेव भन्दछन्–हे राजन् ! ब्रह्मा, विष्णु र शिव आदि देवता श्राप र वरदान दिन समर्थ छन् । यिनमा शिव र ब्रह्माजी त झन् चाँडै नै प्रसन्न हुने र श्राप दिने देवता हुन्, तर विष्णु भगवान् त्यस्ता होइनन् ॥ १२ ॥ यस विषयमा यो प्राचीन इतिहासको उदाहरण दिइन्छ—भगवान् शङ्कर वृकासुरलाई आफैंले वरदान दिएर स्वयं

यस्याहमनुगृह्णामि हरिष्ये तद्धनं शनैः ॥ ततोऽधनं त्यजन्त्यस्य स्वजना दुःखदुःखितम् ॥८॥ स यदा वितथोद्योगो निर्विण्णः स्याद्धनेहया ॥ मत्परैः कृतमैत्रस्य करिष्ये तदनुग्रहम् ॥९॥ तद्ब्रह्म परमं सूक्ष्मं चिन्मात्रं सदनन्तकम् ॥ अतो मां सुदुराराध्यं हित्वाऽन्यान्भजते जनः ॥१०॥ ततस्त आशुतोषेभ्यो लब्धराज्यश्रियोद्धताः ॥ मत्ताः प्रमत्ता वरदान्विस्मरन्त्यवजानते ॥ ११ ॥ श्रीशुक उवाच ॥ शापप्रसादयोरीशा ब्रह्मविष्णुशिवादयः॥ सद्यः शापप्रसादोऽङ्ग शिवो ब्रह्मा न चाच्युतः ॥ १२ ॥ तत्र चोदाहरन्तीममितिहासं पुरातनम् ॥ वृकासुराय गिरिशो वरं दत्त्वाऽऽप सङ्कटम् ॥ १३ ॥ वृको नामासुरः पुत्रः शकुनेः पथि नारदम् ॥ दृष्ट्वाशुतोषं पप्रच्छ त्रिषु देवेषु दुर्मतिः ॥ १४ ॥ स आह देवं गिरिशमुपाधावाशु सिद्ध्यसि ॥ योऽल्पाभ्यां गुणदोषाभ्यामाशु तुष्यति कुप्यति ॥ १५ ॥ दशास्यबाणयोस्तुष्टः स्तुवतोर्बन्दिनोरिव ॥ ऐश्वर्यमतुलं दत्त्वा तत आप सुसङ्कटम् ॥ १६॥ इत्यादिष्टस्तमसुर उपाधावत्स्वगात्रतः ॥ केदार आत्मक्रव्येण जुह्वानोऽग्निमुखं हरम् ॥ १७ ॥ देवोपलब्धिमप्राप्य निर्वेदात्सप्तमेऽहनि ॥ शिरोऽवृश्चत्स्वधितिना तत्तीर्थक्लिन्नमूर्धजम् ॥१८॥ तदा महाकारुणिकः स धूर्जटिर्यथा वयं चाग्निरिवोत्थितोऽनलात् ॥ निगृह्य दोर्भ्यां भुजयोर्न्यवारयत्तत्स्पर्श

सङ्कटमा परेका थिए ॥१३॥ एकपल्ट शकुनीको छोरो दुष्टबुद्धि वृकासुरले बाटोमा देवर्षि नारदलाई जान लागेका देखेर सोध्यो—'त्रिदेव अर्थात् ब्रह्मा, विष्णु शिवमा सब भन्दा शीघ्र प्रसन्न हुने देवता को हुन् ?' ॥ १४ ॥ नारदले भने–'तिमी शङ्कर भगवानको उपासना गर । यसले तिम्रो सबै मनोरथ शीघ्र पूर्ण हुनेछ, किनकि ती थोरै गुण तथा दोषले तत्काल प्रसन्न र कुपित हुन्छन् ॥ १५ ॥ बन्दीजन झैं स्तुति गर्ने रावण र बाणासुरसित प्रसन्न भएर तिनलाई अटूट ऐश्वर्य दिए र स्वयं शिवजीलाई तिनैद्वारा निकै ठूलो सङ्कट आइलाग्यो' ॥ १६ ॥ नारदजीको यो उपदेश पाएर त्यो असुर केदार क्षेत्रमा आफ्नू शरीरको मासुका टुक्राका हवन गर्दै अग्निमुख नामका शिवको आराधना गर्न लाग्यो ॥ १७ ॥ यसरी छ दिनसम्म उपासना गर्दा पनि जब इष्टदेवको दर्शन पाएन, तब सातौं-दिन खिन्न भएर त्यो केदारतीर्थमा स्नान गर्नाले भिजेका कपाल भएको आफ्नू मस्तक आफ्नै हातले खड्गद्वारा काट्न उद्यत भयो ॥ १८ ॥ अनि हामी जस्तै परम कारुणिक शङ्कर अग्निकुण्डबाट अग्निदेव झैं प्रकट भएर आफ्ना भुजाले त्यसका दुवै हात समातेर रोकिदिए । भगवान शिवका

करदाखेले वृकासुर फोर जस्ताको नस्तो भयो ॥१९॥ श्रीशिवले आज्ञा भयो–'हे प्रिय ! भयो, अब धेरै भयो । म तिमीलाई वर दिन्छु । तिम्रो जे इच्छा छ, त्यो वर माग । म जलमात्र अर्पणले पनि आफ्ना शरणागत भक्तमाथि प्रसन्न हुन्छु तिमी व्यर्थ शरीरलाई कष्ट दिइरहेका छौ ॥ २० ॥ अनि त्यस पापीले शिवजीसित सम्पूर्ण प्राणीहरूलाई भयदायक यो वर माग्यो–'म जसको शिरमा आफ्नू हात राखूँ, त्यो तुरुन्त मरोस्' । ॥ २१ ॥ हे भारत ! त्यसको नाशमा ध्यान नदिई भगवान् रुद्रले खिन्न भई सर्पलाई दूध खान दिए जस्तै हाँस्तै 'तथास्तु' भनी वर दिनुभयो ॥२२॥ शिवले 'तथास्तु' भन्नासाथ त्यो असुर पार्वतीलाई हरण गर्ने इच्छाले र त्यस वरदानको परीक्षा लिन महादेवजीकै मस्तकमा आफ्नू हात राख्न तयार भयो । अनि भगवान् शङ्करलाई आफूले दिएको वरदानले निकै डर लाग्यो ॥२३॥ अनि त्यसले लखेटेपछि ती भयले काम्दै स्वर्ग, पृथ्वी र दिशाहरूको अन्त्यसम्म दगुर्दै रहे, पछि उत्तर दिशातिर भागे ॥ २४ ॥ सङ्कट टार्ने कुनै उपाय नदेखेर सबै देवेश्वरगण चुप लागे । अन्त्यमा डराएका भगवान् शङ्कर अन्धकार भन्दा पनि पर, निरन्तर

नाङ्क्ष्व उपस्कृताकृतिः ॥ १९ ॥ तमाह चाङ्गालमलं वृणीष्व मे यथाभिकामं वितरामि ते वरम् ॥ प्रीयेय तोयेन नृणां प्रपद्यतामहो त्वयात्मा भृशमर्द्यते वृथा ॥ २० ॥ देवं स वव्रे पापीयान्वरं भूतभयावहम् ॥ यस्य यस्य करं शीर्ष्णि धास्ये स म्रियतामिति ॥ २१ ॥ तच्छ्रुत्वा भगवान् रुद्रो दुर्मना इव भारत ॥ ओमिति प्रहसंस्तस्मै ददेऽहेरमृतं यथा ॥ २२ ॥ इत्युक्तः सोऽसुरो नूनं गौरीहरणलालसः ॥ स तद्वरपरीक्षार्थं शम्भोर्मूर्ध्नि किलासुरः ॥ स्वहस्तं धातुमारेभे सोऽबिभ्यत्स्वकृताच्छिवः ॥ २३ ॥ तेनोपसृष्टः संत्रस्तः पराधावत्सवेपथुः ॥ यावदन्तं दिवो भूमेः काष्ठानामुदगादुदक् ॥ २४ ॥ अजानन्तः प्रतिविधिं तूष्णीमासन्सुरेश्वराः ॥ ततो वैकुण्ठमगमद्भास्वरं तमसः परम् ॥ २५ ॥ यत्र नारायणः साक्षान्न्यासिनां परमा गतिः ॥ शान्तानां न्यस्तदण्डानां यतो नावर्तते गतः ॥ २६ ॥ तं तथा व्यसनं दृष्ट्वा भगवान्वृजिनार्दनः ॥ दूरात्प्रत्युदियाद्भूत्वा वटुको योगमायया ॥ २७ ॥ मेखलाजिनदण्डाक्षैस्तेजसाऽग्निरिव ज्वलन् ॥ अभिवादयामास च तं कुशपाणिर्विनीतवत् ॥ २८ ॥ श्रीभगवानुवाच ॥ शाकुनेय भवान्व्यक्तं श्रान्तः किं दूरमागतः ॥ क्षणं विश्रम्यतां पुंस आत्माऽयं सर्वकामधुक् ॥ २९ ॥ यदि नः श्रवणायालं युष्मद्व्यवसितं विभो ॥ भण्यतां प्रायशः पुम्भिर्धृतैः स्वार्थान्समीहते ॥ ३० ॥ श्रीशुक उवाच ॥ एवं भगवता पृष्टो वचसाऽमृतवर्षिणा ॥ गतक्लमोऽब्रवीत्तस्मै

प्रकाशमान वैकुण्ठ धाममा पुगे ॥ २५ ॥ जहाँ शान्त सबैका अभयदायक र संन्यासी, भक्तहरूका परमगति श्रीनारायण भगवान् निवास गर्दछन् र जहाँ पुगेपछि जीव फेरि संसारमा फर्कर आउँदैन ॥ २६ ॥ भक्त-भयहारी विष्णुले महादेवलाई त्यस विकट सङ्कटमा देखेर आफ्नी योगमाया द्वारा ब्रह्मचारीको रूप धारण गरेर त्यो दैत्यको सम्मुख पुगे ॥ २७ ॥ ती मुँजको मेखला, कृष्ण-मृगचर्म, दण्ड र रुद्राक्षको माला धारण गरेका र तेजले अग्नि झैं देदीप्यमान एवं हातमा कुश लिएका भर्खरका थिए । उनले वृकासुरलाई विनीत झैं प्रणाम गरे ॥ २८ ॥ अनि श्री भगवान् भन्दछन्—हे शकुनिपुत्र ! तिमी धेरै थाकेजस्ता छौ । किन आज तिमी यति परसम्म आयौ ? लौ त एकछिन यहाँ बसेर थकाई मार । हेर, मनुष्यको शरीर नै त्यसका सबै कामना पूर्ण पार्दछ ॥ २९ ॥ हे समर्थ ! यदि तिम्रो विचार मैले सुन्न लायक छ भने मलाई तत्काल भन, किनकि संसारमा प्रायः सहायक

पुरुष द्वारा नै व्यक्ति आफ्नू कार्य सिद्ध गर्दछन् ॥३०॥ शुकदेवजी भन्नुहुन्छ—यसरी भगवान द्वारा अमृतमय वचनले सोधेपछि वृकासुरले बकाई मारेपछि जे-जति गरेको थियो, त्यो सबै वृत्तान्त सुनायो ॥३१॥ भगवान्ले आज्ञा भयो—यदि यही कुरा हो भने मलाई महादेवको कुरामा विश्वास छैन, किनकि ती त दक्षको श्रापले पिशाच भएर भूत-प्रेतका अधीश्वर भइसकेका छन् ॥३२॥ हे दानवेन्द्र ! यदि तिमीलाई जगद्गुरु शंकरजीका वाक्यमा केही विश्वास छ भने अहिल्यै आफ्नू मस्तकमा हात राखेर परीक्षा लेऊ ॥ ३३ ॥ हे दानवश्रेष्ठ ! अनि महादेवको वचन असत्य ठहरियो भने तिमी ती असत्यभाषी शङ्करलाई नमारी नछाड, जसले ती फेरि मिथ्या कुरा बोल्न नपाउन् ॥ ३४ ॥ श्रीविष्णु भगवान्का विचित्र र कोमल वाक्यले भ्रान्तबुद्धि भएको हुँदा त्यस मूढले आफ्नै शिरमा हात राखिदियो ॥ ३५ ॥ हात राख्नासाथ त्यो दैत्य तत्काल वज्राहत झैं शिर फुटेर त्यहीं मरिगयो। उसै बेला आकाशमा जय-जयकार, नमस्कार र साधुवादको ध्वनि हुनलाग्यो ॥३६॥ पापी वृकासुर मारिनाले देव, ऋषि, पितृ र गन्धर्वगण भगवान्माथि पुष्पको वर्षा गर्न

यथापूर्वमनुष्ठितम् ॥३१॥ श्रीभगवानुवाच ॥ एवं चेत्तर्हि तद्वाक्यं न वयं श्रद्दधीमहि ॥ यो दक्षशापात्पैशाच्यं प्राप्तः प्रेतपिशाचराट् ॥ ३२ ॥ यदि वस्तत्र विश्रम्भो दानवेन्द्र जगद्गुरौ ॥ तर्ह्यङ्गाशु स्वशिरसि हस्तं न्यस्य प्रतीयताम् ॥३३॥ यद्यसत्यं वचः शम्भोः कथञ्चिद्दानवर्षभ ॥ तदैनं जह्यसद्वाचं न यद्वक्ता-नृतं पुनः ॥३४॥ इत्थं भगवतश्चित्रैर्वचोभिः स सुपेशलैः ॥ भिन्नधीर्विस्मृतः शीर्ष्णि स्वहस्तं कुमतिर्न्यधात् ॥३५॥ अथापतद्भिन्नशिरा वज्राहत इव क्षणात् ॥ जयशब्दो नमःशब्दः साधुशब्दोऽभवद्दिवि ॥३६॥ मुमुचुः पुष्पवर्षाणि हते पापे वृकासुरे ॥ देवर्षिपितृगन्धर्वा मोचितः सङ्कटाच्छिवः ॥३७॥ मुक्तं गिरिशमभ्याह भगवान्पुरुषोत्तमः ॥ अहो देव महादेव पापोऽयं स्वेन पाप्मना ॥ ३८ ॥ हतः को न महत्स्वीश जन्तुर्वै कृतकिल्बिषः ॥ क्षेमी स्यात्किमु विश्वेशे कृतागस्को जगद्गुरौ ॥ ३९ ॥ य एवमव्याकृतशक्त्युदन्वतः परस्य साक्षात्परमात्मनो हरेः ॥ गिरित्रमोक्षं कथयेच्छृणोति वा विमुच्यते संसृतिभिस्तथाऽरिभिः ॥ ४० ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे रुद्रमोक्षणं नामाष्टाशीतितमोऽध्यायः ॥ ८८ ॥

श्रीशुक उवाच ॥ सरस्वत्यास्तटे राजन्नृषयः सत्रमासत ॥ वितर्कः समभूत्तेषां त्रिष्वधीशेषु को महान् ॥ १ ॥ तस्य जिज्ञासया ते

लागे र महादेव त्यस भयंकर सङ्कटबाट मुक्त भए ॥३७॥ अनि विष्णु भगवान्ले भय-मुक्त शङ्करजीसित भन्नुभयो—'हे देव-देव ! यो दुष्ट आफ्नै पापले मारियो। महापुरुषको अपराध गर्ने कुनै पनि प्राणी सकुशल रहन सक्तैन भने जगद्गुरु श्रीविश्वेश्वरको अपराध गर्नेको विषयमा के भन्ने ?' ॥ ३८ ॥ ३९ ॥ जो पुरुष मन र वाणी आदिको विषयबाट पृथक्, शक्तिहरूका समुद्र एवं प्रकृति आदिबाट श्रीविष्णु भगवान् द्वारा गरिएका यो शम्भु-मोचन चरित्रलाई भन्दछ या सुन्दछ, त्यो संसारका सबै बन्धन तथा शत्रुहरूको भयबाट मुक्त हुन्छ ॥४०॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे नेपाली भाषाटीकायां अष्टाशीति तमोऽध्यायः ॥ ८८ ॥

( भृगु मुनिद्वारा ब्रह्मा, विष्णु र शिवको परीक्षा र भगवान् द्वारा महाकालपुरबाट ब्राह्मणका बालकहरू ल्याउनु )—श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! केही ऋषिगण एक पल्ट सरस्वती नदीको तटमा यज्ञ गर्दै थिए। तिनमा यो विचार चल्यो—ब्रह्मा, विष्णु तथा शिव यिनमा सबैभन्दा ठुला, कुन देवता छन् ॥१॥ हे नृप ! यस जिज्ञासाले तिनले

ब्रह्माका पुत्र महर्षि भृगुलाई उनको परीक्षा लिनका निमित्त पठाए । तदनुसार महर्षि भृगु पहिले ब्रह्माजीको सभामा गए ॥२॥ ब्रह्माजीको बानी जाँच्नका लागि उनले नमस्कार, स्तुति केही पनि गरेनन् । अतः ब्रह्माजी आफ्नू तेजले प्रज्वलित भएर मनमनै अत्यन्त क्रोधित भए ॥३॥ तर आफ्नू पुत्रप्रति उत्पन्न रिस पितामह ब्रह्माजीले मनमनै थिचेर शान्त पारिदिए, जस्तै—तेजस्स्वभावाट उत्पन्न जलले अग्नि शान्त हुन्छ ॥ ४ ॥ अनि भृगुऋषि कैलाश पुगे । आफ्ना भाइ महर्षि भृगु आएका देखेर महादेव निकै आनन्दित भएर तत्काल उठी उनलाई अङ्कमाल गर्न हात उचाले, तर भृगुले भने—'तिमी कुमार्गगामी हौ ।' यति भनेर जब उनले अंकमाल गर्न अनिच्छा प्रकट गरे, तब महादेवलाई झनक रिस उठ्यो र आफ्ना तीक्ष्ण दृष्टिले हेर्दै त्रिशूल उठाएर उनलाई मार्न अघिसरे ॥ ५ ॥ ६ ॥ अनि पार्वतीले पाउ समातेर शिवलाई नम्रवाणीले शान्त पारिन् । अनि भृगुजी त्यहाँबाट वैकुण्ठधाम गए, जहाँ विष्णु भगवान् विराजमान छन् ॥ ७ ॥ त्यस बेला भगवान् लक्ष्मीको काखमा शिर राखेर पल्टेका थिए । पुग्नासाथ भृगुले उनको वक्षस्थलमा एक लात हाने । साधु पुरुषका

वै भृगुं ब्रह्मसुतं नृप ॥ तज्ज्ञप्त्यै प्रेषयामासुः सोऽभ्यगाद् ब्रह्मणः सभाम् ॥ २ ॥ न तस्मै प्रह्वणं स्तोत्रं चक्रे सत्त्वपरीक्षया ॥ तस्मै चुक्रोध भगवान्प्रज्वलन्स्वेन तेजसा ॥ ३ ॥ स आत्मन्युत्थितं मन्युमात्मजायात्मना प्रभुः ॥ अशीशमद्यथा वह्निं स्वयोन्या वारिणाऽऽत्मभूः ॥ ४ ॥ ततः कैलासमगमत्स तं देवो महेश्वरः ॥ परिरब्धुं समारेभ उत्थाय भ्रातरं मुदा ॥ ५ ॥ नैच्छत्त्वमस्युत्पथग इति देवश्चुकोप ह ॥ शूलमुद्यम्य तं हन्तुमारेभे तिग्मलोचनः ॥ ६ ॥ पतित्वा पादयोर्देवी सान्त्वयामास तं गिरा ॥ अथो जगाम वैकुण्ठं यत्र देवो जनार्दनः ॥ ७ ॥ शयानं श्रिय उत्सङ्गे तदा वक्षस्यताडयत् ॥ तत उत्थाय भगवान्सह लक्ष्म्या सतां गतिः ॥ ८ ॥ स्वतल्पादवरुह्याथ ननाम शिरसा मुनिम् ॥ आह ते स्वागतं ब्रह्मन्निषीदात्रासने क्षणम् ॥ अजानतामगतान्वः क्षन्तुमर्हथ नः प्रभो ॥ ९ ॥ अतीव कोमलौ तात चरणौ ते महामुने ॥ वज्रकर्कशमद्वक्षःस्पर्शेन परिपीडितौ ॥ इत्युक्त्वा विप्रचरणौ मर्दयन्स्वेन पाणिना ॥ १० ॥ पुनीहि सहलोकं मां लोकपालांश्च मद्गतान् ॥ पादोदकेन भवतस्तीर्थानां तीर्थकारिणा ॥ ११ ॥ अद्याहं भगवँल्लक्ष्म्या आसमेकान्तभाजनम् ॥ वत्स्यत्युरसि मे भूतिर्भवत्पादहतांहसः ॥ १२ ॥ श्रीशुक उवाच ॥ एवं ब्रुवाणे वैकुण्ठे भृगुस्तन्मन्द्रया गिरा ॥ निर्वृतस्तर्पितस्तूष्णीं भक्त्युत्कण्ठोऽश्रुलोचनः ॥ १३ ॥ पुनश्च सत्रमाव्रज्य मुनीनां ब्रह्मवादिनाम् ॥ स्वानुभूतमशेषेण

एकमात्र गति भगवान् लक्ष्मी सहित जुरुक्क उठे । अनि शय्याबाट ओर्लेर भृगुलाई शिर न्युराई प्रणाम गरेर भने—'हे ब्रह्मन् ! हे ऋषे ! म हजुरको स्वागत गर्दछु । आउनोस् एकछिन आसनमा बस्नोस् । हामीलाई हजुर यसरी आउने थाहा थिएन, हाम्रो धृष्टता क्षमा गर्नुहवस् ॥ ८ ॥ ९ ॥ मुनिराज ! हजुरका चरण अत्यन्त कोमल छन् र मेरो वक्षःस्थल वज्रसमान कठोर छ । त्यसको स्पर्शले यी पाउमा निकै पीडा भयो होला' यति भनेर भृगुका पाउ आफ्ना हातले मुसार्दै भन्नलागे—॥१०॥ हे ऋषे ! हजुरको चरणोदक तीर्थलाई पनि पवित्र पार्दछ । त्यसैले हजुर वैकुण्ठ समेत ममा स्थित सबै लोकपालहरूलाई पवित्र पार्नुहवस् ॥ ११ ॥ हे भगवन् ! हजुरको चरणस्पर्शले मेरा सबै पाप नष्ट भए । अतः लक्ष्मी मेरो हृदयमा सर्वदा विराजमान रहने छन् । अब म लक्ष्मीको एकमात्र आश्रयस्थान भएँ ॥ १२ ॥ शुकदेवजी भन्दछन्—हे राजन् ! यसरी भगवान्‌ले भनेपछि भृगु मुनि

12.46

आनन्दित र तृप्त भएर मौन भए। भक्तिको उद्रेकले उनको हृदय गद्गद भयो र नेत्रमा जल भरिएर आयो ॥ १३ ॥ हे राजन्! त्यहाँबाट यज्ञभूमिमा आएर उनले वेदवादी मुनिहरूका समक्ष आफ्नू अनुभव सुनाए ॥ १४ ॥ सबै कुरा सुनेर मुनीश्वरहरूलाई विस्मय भयो र उनको भ्रम नष्ट भयो। त्यसै बेला देखि ती सर्वश्रेष्ठ देवता विष्णु भगवानमै विशेष श्रद्धा राख्न लागे, जसबाट शान्ति र अभयको उद्गम हुन्छ ॥ १५ ॥ जसबाट साक्षात् धर्म, ज्ञान र उसले युक्त वैराग्य, आठ थरिका सिद्धिहरू तथा चित्तको मलिनता निवारण गर्ने सुयश प्राप्त हुन्छ ॥ १६ ॥ जसलाई शान्त, समचित्त, अकिञ्चन र सबैलाई अभय दिने साधुजनका परमगति मानिएको छ ॥ १७ ॥ सत्त्व जसको प्रियमूर्ति छ, ब्राह्मण जसका इष्टदेव छन् र निष्काम, ज्ञान र निपुण बुद्धि हुने पुरुष नित्य जसको भजन गर्दछन् ॥ १८ ॥ जसका तीन मूर्ति छन्—राक्षसी, आसुरी र दैवी। यी तीनै मूर्तिहरू उनकी गुणमयी मायाले रचित छन्। इनमा पनि सत्वमयी देवमूर्ति नै पुरुषार्थरूपी छन् र तिनै उनको प्राप्तिका साधन कहिन्छिन् ॥१९॥ शुकदेवजी भन्दछन्—हे राजन्! मनुष्यका

राजन्भृगुरवर्णयत् ॥ १४ ॥ तन्निशम्याथ मुनयो विस्मिता मुक्तसंशयाः ॥ भूयांसं श्रद्दधुर्विष्णुं यतः शान्तिर्यतोऽभयम् ॥ १५ ॥ धर्मः साक्षाद्यतो ज्ञानं वैराग्यं च तदन्वितम् ॥ ऐश्वर्यं चाष्टधा यस्माद्यशश्चात्ममलापहम् ॥ १६ ॥ मुनीनां न्यस्तदण्डानां शान्तानां समचेतसाम् ॥ अकिञ्चनानां साधूनां यमाहुः परमां गतिम् ॥ १७ ॥ सत्त्वं यस्य प्रिया मूर्तिर्ब्राह्मणास्त्विष्टदेवताः ॥ भजन्त्यनाशिषः शान्ता यं वा निपुणबुद्धयः ॥१८॥ त्रिविधाकृतयस्तस्य राक्षसा असुराः सुराः ॥ गुणिन्या मायया सृष्टा सत्त्वं तत्तीर्थसाधनम् ॥ १९ ॥ श्रीशुक उवाच ॥ एवं सारस्वता विप्रा नृणां संशयनुत्तये ॥ पुरुषस्य पदाम्भोजसेवया तद्गतिं गताः ॥ २० ॥ सूत उवाच ॥ इत्येतन्मुनितनयास्यपद्मगन्धपीयूषं भवभयभित्परस्य पुंसः ॥ सुश्लोकं श्रवणपुटैः पिबत्यभीक्ष्णं पान्थोऽध्वभ्रमणपरिश्रमं जहाति ॥ २१ ॥ श्रीशुक उवाच ॥ एकदा द्वारवत्यां तु विप्रपत्न्याः कुमारकः ॥ जातमात्रो भुवं स्पृष्ट्वा ममार किल भारत ॥ २२ ॥ विप्रो गृहीत्वा मृतकं राजद्वार्युपधाय सः ॥ इदं प्रोवाच विलपन्नातुरो दीनमानसः ॥ २३ ॥ ब्रह्मद्विषः शठधियो लुब्धस्य विषयात्मनः ॥ क्षत्रबन्धोः कर्मदोषात्पञ्चत्वं मे गतोऽर्भकः ॥ २४ ॥ हिंसाविहार नृपतिं दुःशीलमजितेन्द्रियम् ॥ प्रजा भजन्त्यः सीदन्ति दरिद्रा नित्यदुःखिताः ॥ २५ ॥ एवं द्वितीयं विप्रर्षिस्तृतीयं त्वेवमेव च ॥ विसृज्य स नृपद्वारि तां गाथां समगायत ॥ २६ ॥ तामर्जुन

संशय हटाउन सरस्वतीतट निवासी ब्राह्मणहरूले यस्तो निर्णय गरेर विष्णुको चरणसेवा गरेर अन्त्यमा परमपद पाए ॥२०॥ सूतजी भन्दछन्—हे शौनक! व्यासतनय शुकदेवजीको मुख-कमलबाट चुहेको र सांसारिक भयको निवारण गर्ने परमपुरुष श्रीकृष्णको सुगन्धित सुयश-सुधालाई जो संसारपथको पथिक आफ्ना कर्णपुटबाट नित्य पान गर्दछन्, ती सदाको निम्ति संसारपथको भ्रमणजनित श्रमले मुक्त हुन्छन् ॥ २१ ॥ शुकदेवजी भन्दछन्—हे भारत! एकपल्ट द्वारकामा कुनै ब्राह्मणीको पुत्र जन्मेर पृथ्वीको स्पर्श हुनासाथ मऱ्यो ॥ २२ ॥ अनि ती ब्राह्मणले बालकको शव लगेर उग्रसेनको द्वारमा राखिदिए र अत्यन्त दुःखी हृदयले विलाप गर्दै भने—॥ २३ ॥ यी ब्राह्मण-द्रोही, लोभी तथा विषयी क्षत्रियाधमका कर्मदोषले नै आज मेरो बालक मरेको हो ॥ २४ ॥ जो प्रजा-हिंसक, दुःशील र अजितेन्द्रिय राजाको सेवा गर्दछ, त्यो सदा दरिद्र तथा नित्य दुःखित रहेर

अनेक थरिका क्लेश भोग्दछन् ॥ २५ ॥ हे राजन् ! यसै गरी ती ब्राह्मण श्रेष्ठले आफ्नो दोस्रो र तेस्रो बालक जन्मनासाथ मरेर तिनलाई पनि राजद्वारमा राखिदिए र हरेक पल्ट त्यही कुरा सुनाए ॥ २६ ॥ त्यसै गरी उनको नवौं बालक पनि मऱ्यो र उही पुरानो गाथा सुनेर श्रीकृष्णको नजीकै बसेका अर्जुनले ब्राह्मणसित भने–॥ २७ ॥ हे ब्रह्मन् ! के हजुरको निवासस्थान द्वारकापुरीमा कोही पनि धनुर्धर क्षत्रिय छैनन् ! के यी सबै यादव यज्ञ गर्ने ब्राह्मण हुन् ? ॥ २८ ॥ जसको राज्यमा ब्राह्मण धन र स्त्री-पुत्रादिले वियुक्त भएर शोक गर्दछन्, ती राजा क्षत्रियको वेशमा आफ्नू प्राणपोषण गर्ने नट झैं बाँच्तछन् ॥२९॥ हे भगवन् ! पुत्र-वियोगले कातर हजुर दुवै विप्र स्त्री-पुरुषका सन्तानको रक्षा म स्वयं गर्दछु । यदि मैले यो प्रतिज्ञा पूर्ण पार्न सकिन भने आगोमा डढेर निष्पाप हुनेछु ॥ ३० ॥ ब्राह्मणले भने—हे अर्जुन ! श्रीबलराम, भगवान् कृष्ण, धनुर्धरहरूमा श्रेष्ठ प्रद्युम्न र अनुपम रथी अनिरुद्ध पनि जब तिनको रक्षा गर्न असमर्थ भए भने यो जगदीश्वरबाट पनि हुन नसक्ने काम तिमी गर्न खोज्दैछौ ? मलाई तिम्रो कुरा मूर्खता जस्तै

उपश्रुत्य कर्हिचित्केशवान्तिके ॥ परेते नवमे बाले ब्राह्मणं समभाषत ॥ २७ ॥ किंस्विद्ब्रह्मँस्त्वन्निवासे इह नास्ति धनुर्धरः ॥ राजन्यबन्धुरेते वै ब्राह्मणाः सत्रमासते ॥ २८ ॥ धनदारात्मजापृक्ता यत्र शोचन्ति ब्राह्मणाः ॥ ते वै राजन्यवेषेण नटा जीवन्त्यसुम्भराः ॥२९ ॥ अहं प्रजा वां भगवन्रक्षिष्ये दीनयोरिह ॥ अनिस्तीर्णप्रतिज्ञोऽग्निं प्रवेक्ष्ये हतकल्मषः ॥ ३० ॥ ब्राह्मण उवाच ॥ सङ्कर्षणो वासुदेवः प्रद्युम्नो धन्विनां वरः ॥ अनिरुद्धोऽप्रतिरथो न त्रातुं शक्नुवन्ति यत् ॥ ३१ ॥ तत्कथं नु भवान्कर्म दुष्करं जगदीश्वरैः ॥ चिकीर्षसि त्वं बालिश्यात्तन्न श्रद्दध्महे वयम् ॥३२॥ अर्जुन उवाच ॥ नाहं सङ्कर्षणो ब्रह्मन्न कृष्णः कार्ष्णिरेव च ॥ अहं वा अर्जुनो नाम गाण्डीवं यस्य वै धनुः ॥ ३३ ॥ मावमंस्था मम ब्रह्मन्वीर्यं त्र्यम्बकतोषणम् ॥ मृत्युं विजित्य प्रधने आनेष्ये ते प्रजाः प्रभो ॥ ३४ ॥ एवं विश्रम्भितो विप्रः फाल्गुनेन परंतप ॥ जगाम स्वगृहं प्रीतः पार्थवीर्यं निशामयन् ॥३५॥ प्रसूतिकाल आसन्ने भार्याया द्विजसत्तमः ॥ पाहि पाहि प्रजां मृत्योरित्याहार्जुनमातुरः ॥ ३६ ॥ स उपस्पृश्य शुच्यम्भो नमस्कृत्य महेश्वरम् ॥ दिव्यान्यस्त्राणि संस्मृत्य सज्यं गाण्डीवमाददे ॥ ३७ ॥ न्यरुणत्सूतिकागारं शरैर्नानास्त्रयोजितैः ॥ तिर्यगूर्ध्वमधः पार्थश्चकार शरपञ्जरम् ॥३८॥ ततः कुमारः संजातो विप्रपत्न्या रुदन्मुहुः ॥ सद्यो दर्शनमापेदे सशरीरो विहायसा ॥३९॥ तदाह विप्रो विजयं विनिन्दन्कृष्ण-

लागिरहेको छ र पत्यार पनि परिरहेको छैन ॥ ३१ ॥ ३२ ॥ विजयले भने—हे ब्रह्मन् ! म बलराम, कृष्ण अथवा कृष्णका पुत्र प्रद्युम्न होइन । म अर्जुन हुँ, जोसित सदा गाण्डीव धनुष रहिरहन्छ ॥ ३३ ॥ हे विप्र ! श्रीमहादेवलाई पनि सन्तुष्ट पार्ने मेरो पराक्रमको तिमी अपमान नगर । हे प्रभो ! म युद्धमा मृत्युलाई पनि जितेर तिम्रा मरेका बालकलाई परलोकबाट ल्याउँछु ॥ ३४ ॥ हे राजन् ! धनंजय द्वारा यसरी आश्वासित गरिएपछि ती ब्राह्मण प्रसन्न भएर उनको पुरुषार्थको कुराहरू वर्णन गर्दै आफ्नू घर फर्किए ॥ ३५ ॥ यसपल्ट जब उनकी स्त्रीको प्रसवकाल आयो, तब उनले अत्यन्त आतुर भएर अर्जुनसित भने—'हे पार्थ ! तिमी मेरो सन्तानलाई मृत्युको मुखबाट बचाऊ ॥३६॥ उनले पवित्र जलले आचमन गरेर शंकरलाई नमस्कार गरी आफ्नू दिव्यास्त्रको स्मरण गरी ताँदो कसेको गाण्डीव धनुष हातमा लिए ॥ ३७ ॥ त्यसपछि अनेक थरिका

अथ मन्त्रप्रयुक्त बाणद्वारा उनले सूतिका-गृहलाई चारैतिरबाट ढाके। यसरी धनञ्जयले यता-उता, तल-माथि सबैतिर बाणको पिञ्जरा जस्तै बनाइदिए ॥ ३८ ॥ अनि ती ब्राह्मणीको गर्भबाट बालक उत्पन्न भयो तर त्यो बारम्बार रोई तत्काल त्यो सशरीर आकाशमा अन्तर्धान भयो ॥३९॥ अनि ती विप्रले श्रीकृष्णकहाँ गएर उनका प्रिय सखाको निन्दा गर्दै भने— 'मेरो मूर्खता हेर, मैले यस नपुंसकको आत्म प्रशंसायुक्त वचनमा विश्वास गरें ॥ ४० ॥ प्रद्युम्न, अनिरुद्ध, बलराम तथा कृष्ण आदि कोही पनि जसको रक्षा गर्न समर्थ भएनन् भने त्यसलाई बचाउन को समर्थ हुनसक्दछ ? ॥४१ ॥ जुन बुद्धिहीन मनुष्य दैवद्वारा हरिएका बालकहरूलाई फेरि फर्काई ल्याउन खोज्दछ, त्यस मिथ्यावादी तथा आफ्नै मुखले आफ्नू प्रशंसा गर्ने विजय र उसको गाण्डीव धनुषलाई धिक्कार छ ॥४२॥ ती ब्राह्मणले यसरी कुवाक्य भनेपछि पार्थ आफ्नू योगबलले संयमनीपुरी गए, जहाँ स्वयं भगवान् यमराज बस्तछन् ॥४३॥ त्यहाँ पनि ती ब्राह्मणका बालकलाई नदेखेर वीर धनञ्जय हातमा शस्त्रास्त्र लिई निऋति, सोम, वायु तथा अग्नि वरुणादिका पुरी, अतलादि तलका लोक, स्वर्गभन्दा माथि

सन्निधौ ॥ मौढ्यं पश्यत मे योऽहं श्रद्दधे क्लीवकत्थनम् ॥४०॥ न प्रद्युम्नो नानिरुद्धो न रामो न च केशवः ॥ यस्य शेकुः परित्रातुं कोऽन्यस्तदवितेश्वरः ॥४१॥ धिगर्जुनं मृषावादं धिगात्मश्लाघिनो धनुः ॥ दैवोपसृष्टं यो मौढ्यादानिनीषति दुर्मतिः ॥ ४२ ॥ एवं शपति विप्रर्षौ विद्यामास्थाय फाल्गुनः ॥ ययौ संयमनीमाशु यत्रास्ते भगवान्यमः ॥ ४३ ॥ विप्रापत्यमचक्षाणस्तत ऐन्द्रीमगात्पुरीम् ॥ आग्नेयीं नैर्ऋतीं सौम्यां वायव्यां वारुणीमथ ॥ रसातलं नाकपृष्ठं धिष्ण्यान्यान्युदायुधः ॥ ४४ ॥ ततोऽलब्धद्विजसुतो ह्यनिस्तीर्णप्रतिश्रुतः ॥ अग्निं विविक्षुः कृष्णेन प्रत्युक्तः प्रतिषेधता ॥४५॥ दर्शये द्विजसूनूंस्ते मावज्ञात्मानमात्मना ॥ एते हि कीर्तिं विमलां मनुष्याः स्थापयिष्यन्ति हि ॥४६॥ इति संभाष्य भगवानर्जुनेन सहेश्वरः ॥ दिव्यं स्वरथमास्थाय प्रतीचीं दिशमाविशत् ॥४७॥ सप्तद्वीपान् सप्तसिन्धून् सप्तसप्तगिरीनथ ॥ लोकालोकं तथाऽतीत्य विवेश सुमहत्तमः ॥४८॥ तत्राश्वाः शैब्यसुग्रीवमेघपुष्पबलाहकाः ॥ तमसि भ्रष्टगतयो बभूवुर्भरतर्षभ ॥ ४९ ॥ तान्दृष्ट्वा भगवान्कृष्णो महायोगेश्वरेश्वरः ॥ सहस्रादित्यसंकाशं स्वचक्रं प्राहिणोत्पुरः ॥५०॥ तमः सुघोरं गहनं कृतं महद्विदारयद्भूरितरेण रोचिषा ॥ मनोजवं निर्विविशे सुदर्शनं गुणच्युतो रामशरो

महर्लोकादिमा पनि गए ॥ ४४ ॥ कहीं पनि ब्राह्मणका बालक नपाई आफ्नू प्रतिज्ञा अपूर्ण हुनाले उनी अग्निमा प्रवेश गर्ने विचार गरे, तर तत्काल दयालु भगवान् श्रीकृष्णचन्द्रले तिनलाई अहिल्यै यस्तो नगर भनी रोकिदिए ॥४५॥ भगवान् भन्नुहुन्छ—'म तिमीलाई ती ब्राह्मणका बालकहरू देखाउँछु। तिमी यसरी स्वयं आफ्नू अवज्ञा नगर। एक दिन यी तिम्रा निन्दकहरू नै हाम्रो कीर्तिको बखान गर्नेछन्' ॥ ४५ ॥ सर्वसमर्थ भगवान् कृष्ण यसरी आफ्ना सखा पार्थसित कुरा गरेर उनीसितै आफ्नू दिव्य रथमा आरूढ भएर पश्चिम दिशातिर हिंडे ॥४७॥ उनले सात पर्वत भएका सात द्वीप, सात समुद्र तथा लोकालोक पर्वत छिचलेर महान् अन्धकारमा प्रवेश गरे ॥ ४८ ॥ हे भरतश्रेष्ठ ! त्यस घोर अन्धकारमा उनका शैब्य, सुग्रीव, मेघपुष्प र बलाहक नामका अश्व यता-उता अडमलिन लागे ॥ ४९ ॥ तिनको अवस्था देखेर योगेश्वर भगवान् कृष्णचन्द्रले आफ्नू हजार सूर्य जस्तै देदीप्यमान सुदर्शन चक्र अघि लगाइदिए ॥५०॥ आफ्नू अत्यधिक तेजले त्यो घोर अन्धकारलाई परसम्म विदीर्ण पार्दै त्यो सुदर्शन चक्र मनको समान अति तीव्र गतिले यस प्रकार अन्धकारमा

प्रविष्ट भयो, जस्तै—धनुषको ताँदोबाट छुटेको रामबाण शत्रुसेनामा प्रविष्ट हुन्थ्यो ॥ ५१ ॥ सुदर्शन चक्रद्वारा देखाइएको बाटोबाट जाँदा अर्जुनले अन्धकारको पारीपट्टि उत्तम तथा अनन्त एवं व्यापक ज्योति देखेर आफ्ना तिरमिरिएका दुवै नेत्र चिम्ले ॥५२॥ अनि उनले प्रबल वायुद्वारा क्षुब्धमान ठूला-ठूला तरङ्ग हुने अगाध जलमा प्रवेश गरे। त्यहाँ हजारौँ तेजवान् मणिमय स्तम्भहरूले सुशोभित र बर्ता देदीप्यमान थोटा अद्भुत भवन थियो ॥ ५३ ॥ त्यस भवनमा आश्चर्यजनक र डरलाग्दो आफ्ना सहस्र मस्तकका मणिहरूको कान्तिले शोभायमान, ती देखि दोब्बर उग्र नेत्रयुक्त, कैलाश पर्वत झैँ श्वेतवर्ण, श्यामकण्ठ र कालो जिब्रा हुने शेष बसेका थिए ॥५४॥ पार्थले देखे—उनका देहको सुखमयी शय्यामा सर्वव्यापक महाप्रभावशाली पुरुषोत्तम भगवान् बसेका छन्। स्निग्ध मेघ झैँ उनका अङ्गको कान्ति छ। उनले पीताम्बर धारण गरेका छन्। उनको मुखकमल अत्यन्त प्रसन्न छ अनि दुवै नेत्र अति राम्रा र विशाल छन् ॥५५॥ अमूल्य मणिहरूले सुशोभित उनको मुकुट तथा कुण्डलको कान्तिले उनको घुँगुरिएको अलकावली टल्किरहेको छ। उनका लामा-लामा एवं राम्रा

यथा चमूः ॥ ५१ ॥ द्वारेण चक्रानुपथेन तत्तमः परं परं ज्योतिरनन्तपारम् ॥ समश्नुवानं प्रसमीक्ष्य फाल्गुनः प्रताडिताक्षोऽपिदधेऽक्षिणी उभे ॥ ५२ ॥ ततः प्रविष्टः सलिलं नभस्वता बलीयसैजद्बृहदूर्मिभूषणम् ॥ तत्राद्भुतं वै भवनं द्युमत्तमं भ्राजन्मणिस्तम्भसहस्रशोभितम् ॥५३॥ तस्मिन्महाभीममनन्तमद्भुतं सहस्रमूर्धन्यफणामणिद्युभिः ॥ विभ्राजमानं द्विगुणोल्बणेक्षणं सिताचलाभं शितिकण्ठजिह्वम् ॥ ५४ ॥ ददर्श तद्भोगसुखासनं विभुं महानुभावं पुरुषोत्तमोत्तमम् ॥ सान्द्राम्बुदाभं सुपिशङ्गवाससं प्रसन्नवक्त्रं रुचिरायतेक्षणम् ॥ ५५ ॥ महामणिव्रातकिरीटकुण्डलप्रभापरिक्षिप्तसहस्रकुन्तलम् ॥ प्रलम्बचार्वष्टभुजं सकौस्तुभं श्रीवत्सलक्ष्म्या वनमालयावृतम् ॥ ५६ ॥ सुनन्दनन्दप्रमुखैः स्वपार्षदैश्चक्रादिभिर्मूर्तिधरैर्निजायुधैः ॥ पुष्ट्या श्रिया कीर्त्यजयाखिलर्धिभिर्निषेव्यमाणं परमेष्ठिनां पतिम् ॥ ५७ ॥ ववन्द आत्मानमनन्तमच्युतो जिष्णुश्च तद्दर्शनजातसाध्वसः ॥ तावाह भूमा परमेष्ठिनां प्रभुर्बद्धाञ्जली सस्मितमूर्जया गिरा ॥ ५८ ॥ द्विजात्मजा मे युवयोर्दिदृक्षुणा मयोपनीता भुवि धर्मगुप्तये ॥ कलावतीर्णाववनेर्भरासुरान्हत्वेह भूयस्त्वरयेतमन्ति मे ॥ ५९ ॥ पूर्णकामावपि युवां नरनारायणावृषी ॥ धर्ममाचरतां स्थित्यै ऋषभौ लोकसंग्रहम् ॥ ६० ॥ इत्यादिष्टौ भगवता तौ कृष्णौ परमेष्ठिना ॥ ओमित्यानम्य भूमानमादाय द्विजदारकान् ॥ ६१ ॥ न्यवर्तेतां स्वकं धाम संप्रहृष्टौ यथागतम् ॥ विप्राय

आठ बाहु छन्। उनको वक्षस्थल कौस्तुभमणि, श्रीवत्सको शोभा र वनमालाले आवृत्त छ ॥ ५६ ॥ ती ब्रह्मादि लोकपालका अधीश्वर नन्द-सुनन्दादि पार्षदगण, स्वयं मूर्तिमान् चक्रादि आयुध तथा पुष्टि, कीर्ति, श्री एवं अजा आदि शक्तिहरू तथा ऋद्धि-सिद्धि द्वारा सेवित छन् ॥५७॥ भगवान् कृष्णले ती आफ्नै स्वरूप अनन्त भगवान्लाई प्रणाम गरेर उनको प्रत्यक्ष दर्शनले भयाकुल पार्थले पनि नमस्कार गरे। त्यसरी हात जोरेर उभिएका कृष्ण र पार्थसित ब्रह्मादि लोकपालका प्रभु सर्वव्यापक पुरुषोत्तम भगवान्ले हाँस्तै मेघ झैँ गम्भीर वाणीमा भन्नुभयो—॥५८॥ तिमी दुवैलाई हेर्नको निम्ति नै मैले ती विप्रका बालक हरेको हुँ। तिमी दुवैले धर्मको रक्षा गर्न नै मेरा कलाहरूले पृथ्वीमा अवतार लियौ। अब भूमिका भारभूत असुर राजाहरूको वध गरेर फेरि मकहाँ शीघ्र आऔ ॥ ५९ ॥ तिमी दुवै यद्यपि ऋषिवर नर-नारायण तथा पूर्णकाम छौ तापनि जगत्को स्थिति र लोकसंग्रहको निम्ति धर्मको

12.50

आचरण गर ॥६०॥ जगद्गुरु विष्णु भगवान्ले यसरी आज्ञा दिएपछि श्रीकृष्ण र अर्जुनले 'हुन्छ' भनेर ती भूमा भगवान्लाई प्रणाम गरी ती ब्राह्मणका बालकहरू लिएर अत्यन्त आनन्दपूर्वक जुन बाटोबाट गएका थिए, त्यसैबाट फेरि ती ब्राह्मणलाई उनका छोरा यथोचित उमेर तथा रूपले युक्त सुम्पिदिए ॥ ६१ ॥ ६२ ॥ भगवान् विष्णुको दिव्यरूप तथा परमधाम देखेर धनञ्जयलाई निकै विस्मय भयो र उनले बुझे—मनुष्यमात्रमा जे जति पुरुषार्थ छ, त्यो सबै भगवान्कै कृपा हो ॥ ६३ ॥ हे राजन् ! यस प्रकार अनेक थरिका अरु पुरुषार्थ देखाउँदै भगवान् कृष्णले ग्राम्य विषयको भोग गर्दै ठूला-ठूला अनेक यज्ञको अनुष्ठान गरे ॥ ६४ ॥ उनले इन्द्र झैं श्रेष्ठता प्राप्त गरेर ब्राह्मणादि चारै वर्णका सबै कामनाहरू यथा समय पूर्ण पारे । ६५॥ उनले अधार्मिक राजाहरूलाई स्वयं मारे तथा सखा पार्थद्वारा मार्न लगाई युधिष्ठिर आदि धार्मिक राजाहरू द्वारा पुनः धर्मको स्थापना गराए ॥ ६६ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषाटीकायां एकोननवतितमोऽध्यायः ॥ ८९ ॥

ददतुः पुत्रान्यथारूपं यथावयः ॥ ६२ ॥ निशाम्य वैष्णवं धाम पार्थः परमविस्मितः ॥ यत्किञ्चित्पौरुषं पुंसां मेने कृष्णानुकम्पितम् ॥ ६३ ॥ इतीदृशान्यनेकानि वीर्याणीह दर्शयन् ॥ बुभुजे विषयान्ग्राम्यानीजे चात्युर्जितैर्मखैः ॥ ६४ ॥ प्रववर्षाखिलान्कामान्प्रजासु ब्राह्मणादिषु ॥ यथाकालं यथैवेन्द्रो भगवाञ्छ्रैष्ठ्यमास्थितः ॥ ६५ ॥ हत्वा नृपानधर्मिष्ठान्घातयित्वार्जुनादिभिः ॥ अञ्जसा वर्तयामास धर्मं धर्मसुतादिभिः ॥६६॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे द्विजकुमारानयनं नाम एकोननवतितमोऽध्यायः ॥ ८९ ॥

श्रीशुक उवाच ॥ सुखं स्वपुर्यां निवसन्द्वारकायां श्रियः पतिः ॥ सर्वसंपत्समृद्धायां जुष्टायां वृष्णिपुङ्गवैः ॥१॥ स्त्रीभिश्चोत्तमवेषाभिर्नवयौवनकान्तिभिः ॥ कन्दुकादिभिर्हर्म्येषु क्रीडन्तीभिस्तडिद्द्युभिः ॥२॥ नित्यं संकुलमार्गायां मदच्युद्भिर्मतङ्गजैः ॥ स्वलंकृतैर्भटैरश्वै रथैश्च कनकोज्ज्वलैः ॥३॥ उद्यानोपवनाढ्यायां पुष्पितद्रुमराजिषु ॥ निर्विशद्भृङ्गविहगैर्नादितायां समन्ततः । ४॥ रेमे षोडशसाहस्रपत्नीनामेकवल्लभः ॥ तावद्विचित्ररूपोऽसौ तद्गृहेषु महर्द्धिषु ॥५॥ प्रोत्फुल्लोत्पलकह्लारकुमुदाम्भोजरेणुभिः ॥ वासितामलतोयेषु कूजद्द्विजकुलेषु च ॥६॥ विजहार विगाह्याम्भो ह्रदिनीषु महोदयः ॥ कुचकुंकुमलिप्ताङ्गः परिरब्धश्च योषिताम् ॥७॥ उपगीयमानो गन्धर्वैर्मृदङ्गपणवानकान् ॥ वादयद्भिर्मुदा वीणां सूतमागधवन्दिभिः ॥८॥ सिच्यमानोऽच्यु-

( श्रीकृष्णका लीलाहरूको वर्णन ) श्रीशुकदेव भन्दछन्—हे राजन् ! जुन पुरीका सडक मदस्रावी हात्तीहरू, वस्त्राभूषणले सजित शूरवीर, सजित अश्व र सुवर्ण निर्मित रथले नित्य भरिइरहन्थ्यो । जसमा सर्वतिर बगैंचा थिए, जहाँ पुष्पित वृक्षमा बसेका भ्रमर र पक्षिका कलरवले सर्वतिर कोलाहल भइरहेथ्यो, जो सबै सम्पदाले पूर्ण थियो, जसमा उत्तम यादवहरूको निवास थियो, जसमा आफाफ्ना महलमा कन्दुकादि खेल्ने बिजुली झैं द्युतिमति, नवयौवनाको कान्तिले सुशोभित र मनोहर वेषधारी भामिनीहरू यता उता घुमिरहन्थे, त्यस द्वारकापुरीमा सुखपूर्वक बस्ने सोह्र सहस्र पत्नीहरूका एकमात्र स्वामी भगवान् कृष्ण परमैश्वर्यले सम्पन्न ती सबै रानीहरूका महलमा उत्तिनै रूप धारण गरेर लीलित रमण गर्दथे ॥ १–५ ॥ ती घरमा फक्रेका पद्म, कह्लार, कुमुद र कमलको परागले सुगन्धित जलाशय थिए र तिनमा अनेक पक्षी बोलिरहेका थिए । महाऐश्वर्य सम्पन्न कृष्ण भगवान् तलाउमा जलको आलोडन गर्दै आफ्नी प्रियासित आलिङ्गित भएर तिनका कुचकुङ्कुमले आफ्नु देह अनुलिप्त पार्दै जल-विहार गर्दथे ॥ ६ ॥ ७ ॥ त्यसवेला गन्धर्वगण मृदङ्ग, पणव तथा नगरा

आदि बाजा बजाएर उनको यशोगान गर्दथे र सूत, मागध, वन्दीजन वीणा बजाई प्रसन्नतापूर्वक स्तुति गर्दथे ॥८॥ कुनै बेला भगवान्‌का रानीहरू हाँस्तै उनलाई पिचकारीले भिजाउँथे अनि उपनि तिनलाई भिजाएर यक्षराज कुबेर झैं क्रीडा गर्थे ॥ ९ ॥ वस्त्र भिज्नाले देखिने कुच र उरु भाग तथा बृहत् केशपाशमा लगाइएका, जसका फूल झरिसकेका थिए, ती कृष्ण-प्रियाहरू जब आफ्ना प्रियतमलाई भिजाउँदै पिचकारी खोस्न जान्थे तब उनीसित आलिङ्गित हुनाले तिनको मुख-कमल कामोद्दीपनको सूचना दिने भएको मन्द हाँसोले फक्रेर आउँथ्यो। अनि ती अत्यन्त सुशोभित हुन्थे ॥ १० ॥ यसरी आफ्नी प्रियाका कुच-कुङ्कुमले जसको वनमाला मुछिएको थियो र क्रीडामा आसक्त हुनाले जसको फुकेको आँठी झैं अलक हल्लिरहेथ्यो, ती भगवान् कृष्णचन्द्र पनि ती युवतीहरूलाई बारम्बार भिजाउँदै उनीद्वारा स्वयं भिजाइदैं उनीसित यसरी विहार गर्दथे, जस्तै अनेक हात्तिहरू द्वारा घेरिएको गजराजहोस् ॥ ११ ॥ यसरी क्रीडा गरिसकेर भगवान् कृष्ण र तिनका पत्नीहरू क्रीडाको निम्ति लगाएका लुगा र गहना, जसको आजीविका केवल गाना-बजाना मात्र थियो, ती नट र नटिनीहरूलाई दिन्थे ॥ १२ ॥ हे राजन् ! यसरी विहार गर्दै श्रीकृष्णको चाल, बोली, हेराई, हँसाई, परिहासोक्ति, विलास तथा विविध

तस्ताभिर्हसन्तीभिः स्म रेचकैः ॥ प्रतिसिञ्चन्विचिक्रीडे यक्षीभिर्यक्षराडिव ॥९॥ ताः क्लिन्नवस्त्रविवृतोरुकुचप्रदेशाः सिञ्चन्त्य उद्धृतबृहत्कबरप्रसूनाः ॥ कान्तं स्म रेचकजिहीरषयोपगुह्य जातस्मरोत्सवलसद्वदना विरेजुः ॥ १० ॥ कृष्णस्तु तत्स्तनविषज्जितकुंकुमस्रक् क्रीडाभिषङ्गधुतकुन्तलवृन्दबन्धः ॥ सिञ्चन्मुहुर्युवतिभिः प्रतिषिच्यमानो रेमे करेणुभिरिवेभपतिः परीतः ॥ ११ ॥ नटानां नर्तकीनां च गीतवाद्योपजीविनाम् ॥ क्रीडालङ्कारवासांसि कृष्णोऽदात्तस्य च स्त्रियः ॥ १२ ॥ कृष्णस्यैवं विहरतो गत्यालापेक्षितस्मितैः ॥ नर्मक्ष्वेलिपरिष्वंगैः स्त्रीणां किल हृता धियः ॥१३॥ ऊचुर्मुकुन्दैकधियो गिर उन्मत्तवज्जडम् ॥ चिन्तयन्त्योऽरविन्दाक्षं तानि मे गदतः शृणु ॥ १४ ॥ महिष्य ऊचुः ॥ कुररि विलपसि त्वं वीतनिन्द्रा न शेषे स्वपिति जगति रात्र्यामीश्वरो गुप्तबोधः ॥ वयमिव सखि कच्चिद्गाढनिर्भिन्नचेता नलिननयनहासोदारलीलेक्षितेन ॥ १५ ॥ नेत्रे निमीलयसि नक्तमदृष्टबन्धुस्त्वं रोरवीषि करुणं बत चक्रवाकि ॥ दास्यं गता वयमिवाच्युतपादजुष्टां किं वा स्रजं स्पृहयसे कबरेण वोढुम् ॥ १६ ॥ भो भोः सदा निष्टनसे उदन्वन्नलब्धनिद्रोऽधिगतप्रजागरः ॥ किं वा मुकुन्दापहृतात्मलांछनः प्राप्तां दशां त्वं च गतो दुरत्ययाम् ॥ १७ ॥ त्वं यक्ष्मणा बलवताऽसि

प्रकारका आलिंगनादिले ती कामिनी जनको मति हरिएको थियो ॥ १३ ॥ श्रीकृष्णको निम्ति उन्मत्त जस्तै रानीहरू कमलनयन कृष्णको नै चिन्तन गर्दै जड र उन्मत्त जस्तै जे वाक्य बोल्दथे, त्यो म भन्दछु सुन—॥ १४ ॥ रानीहरूले भने—तित्रा हो ! यो रातको बेला जब कि गुप्त बोध श्रीकृष्ण सुतेका छन्, तिमी पनि किन नसुतेकी ? के तिमीलाई निद्रा लाग्दैन र विलाप गरिरहेकी छौ ; हे सखी ! हामी जस्तै तेरो पनि हृदय कमल-नयन श्रीकृष्णको लीला-हास्यमय कटाक्ष-शरले घायल भएको छ ; ॥ १५ ॥ ए चक्रवाकी ! तैले रातमा किन आँखा चिम्लेकी ? आफ्ना प्रियतमलाई देख्न नपाएर नै तँ करुण स्वरले रोइरहेकी छस् ? हामी जस्तै तँ पनि उनै भगवान् कृष्णले पाउबाट झिकेको माला आफ्नु जूरोमा लाउन खोज्दैछस् ॥ १६ ॥ ए अग्ला तरंग उफार्ने समुद्र ! के तिमी कहिल्यै निदाउन्नौ सदा जागै रहन्छौ ? के भगवान् कृष्णद्वारा आफ्नु श्यामतारूपी चिह्न खोसिनाले तिमी यस दुर्दशामा पुगेका हौ र दिन-रात हाहाकार मचाइरहन्छौ ? ॥ १७ ॥ हे चन्द्रदेव ! तिमीलाई प्रबल क्षय रोगले थिचेको थियो

12.52

तैपनि तिमी आफ्नी प्रिया चाँदनीको बल पाएर सर्वदा क्षीण भएनौ । के हामी जस्तै तिमी पनि भगवान् कृष्णका मीठा-मीठा कुरा सुनेर आफ्नू अस्तित्व गुमाइरहेछौ र उनकै चिन्ताले क्षीण भएर तिमी मौन देखिइरहेका छौ ? ॥ १८ ॥ हे मलयमारुत ! हामीले तिम्रो के हानि गरिदियौं र तिमी गोविन्दका कटाक्ष शरले घायल हृदयमा कामोद्वेगको संचार गर्दैछौ ? ॥ १९ ॥ हे श्रीमन् मेघ ! तिमी अवश्य नै यदुनाथका प्रिय छौ । तिमी पनि हामी जस्तै उनको प्रेमपाशमा बाँधिएर श्यामसुन्दरको ध्यान गर्दछौ र हामीजस्तै उत्कण्ठित तथा चिन्ताले मलिन हृदय भई बारम्बार उनैको स्मरण गरेर आँसुका धारा बगाइरहेछौ ? सत्य हो, तिनको सम्बन्ध सबैलाई बारम्बार दुःख दिन्छ ॥२०॥ ए कमनीयकण्ठ कोकिल ! तिमी आफ्नू अमृत जस्तै वाणीले प्रियभाषी श्रीकृष्ण झैं मधुर वचन बोल्दैछौ । भन, अब हामी तिम्रो कुन प्रिय कार्य गरौं ॥२१॥ हे भूधर ! तिमी त हलनचल छौ । कुनै गूढ विचारमा लीन छौ । हामी जस्तै के तिमी पनि आफ्ना शिखररूपी स्तनमा वसुदेवनन्दन श्रीकृष्णका कोमल पाउ राख्न खोज्दैछौ ? ॥२२॥ हे सिन्धु-पत्नी नदी हो ! यो ग्रीष्मऋतुमा तिम्रा कुण्ड सुकेका छन् र तिम्रो पङ्कजश्री नष्ट भइसकेको छ । यस बेला त तिमी निकै कृश देखिइरहेकी छौ ! यस्तो

गृहीत इन्दो क्षीणस्तमो न निजदीधितिभिः क्षिणोषि ॥ कच्चिन्मुकुन्दगदितानि यथा वयं त्वं विस्मृत्य भोः स्थगितगीरुपलक्ष्यसे नः ॥१८॥ किन्त्वा-चरितमस्माभिर्मलयानिल तेऽप्रियम् ॥ गोविन्दापाङ्गनिर्भिन्ने हृदीरयसि नः स्मरम् ॥ १९ ॥ मेघ श्रीमंस्त्वमसि दयितो यादवेन्द्रस्य नूनं श्रीवत्साङ्कं वयमिव भवान्ध्यायति प्रेमबद्धः ॥ अत्युत्कण्ठः शबलहृदयोऽस्मद्विधो बाष्पधाराः स्मृत्वा स्मृत्वा विसृजसि मुहुर्दुःखदस्तत्प्रसङ्गः ॥ २० ॥ प्रियराव-पदानि भाषसेऽमृतसञ्जीविकयाऽनया गिरा ॥ करवाणि किमद्य ते प्रियं वद मे वल्गितकण्ठ कोकिल ॥ २१ ॥ न चलसि न वदस्युदारबुद्धे क्षितिधर चिन्तयसे महान्तमर्थम् ॥ अपि बत वसुदेवनन्दनाङ्घ्रिं वयमिव कामयसे स्तनैर्विधर्तुम् ॥ २२ ॥ शुष्यद्ध्रदाः करशिता बत सिन्धुपत्न्यः सम्प्रत्यपा-स्तकमलश्रिय इष्टभर्तुः ॥ यद्वद्वयं मधुपतेः प्रणयावलोकमप्राप्य मुष्टहृदयाः पुरुकशिताः स्मः ॥२३॥ हंसः स्वागतमास्यतां पिब पयो ब्रूह्यङ्ग शौरेः कथां दूतं त्वां नु विदाम कच्चिदजितः स्वस्त्यास्त उक्तं पुरा ॥ किं वा नश्चलसौहृदः स्मरति तं कस्माद्भजामो वयं क्षौद्रालापय कामदं श्रियमृते सैवैकनिष्ठा स्त्रियाम् ॥२४॥ इतीदृशेन भावेन कृष्णे योगेश्वरेश्वरे ॥ क्रियमाणेन माधव्यो लेभिरे परमां गतिम् ॥ २५ ॥ श्रुतमात्रोऽपि यः स्त्रीणां प्रसह्याकर्षते

प्रतीत हुन्छ कि जस्तै प्रियतम कृष्णको प्रणय-कटाक्ष नपाएर हृदय हरिनाले हामी दीन दुर्बल भइरहेका छौं, त्यस्तै तिमी पनि मेघद्वारा आफ्ना प्रिय सिन्धुको स्पर्श नपाउनाले यस्ती क्षीण भएकी हौ ? ॥२३॥ हे हंस ! हामी तिम्रो स्वागत गर्दैछौं । आऊ, यहाँ बसेर दूध पिय । हे प्रिय ! हामी ठान्दैछौं–तिमी उनै कृष्णचन्द्रका दूत हौ । अँ, तिनको केही कुरा सुनाऊ । भन, कसैको वशमा नपर्ने मेरा प्रियतम कुशल छन् ? ती चंचल सौहार्द हुने कृष्ण पहिले हामीसित गरेका रहस्यको कुरा कहिले सम्झन्छन् ? अब ती हाम्रो वास्ता गर्दैनन् भने हामी नै उनलाई किन भजौं ? हे कृष्णका दूत ! जो हामीलाई वंचित पारेर एक्लै उनीसित रमण गर्दछिन्, ती सुन्दरी लक्ष्मीलाई उहीं छाडेर कामप्रद कृष्णलाई यहीं डाक । के सबै स्त्रीमा एकमात्र लक्ष्मी नै निष्ठावाली छन्, हामीमध्ये कोही पनि त्यस्ता छैनौं ? ॥ २४ ॥ हे राजन् ! यसरी कृष्ण भगवान्‌मा गरिने अनन्य प्रेम भावले ती कृष्णकी प्रियाहरूले अन्त्यमा परमपद पाए । अनेक प्रकारले कीर्तित भगवान् कृष्णको यश यस्तो मोहक छ–जो सुन्नासाथ नारीको

आफूतिर तान्दछ । फेरि जसले उनको साक्षात् दर्शन गरेको छ, त्यसको विषयमा के भन्ने ! ॥२५॥ २६ ॥ जुन भाग्यमानीले पतिबुद्धिद्वारा श्रीकृष्णका चरण कमल मिच्ने आदि विधिले प्रेमपूर्वक सेवा गरेका छन्, तिनको तपस्याको वर्णन कसरी गर्न सकिन्छ ॥ २७ ॥ सत्पुरुषका एकमात्र गति कृष्णले वेदोक्त धर्मको यसरी बारम्बार आचरण गर्दै यो दर्शाए–घर नै धर्म, अर्थ र कामको प्राप्तिस्थान हो ॥ २८ ॥ गृहस्थका श्रेष्ठ धर्मको आचरण गर्ने भगवान् कृष्णका सोह्र हजार एक सय आठ सुन्दरी रानीहरू थिए ॥२९॥ हे राजन् ! ती रत्नस्वरूपा स्त्रीहरूमा जुन रुक्मिणी आदि आठ पटरानीहरू र तिनका छोराहरूको पहिल्यै वर्णन भइसकेको छ, ती बाहेक पनि श्रीकृष्णका जति रानी थिए, ती सबैमा प्रत्येकका गर्भबाट अमोघगति कृष्णले दस-दस पुत्र उत्पन्न गरे ॥ ३० ॥ ३१ ॥ हे राजन् ! ती पराक्रमी कृष्णका छोरामा अठार महारथी, उदार र ठूला यशस्वी छोरा थिए । तिनको नाम सुन–॥३२॥ ती थिए–प्रद्युम्न, अनिरुद्ध, दीप्तिमान, भानु, साम्ब, मधु, बृहद्भानु, चित्रभानु, वृक, अरुण, पुष्कर, वेदबाहु, श्रुतदेव, सुनन्दन,

मनः ॥ उरुगायोरुगीतो वा पश्यन्तीनां कुतः पुनः ॥ २६ ॥ याः सम्पर्यचरन्प्रेम्णा पादसंवाहनादिभिः ॥ जगद्गुरुं भर्तृबुद्ध्या तासां किं वर्ण्यते तपः ॥ २७ ॥ एवं वेदोदितं धर्ममनुतिष्ठन्सतां गतिः ॥ गृहं धर्मार्थकामानां मुहुश्चादर्शयत्पदम् ॥२८॥ आस्थितस्य परं धर्मं कृष्णस्य गृहमेधिनाम् ॥ आसन्षोडशसाहस्रं महिष्यश्च शताधिकम् ॥२९॥ तासां स्त्रीरत्नभूतानामष्टौ याः प्रागुदाहृताः ॥ रुक्मिणीप्रमुखा राजंस्तत्पुत्राश्चानुपूर्वशः ॥३०॥ एकैकस्यां दश दश कृष्णोऽजीजनदात्मजान् ॥ यावत्य आत्मनो भार्या अमोघगतिरीश्वरः ॥ ३१ ॥ तेषामुद्दामवीर्याणामष्टादश महारथाः ॥ आसन्नुदारयशसस्तेषां नामानि मे शृणु ॥ ३२ ॥ प्रद्युम्नश्चानिरुद्धश्च दीप्तिमान्भानुरेव च ॥ साम्बो मधुर्बृहद्भानुश्चित्रभानुर्वृकोऽरुणः ॥ ३३ ॥ पुष्करो वेदबाहुश्च श्रुतदेवः सुनन्दनः ॥ चित्रबाहुर्विरूपश्च कविर्न्यग्रोध एव च ॥ ३४ ॥ एतेषामपि राजेन्द्र तनुजानां मधुद्विषः ॥ प्रद्युम्न आसीत्प्रथमः पितृवद्रुक्मिणीसुतः ॥३५॥ स रुक्मिणो दुहितरमुपयेमे महारथः ॥ तस्मात्सुतोऽनिरुद्धोऽभून्नागायुतबलान्वितः ॥ ३६ ॥ स चापि रुक्मिणः पौत्रीं दौहित्रो जगृहे ततः ॥ वज्रस्तस्याभवद्यस्तु मौसलादवशेषितः ॥३७॥ प्रतिबाहुरभूत्तस्मात्सुबाहुस्तस्य चात्मजः ॥ सुबाहोः शान्तसेनोऽभूच्छतसेनस्तु तत्सुतः ॥३८॥ न ह्येतस्मिन्कुले जाता अधना अबहुप्रजाः ॥ अल्पायुषोऽल्पवीर्याश्च अब्रह्मण्याश्च जज्ञिरे ॥ ३९ ॥ यदुवंशप्रसूतानां पुंसां विख्यातकर्मणाम् ॥ संख्या न शक्यते कर्तुमपि वर्षायुतैर्नृप ॥४०॥ तिस्रः कोट्यः सहस्राणामष्टाशीतिशतानि च ॥ आसन्यदुकुलाचार्याः कुमाराणामिति

चित्र, विरूप, कवि र न्यग्रोध ॥३३॥३४॥ हे राजन् ! ती कृष्णका छोराहरूमा पनि रुक्मिणीतनय प्रद्युम्न नै सबैभन्दा श्रेष्ठ जन्मे र पिता झैं वीर थिए ॥३५॥ महारथी प्रद्युम्नले रुक्मीकी कन्यासित विवाह गरेका थिए, तीबाट दस हजार हात्तीको बल हुने अनिरुद्ध नामका छोरा भए ॥३६॥ रुक्मीका दौहित्र अनिरुद्धले मातामहकी नातिनीसित विवाहगरे । तीबाट वज्रको जन्मभयो, जुन विप्र-श्रापले यदुकुल नष्ट पार्न मुसलबाट एक्लै बाँचेका थिए ॥ ३७ ॥ वज्रका प्रतिबाहु र उनका शान्तसेन र शान्तसेनका शतसेन नामक पुत्र जन्मिए ॥३८॥ हे राजन् ! यस कुलमा कुनै पुरुष निर्धन, अल्पायु, अल्पवीर्य र ब्राह्मणको भक्तिले शून्य थिएनन् । हे नृप ! यदुवंशमा उत्पन्न प्रसिद्ध पराक्रमी पुरुषहरूका गणना कोही हजार वर्षमा पनि गर्न सक्तैन ॥ ३९ ॥ ४० ॥ यस्तो सुनिन्छ–यदुकुलमा उत्पन्न बालकहरूलाई शिक्षा दिन तीन करोड अठासी लाख ( ३८८०००० ) आचार्य

थिए ॥ ४१ ॥ अनि यादवहरूको गणना कसले गर्न सक्तछ-जहाँ अनेक अयुत लक्ष ( १०००००००००००० ) वीर सहित महाराज उग्रसेन वस्तथे ॥ ४२ ॥ हे राजन् ! पूर्वसमयमा देवासुर-संग्रामको वेला जुन भयंकर दैत्य मारिएका थिए, ती सबै मनुष्य योनिमा उत्पन्न भएर दर्पपूर्वक प्रजालाई कष्ट दिनलागे ॥४३॥ ती दैत्यको विग्रह गर्नका लागि श्रीकृष्णको आज्ञा आएर देवताहरूले यदुकुलमा अवतार लिए। हे राजन् ! सबै मिलाएर एकसय एक कुल थियो ॥ ४४ ॥ उनका माननीय श्रीकृष्ण नै थिए र जुन यादव तिनका अनुयायी थिए, ती सबै समृद्धि पूर्ण थिए ॥ ४५ ॥ ती यादवगण श्रीकृष्णमा यति दत्तचित्त रहन्थे कि उनलाई शयन, भ्रमण, वार्तालाप र स्नानादि कृत्यमा लागेर आफ्नो शरीरको पनि सुद्धि रहन्थ्यो ॥४६॥ हे राजन् ! जसले यदुकुलमा जन्म लिएर आफ्नु चरणोदकरूपिणी गङ्गाको तीर्थबाट आफ्नु यशरूपी तीर्थलाई न्यूराइदिए उनका शत्रु तथा मित्र दुवै समानभावले सरूपता प्राप्त भयो। जसलाई पाउन सबै यत्नगर्दछन्, ती लक्ष्मी जुन विष्णुको आश्रित रहन्छिन्, नाम सुन्नाले र भन्नाले सबै अमङ्गल नष्ट हुन्छन्। जसले ऋषिहरूका वंशमा धर्मको प्रचार

श्रुतम् ॥४१॥ संख्यानं यादवानां कः करिष्यति महात्मनाम् ॥ यत्रायुतानामयुतलक्षेणास्ते स आहुकः ॥४२॥ देवासुराहवहता दैतेया ये सुदारुणाः ॥ ते चोत्पन्ना मनुष्येषु प्रजा दृप्ता बबाधिरे ॥४३॥ तन्निग्रहाय हरिणा प्रोक्ता देवा यदोः कुले ॥ अवतीर्णाः कुलशतं तेषामेकाधिकं नृप ॥४४॥ तेषां प्रमाणं भगवान्प्रभुत्वेनाभवद्धरिः ॥ ये चानुवर्तिनस्तस्य ववृधुः सर्वयादवाः ॥ ४५ ॥ शय्यासनाटनालापक्रीडास्नानादिकर्मसु ॥ न विदुः सन्तमात्मानं वृष्णयः कृष्णचेतसः ॥ ४६ ॥ तीर्थं चक्रे नृपोनं यदजनि यदुषु स्वःसरित्पादशौचं विद्विट्स्निग्धाः स्वरूपं ययुरजितवरा श्रीर्यदर्थेऽन्ययत्ना ॥ यन्नामामङ्गलघ्नं श्रुतमथ गदितं यत्कृतो गोत्रधर्मः कृष्णस्यैतन्नचित्रं क्षितिभरहरणं कालचक्रायुधस्य ॥ ४७ ॥ जयति जननिवासो देवकीजन्मवादो यदुवरपर्षत्स्वैर्दोर्भिरस्यन्नधर्मं ॥ स्थिरचरवृजिनघ्नःसुस्मितश्रीमुखेन व्रजपुरवनितानां वर्धयन्कामदेवम् ॥ ४८ ॥ इत्थं परस्य निजवर्त्मरिरक्षयाऽऽत्तलीलातनोस्तदनुरूपविडम्बनानि ॥ कर्माणि कर्मकषणानि यदूत्तमस्य श्रूयादमुष्य पदयोरनुवृत्तिमिच्छन् ॥ ४९ ॥ मर्त्यस्तयाऽनुसवमेधितया मुकुन्दश्रीमत्कथाश्रवणकीर्तनचिन्तयेति ॥ तद्धाम दुस्तरकृतान्जवापवर्गं ग्रामाद्वनं क्षितिभुजोऽपि ययुर्यदर्थाः ॥५०॥ इति श्रीमद्भागवते महापुराणे वैयासिक्यामष्टादशसाहस्र्यां पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे श्रीकृष्णचरितानुवर्णनं नाम नवतितमोऽध्यायः ॥ ९० ॥ समाप्तोऽयं दशमः स्कन्धः ॥

गरे, ती कालरूप र सुदर्शनचक्रधारी सर्वसमर्थ श्रीकृष्णको निम्ति पृथ्वीको भारी टार्नु कुनै विस्मयको कुरा थिएन ॥ ४७ । जुन भगवान सबै जीवका आश्रयस्थल, वचनलाई मात्र देवकीको गर्भबाट जन्म लिने यादवरूपी पार्षदले सेवित, आफ्नु भुजबलले अधर्मको अन्त गर्ने, संसारको क्लेश नाश गर्ने र जो आफ्नु मधुर हास्यपूर्ण मुखारविन्दले व्रजबालाहरूको प्रेमोद्दीपन गर्दथे, ती भगवान् श्रीकृष्णको सदा जय होस् ॥ ४८ ॥ हे राजन् ! भगवानको चरणकमलका प्रेमी आफ्नै द्वारा स्थापित धर्ममार्गको रक्षार्थ लीला-शरीरधारी भगवान् कृष्णका ती चरित्रहरू सुनुन् जुन संसारका कर्मबन्धनको नाशक श्रीकृष्णको अनुरूप छन ॥ ४९ ॥ भगवान् कृष्णका सुन्दर कथाको नित्य श्रवण, कीर्तन र चिन्तन गर्नाले मनुष्य उनको त्यस परमधामलाई प्राप्त गर्दछ, जहाँ दुस्तर कालको पनि कुनै वश चल्दैन र जसलाई पाउनको निम्ति अनेक राजाहरू राजधानी त्यागेर वनको बाटो समाउँछन् ॥ ५९ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पं गौरीशंकर 'वसिष्ठ'कृत नेपाली भाषाटीकायां नवतितमोऽध्यायः ॥ ९० ॥

श्री हरिः (यदुकुललाई विश्वामित्र-असितादि ऋषिहरूको शाप) शुकदेव भन्नुहुन्छ—हे राजन्! यादवहरू र बलरामसहित भगवान् कृष्णले दैत्यहरूलाई मारे तथा कौरव र पाण्डवहरूमा घोर युद्ध अर्थात् महाभारत गराई पृथ्वीको भारी टारे ॥ १ ॥ जुन पाण्डव कपट, द्यूत, अपमान तथा *दयालु द्रौपदीको कपाल तान्नाले गर्दा आफ्ना शत्रु अर्थात् दुर्योधनादि कौरवहरूद्वारा निकै क्रोधित पारिएका थिए, उनैलाई निमित्त तुल्याएर दुवैतिरबाट युद्धमा उपस्थित राजागणको संहार गराई भगवान्ले पृथ्वीको भार टारे ॥२॥ आफ्ना भुजाले सुरक्षित यादवहरूद्वारा पृथ्वीका भारस्वरूप अन्यायी राजाका सैन्यको संहार गराई अप्रमेय भगवान् श्रीकृष्णले विचार गरे—'यद्यपि साधारणतया पृथ्वीको भार बलिई-

श्रीगणेशाय नमः ॥ ॐ नमो भगवते वासुदेवाय ॥ श्रीबादरायणिरुवाच ॥ कृत्वा दैत्यवधं कृष्णः सरामो यदुभिर्वृतः ॥ भुवोऽवतारयद्भारं जविष्ठं जनयन्कलिम् ॥ १ ॥ ये कोपिताः सुबहु पाण्डुसुताः सपत्नैर्दुर्द्यूतहेलनकचग्रहणादिभिस्तात् ॥ कृत्वा निमित्तमितरेतरतः समेतान् हत्वा नृपान्निरहरत्क्षितिभारमीशः ॥ २ ॥ भूभारराजपृतना यदुभिर्निरस्य गुप्तैः स्वबाहुभिरचिन्तयदप्रमेयः ॥ मन्येऽवनेर्ननु गतोऽप्यगतं हि भारं यद्यादवं कुलमहो अविषह्यमास्ते ॥ ३ ॥ नैवान्यतः परिभवोऽस्य भवेत्कथंचिन्मत्संश्रयस्य विभवोऽन्नहनस्य नित्यम् ॥ अन्तः कलिं यदुकुलस्य विधाय वेणुस्तम्बस्य वह्निमिव शान्तिमुपैमि धाम ॥ ४ ॥ एवं व्यवसितो राजन्सत्यसङ्कल्प ईश्वरः ॥ शापव्याजेन विप्राणां संजह्रे स्वकुलं विभुः ॥ ५ ॥ स्वमूर्त्या लोकलावण्यनिर्मुक्त्या लोचनं नृणाम् ॥ गीर्भिस्ताः स्मरतां चित्तं पदैस्तानीक्षतां क्रियाः ॥ ६ ॥ आच्छिद्य कीर्तिं सुश्लोकां वितत्य

भयो, तैपनि म त्यसलाई नभएँ झैं मान्दछु, किनकि अझ असह्य यादवकुल विद्यमान छँदैछ ॥ ३ ॥ सर्वदा मेरै आश्रित रहने तथा विशाल वैभवले अत्यन्त उच्छृङ्खल यस यादवकुलको दमन अरू कसैद्वारा हुनै सक्तैन। अतः बाँसका वनमा उत्पन्न अग्निको समान यिनमा परस्पर कलह उत्पन्न गराएर म शान्तिपूर्वक आफ्नू धाममा जान सक्नेछु ॥ ४ ॥ हे राजन्! सत्यसङ्कल्प तथा भगवान् कृष्णले यस्तो निश्चय गरेर श्रापको निहुँ पारेर कुलको संहार गराइदिए ॥ ५ ॥ समस्त संसारको शोभालाई तिरस्कृत पार्ने भएको आफ्नू मधुर मूर्तिद्वारा सबैका नेत्र र आफ्नी दिव्य वाणीले तिनका वाणीहरूको स्मरण गर्ने भक्तका चित्तलाई आफ्नू वशमा पारेर आफ्ना चरण-चिह्नले उनको दर्शन गर्ने जनका अन्यान्य कर्म

---

* दृष्टान्त (दयालु द्रौपदी)—महाभारत युद्धको अन्तिम दिन कौरव हारे। त्यस बेला पनि पाण्डवका धेरै सैनिक बाँचेका थिए। युद्ध समाप्त भएपछि पाण्डव श्रीकृष्णसहित पर गएर बसेका थिए। उता दुर्योधन अन्तिम श्वास फेर्दै थियो। त्यसै बेला अश्वत्थामा उनकहाँ गएर भने—'दुर्योधन! तिमी सुखले प्राण त्याग। म आज नै पाण्डवलाई नष्ट पारिदिन्छु।' त्यसपछि अश्वत्थामा पाण्डवहरूको शिविरमा गए। त्यहाँ सबै निदाइरहेका थिए। उनले सुतेका सबैलाई मारिदिए। द्रौपदीका पाँच पुत्रलाई पनि पाण्डव ठानेर मारिदिए। द्रौपदीले जब यो समाचार सुनिन् उनी विलाप गर्न लागिन्। तिनलाई दुःखिनी देखेर अर्जुन र भीमसेनले भने—'तिमी नरोऊ। हामी आजै गएर तिम्रा पुत्रको हत्यारालाई समातेर ल्याउँछौं।' यति भनेर अश्वत्थामालाई खेदेर समाते र द्रौपदीकहाँ ल्याए। द्रौपदीको दृष्टि तिनमाथि पर्नासाथ गुरुपुत्रलाई बन्धनमा परेका देखिन्। भीम तिनको शिर काट्न तयार भए। यद्यपि त्यस बेला द्रौपदीको हृदयमा पुत्रशोकको ज्वाला दन्किरहेको थियो तापनि अश्रुपूर्ण नेत्रले अश्वत्थामातिर हेरेर गद्गद कण्ठले भनिन्—'इनलाई छाडिदेऊ' यो जस्ता भए पनि गुरुपुत्र हुन्। हामीले इनको वध गर्नु हुँदैन। छोराहरू मरेर मलाई जति कष्ट भइरहेको छ, त्यही दुःख म गुरुपत्नीलाई दिन तयार छैन। भीम र अर्जुन द्रौपदीको यस्तो कुरा सुनेर ठूलो विस्मयमा परे।

रोक्षी, आफ्नो कविजन–कीर्तित कमनीय यशको लोकमा यसनिम्ति विस्तार गरे कि 'यसको गान गरेर जन अनायास अज्ञानान्धकारबाट पारी तर्नेछन् ।' अनि भगवान् आफ्नू परमधाम पाल्नु भयो ॥ ६ ॥ ७ ॥ यति कथा सुनेर राजा परीक्षितले सोधे—हे भगवन् ! जो असाधारण ब्राह्मण-भक्त, उदार र सदा वृद्धजनका सेवक थिए, जसको चित्त कृष्णमै रत रहन्थ्यो, ती यादवहरूलाई कसरी ब्राह्मणको श्राप पर्‍यो ! ॥ ८ ॥ हे द्विजसत्तम ! त्यो श्राप कस्तो थियो र त्यसको निमित्त के थियो, कसरी ती संगठित यादवमा विरोध भयो यो वृत्तान्त भन्नुहवस् ॥ ९ ॥ श्रीशुकदेव भन्दछन्—हे राजन् ! सबै राम्रा सामग्रीहरूको समावेशले पूर्ण र कमनीय कलेवर धारण गरेर पूर्णकाम भएर पनि संसारमा अनेक मङ्गलमय कार्य तथा द्वारकापुरीमा बसेर लीला गर्ने उदारकीर्ति भगवान् कृष्णले आफ्नू कुलको नाश गर्ने इच्छा गरे, किनकि अब उनको निम्ति यही एक कार्य शेष रहेको थियो ॥ १० ॥ आफ्नू गुणगान गर्ने प्राणीहरूको कलिमय-नाशक अनेक पुण्यदायक तथा मङ्गलमय कार्य गरेर जब भगवान् कृष्ण यदुराज वसुदेवको घरमा निवास गर्नलागे । अनि जो जन भगवान्का

ह्यञ्जसा नु कौ ॥ तमोऽनया तरिष्यन्तीत्यगात्स्वं पदमीश्वरः ॥ ७ ॥ राजोवाच ॥ ब्रह्मण्यानां वदान्यानां नित्यं वृद्धोपसेविनाम् ॥ विप्रशापः कथमभूद्वृष्णीनां कृष्णचेतसाम् ॥ ८ ॥ यन्निमित्तः स वै शापो यादृशो द्विजसत्तम ॥ कथमेकात्मनां भेद एतत्सर्वं वदस्व मे ॥ ९ ॥ श्रीशुक उवाच ॥ बिभ्रद्वपुः सकलसुन्दरसन्निवेशं कर्माचरन्भुवि सुमङ्गलमाप्तकामः ॥ आस्थाय धाम रममाण उदारकीर्तिः संहर्तुमैच्छत कुलं स्थितकृत्यशेषः ॥ १० ॥ कर्माणि पुण्यनिवहानि सुमङ्गलानि गायज्जगत्कलिमलापहराणि कृत्वा ॥ कालात्मना निवसता यदुदेवगेहे पिण्डारकं समगमन्मुनयो निसृष्टाः ॥११॥ विश्वामित्रोऽसितः कण्वो दुर्वासा भृगुरङ्गिराः ॥ कश्यपो वामदेवोऽत्रिर्वसिष्ठो नारदादयः ॥ १२ ॥ क्रीडन्तस्तानुपव्रज्य कुमारा यदुनन्दनाः ॥ उपसंगृह्य पप्रच्छुरविनीता विनीतवत् ॥ १३ ॥ ते वेषयित्वा स्त्रीवेषैः साम्बं जाम्बवतीसुतम् ॥ एषा पृच्छति वो विप्रा अन्तर्वत्न्यसितेक्षणा ॥ १४ ॥ प्रष्टुं विलज्जती साक्षात्प्रब्रुतामोघदर्शनाः ॥ प्रसोष्यन्ती पुत्रकामा किंस्वित्सञ्जनयिष्यति ॥ १५ ॥ एवं प्रलब्धा मुनयस्तामूचुः कुपिता नृप ॥ जनयिष्यति वो मन्दा मुसलं कुलनाशनम् ॥ १६ ॥ तच्छ्रुत्वा तेऽतिसन्त्रस्ता विमुच्य सहसोदरम् ॥ साम्बस्य ददृशुस्तस्मिन्मुसलं खल्वयस्मयम्

इच्छाले नै उनको लीलामा सहायक बनेर धरातलमा आएका थिए । ती विश्वामित्र, असित, कण्व, दुर्वासा, भृगु, अंगिरा, कश्यप, वामदेव, अत्रि, वसिष्ठ र नारदादि मुनिजन भगवान्सित बिदा लिएर द्वारकापुरीको नजीकै पिण्डारक क्षेत्रमा गएर बस्न लागे ॥ ११-१२ ॥ एक दिनको कुरा हो, त्यहाँ खेल्दै यदुवंशका केही उद्दण्ड राजकुमारले स्त्रीजनोचित वस्त्राभूषण लगाएर जाम्बवती-तनय साम्बलाई स्त्री बनाए र मुनीश्वरको नजीकै गएर अति विनीत पुरुषको समान उनको पाउ छोएर भने—'हे विप्र हो ! यी श्यामनयनी सुन्दरी गर्भिणी छन् । यी हजुरसित केही सोध्न खोज्दैछन्, तर आफ्नू मुखले भन्न लाज मानिरहेकी छन् । हे अमोघदर्शन मुनिगण, यी पुत्र-प्राप्तिकी इच्छुक सुन्दरी अब सुत्केरी हुने छन् । अतः हजुर भन्नुहवस् यिनले कुन सन्तान उत्पन्न गर्छिन्—छोरो वा छोरी ?' ॥ १३-१५ ॥ हे राजन् ! उनले यसरी ठट्टा वा धोकामा पार्ने चेष्टा गरेपछि मुनिहरूले रिसाएर भने—'हे बालक हो ! यो तिम्रो यो कुल नाश गर्ने यौटा लौह-मूसल उत्पन्न गर्नेछ' ॥ १६ ॥ यति सुनेर बालकहरू अत्यन्त भयभीत भएर तिनले तत्काल साम्बको पेट फुकाएर हेरे तब साँच्चैनै यौटा फलाम-

1259

को मूसल निस्क्यो ॥ १७ ॥ तर ती हामी मन्दभाग्यले के गर्यौं, यो सुनेर सबैले हामीलाई के भन्लान् ?' यस चिन्ताले व्याकुल भई मूसल लिएर आफ्नू घर गए ॥ १८ ॥ मुखको कान्ति मलीन हुने यादवकुमार त्यो मूसल लिएर राजसभामा गएर यादवहरूको समक्ष राजा उग्रसेनलाई त्यो सबै वृत्तान्त सुनाए ॥१९॥ हे राजन् ! ब्राह्मणको अमोघ श्राप सुनेर तथा मूसल देखेर सबै द्वारकावासी भयले व्याकुल भए ॥ २० ॥ यदुराज उग्रसेनले त्यस मूसलको चूर्ण ( धूलो ) पारेर त्यो धूलो र शेष रहेको फलामको टुक्रा समुद्रमा बगाउन लगाए ॥ २१ ॥ त्यो फलामको टुक्रा यौटा माछाले निल्यो र मूसलको चूर्ण तरङ्गमा बगेर समुद्रतटमा छिड लाग्यो। त्यसले त्यहाँ जरकुल ( तरवारे झार ) उत्पन्नभयो ॥२२॥ अन्य माछासित त्यो माछालाई समुद्रमा जाल हालेर माझीले समात्यो र त्यसको पेटबाट निस्केको फलामे टुक्रा जरा नामको व्याधाले आफ्नू बाणको टुप्पामा लगायो ॥२३ ॥ सबै कुराका ज्ञाता भगवान्ले त्यो विप्रशापको प्रतीकार गर्न सक्ने भए पनि त्यसलाई अन्यथा गरेनन्, बरू ती कालरूपधारी प्रभुले त्यसको समर्थन गर्नुभयो ॥२२ ॥ इति श्रीमद्भागवते

॥१७॥ किं कृतं मन्दभाग्यैर्नः किं वदिष्यन्ति नो जनाः ॥ इति विह्वलिता गेहानादाय मुसलं ययुः ॥१८॥ तच्चोपनीय सदसि परिम्लानमुखश्रियः ॥ राज्ञ आवेदयाञ्चक्रुः सर्वयादवसन्निधौ ॥१९॥ श्रुत्वाऽमोघं विप्रशापं दृष्ट्वा च मुसलं नृप ॥ विस्मिता भयसंत्रस्ता बभूवुर्द्वारकौकसः ॥२०॥ तच्चूर्णयित्वा मुसलं यदुराजः स आहुकः ॥ समुद्रसलिले प्रास्यल्लोहं चास्यावशेषितम् ॥ २१ ॥ कश्चिन्मत्स्योऽग्रसील्लोहं चूर्णानि तरलैस्ततः ॥ उह्यमानानि वेलायां लग्नान्यासन्किलैरकाः ॥२२॥ मत्स्यो गृहीतो मत्स्यघ्नैर्जालेनान्यैः सहार्णवे ॥ तस्योदरगतं लोहं स शल्ये लुब्धकोऽकरोत् ॥२३॥ भगवाञ्ज्ञातसर्वार्थ ईश्वरोऽपि तदन्यथा ॥ कर्तुं नैच्छद्विप्रशापं कालरूप्यन्वमोदत ॥२४॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे प्रथमोऽध्यायः ॥ १ ॥

श्रीशुक उवाच ॥ गोविन्दभुजगुप्तायां द्वारवत्यां कुरूद्वह ॥ अवात्सीन्नारदोऽभीक्ष्णं कृष्णोपासनलालसः ॥ १ ॥ को नु राजन्निन्द्रियवान्मुकुन्दचरणाम्बुजम् ॥ न भजेत्सर्वतो मृत्युरुपास्यममरोत्तमैः ॥ २ ॥ तमेकदा तु देवर्षिं वसुदेवो गृहागतम् ॥ अर्चितं सुखमासीनमभिवाद्येदमब्रवीत् ॥ ३ ॥ वसुदेव उवाच ॥ भगवन्भवतो यात्रा स्वस्तये सर्वदेहिनाम् ॥ कृपणानां यथा पित्रोरुत्तमश्लोकवर्त्मनाम् ॥ ४ ॥ भूतानां देवचरितं दुःखाय च सुखाय च ॥ सुखायैव हि साधूनां त्वादृशामच्युतात्मनाम् ॥ ५ ॥ भजन्ति ये यथा देवान्देवा अपि तथैव तान् ॥ छायेव कर्मसचिवाः

महापुराणे एकादशस्कन्धे 'वासिष्ठी' नेपाली भाषाटीकाया प्रथमोऽध्यायः ॥ १ ॥

( वसुदेवलाई नारदजीको उपदेश ) श्रीशुकदेव भन्दछन्—हे कुरुकुलतिलक ! भगवान् कृष्णका भुजामा सुरक्षित द्वारकापुरीमा श्रीकृष्णको उपासनाको लोभले देवर्षि नारदजाई धेरै जसो बस्तथे ॥ १ ॥ हे राजन् ! सबैतिर मृत्युले ढाकिएको यस्तो कुन इन्द्रियवान् प्राणी होला, जो श्रीकृष्णको सुख र सेव्य चरणकमललाई नभज्ला ॥ २ ॥ एक दिन आफ्नो घर आएका नारदजीको पूजा गरेर वसुदेव सुखपूर्वक आसनमा विराजमान देवर्षिलाई प्रणाम गरेर भन्न लागे—॥३॥ वसुदेवजीले भने—हे भगवन् ! पुत्रका लागि दयालु माता-पिता तथा दीन-दुःखीका लागि भगवत्परायण महात्माको सहसा आगमन सदृश हजुरको आगमन सबैको कल्याणका निम्ति हुन्छ ॥४॥ देवगणका कार्यकलाप सबै प्राणीका सुख-दुःख दुवैको

निम्ति हुन्छ, तर हजुर जस्तै भगवत्प्राण साधु पुरुषको आचरण सबैका लागि सुखदायी हुन्छन् ॥ ५ ॥ देवतालाई जो जसरी मान्दछन्, देवता पनि उनलाई त्यस्तै फल दिन्छन् । ती छायाजस्तै कर्मको अनुसरण गर्दछन्, तर दयालु साधुजन स्वभावले दीनजनमा कृपालु हुन्छन् ॥ ६ ॥ हे ब्रह्मन् ! यद्यपि म हजुरको दर्शनले नै पवित्र भइसकेको छु । तापनि हजुरसित भागवत धर्मको विषयमा केही सुन्न चाहन्छु, किनकि यसलाई श्रद्धापूर्वक सुन्नाले मनुष्य सबै थरिका भयबाट मुक्त हुन्छ ॥ ७ ॥ देवमायाले मोहित भई मैले पूर्वजन्ममा सन्तानको निम्ति मुक्तिदाता भगवानको पूजा गरेथें, मोक्षको निम्ति होइन ॥ ८ ॥ अतः हे सुव्रत ! म हजुरलाई निमित्त तुल्याएर विविध दुःखले पूर्ण तथा सर्व भयले व्याप्त यस संसारबाट जसरी अनायास मुक्त हुनसकौं, यस्तो कुनै स्पष्ट उपदेश दिनुहवस् ॥ ९ ॥ वसुदेवजीले यसरी सोधेपछि भगवान्‌को स्मरण गरेर परम प्रसन्न भएका देवर्षि नारद उनीसित भन्नलागे ॥ १० ॥ नारदजी भन्दछन्—हे यादवश्रेष्ठ ! तिम्रो विचार अति उत्तम छ, किनकि तिमी सबैलाई पवित्र पार्ने उत्तम भागवत धर्म मसित सोधिरहेछौ ॥ ११ ॥ हे

साधवो दीनवत्सलाः ॥ ६ ॥ ब्रह्मँस्तथापि पृच्छामो धर्मान्भागवताँस्तव ॥ याञ्छ्रुत्वा श्रद्धया मर्त्यो मुच्यते सर्वतो भयात् ॥ ७ ॥ अहं किल पुराऽनन्तं प्रजार्थे भुवि मुक्तिदम् ॥ अपूजयं न मोक्षाय मोहितो देवमायया ॥ ८ ॥ यथा विचित्रव्यसनाद्भवद्भिर्विश्वतो भयात् ॥ मुच्येम ह्यञ्जसैवाद्धा तथा नः शाधि सुव्रतः ॥ ९ ॥ श्रीशुक उवाच ॥ राजन्नेवं कृतप्रश्नो वसुदेवेन धीमता ॥ प्रीतस्तमाह देवर्षिर्हरेः संस्मारितो गुणैः ॥ १० ॥ नारद उवाच ॥ सम्यगेतद्व्यवसितं भवता सात्वतर्षभ ॥ यत्पृच्छसे भागवतान्धर्मांस्त्वं विश्वभावनान् ॥ ११ ॥ श्रुतोऽनुपठितो ध्यात आदृतो वानुमोदितः ॥ सद्यः पुनाति सद्धर्मो देवविश्वद्रुहोऽपि हि ॥ १२ ॥ त्वया परमकल्याणः पुण्यश्रवणकीर्तनः ॥ स्मारितो भगवानद्य देवो नारायणो मम ॥ १३ ॥ अत्राप्युदाहरन्तीममितिहासं पुरातनम् ॥ आर्षभाणां च संवादं विदेहस्य महात्मनः ॥ १४ ॥ प्रियव्रतो नाम सुतो मनोः स्वायम्भुवस्य यः ॥ अस्याग्नीध्रस्ततो नाभिर्ऋषभस्तत्सुतः स्मृतः ॥ १५ ॥ तमाहुर्वासुदेवांशं मोक्षधर्मविवक्षया ॥ अवतीर्णं सुतशतं तस्यासीद्वेदपारगम् ॥ १६ ॥ तेषां वै भरतो ज्येष्ठो नारायणपरायणः ॥ विख्यातं वर्षमेतद्यन्नाम्ना भारतमद्भुतम् ॥ १७ ॥ स भुक्तभोगां त्यक्त्वेमां निर्गतस्तपसा

वसुदेव ! श्रवण, बारम्बार पठन, स्मरण तथा अनुमोदन गरिएपछि यो भागवत-धर्म देवता तथा समस्त विश्वसित द्रोह गर्नेलाई पनि तत्काल पवित्र पारिदिन्छ ॥ १२ ॥ जसको नाम, लीलाहरूको श्रवण-कीर्तनले प्राणीलाई पवित्र पार्दछ, ती परम कल्याणकारी भगवान् नारायणको आज तिमीले सम्झना गराइदियौ ॥ १३ ॥ यस विषयमा म महात्मा राजा विदेह तथा ऋषभका छोराहरूको संवादस्वरूप यो प्राचीन इतिहासको उद्धरण दिंदछु ॥१४॥ स्वायम्भुव मनु राजा प्रियव्रतका छोरा थिए, तीबाट आग्नीध्रका नाभि र नाभिका छोरा ऋषभ भए ॥ १५ ॥ ऋषभदेव वासुदेवका अंश थिए पनि भन्दछन् । उनले मोक्षधर्मको उपदेश दिनका निम्ति संसारमा अवतार लिएका थिए । ऋषभका सय छोरा थिए, ती सबै वेदवेदाङ्गमा पारंगत थिए ॥ १६ ॥ तिनमा जेठा पुत्र भरत थिए, जो भगवान् नारायणका परम भक्त मानिन्थे । उनकै नामले यो अद्भुत देश भारतवर्ष नामले संसारमा विख्यात छ । भरतजी यो भुक्तभोगा पृथिवीलाई त्यागेर वनमा गए । त्यहाँ तपस्या द्वारा श्रीकृष्ण भगवान्‌को उपासना गरे र तीन जन्मपछि मोक्षपद पाए

॥१७॥१८॥ तीमध्ये नौ पुत्र यस भूमण्डलको सर्वतिर नौ द्वीपका अधिपति भए र एकासी पुत्र कर्मतन्त्रका रचयिता ब्राह्मण भए ॥ ९ ॥ नौ पुत्र परमार्थका निरूपक महाभाग मुनि भए। ती वेदव्याख्यामा निपुण, दिगम्बर र आत्मविद्यामा पारंगत थिए॥२०॥ तिनको नाम थियो—कवि, हरि, अन्तरिक्ष, प्रबुद्ध, पिप्पलायन, आविर्होत्र, द्रुमिल, चमस र करभाजन ॥२१॥ती सबै सत् अर्थात् व्यक्त र असत् अर्थात् अव्यक्तरूपी समस्त संसारलाई आफूभन्दा अभिन्न भगवद्रूपमा देख्दै पृथिवीमा विचरण गर्दथे॥२२॥तिनको स्वेच्छागति थियो। उनलाई

हरिम् ॥ उपासीनस्तत्पदवीं लेभे वै जन्मभिस्त्रिभिः ॥ १८ ॥ तेषां नव नवद्वीपपतयोऽस्य समन्ततः ॥ कर्मतन्त्रप्रणेतार एकाशीतिर्द्विजातयः ॥ १९ ॥ नवाभवन्महाभागा मुनयो ह्यर्थशंसिनः ॥ श्रमणा वातरशना आत्मविद्याविशारदाः ॥ २० ॥ कविर्हरिरन्तरिक्षः प्रबुद्धः पिप्पलायनः ॥ आविर्होत्रोऽथ द्रुमिलश्चमसः करभाजनः ॥ २१ ॥ एते वै भगवद्रूपं विश्वं सदसदात्मकम् ॥ आत्मनोऽव्यतिरेकेण पश्यन्तो व्यचरन्महीम् ॥ २२ ॥ अव्याहतेष्टगतयः सुरसिद्धसाध्यगन्धर्वयक्षनरकिन्नरनागलोकान् ॥ मुक्ताश्चरन्ति मुनिचारणभूतनाथविद्याधरद्विजगवां भुवनानि कामम् ॥ २३ ॥ त एकदा निमेः सत्रमुपजग्मुर्यदृच्छया ॥ वितायमानमृषिभिरजनाभे महात्मनः ॥ २४ ॥ तान्दृष्ट्वा सूर्यसंकाशान्महाभागवतान्नृपः ॥ यजमानोऽग्नयो विप्राः सर्व एवोपतस्थिरे ॥ २५ ॥ विदेहस्तानभिप्रेत्य नारायणपरायणान् ॥ प्रीतः सम्पूजयाञ्चक्रे आसनस्थान्यथार्हतः ॥ २६ ॥ तान्रोच-

कतै रोक-छेक थिएन। ती जीवन-मुक्त महात्मा देवता, सिद्ध, साध्यगण, गन्धर्व, यक्ष, मनुष्य, किन्नर एवं नागका लोक तथा मुनि, चारण, भूतनाथ, विद्याधर, ब्राह्मण र गाईहरूका लोकमा स्वेच्छानुसार डुल्नलागे ॥२३॥ एकपल्टको कुरा हो—ती अजनाभ खण्ड अर्थात् भारतवर्षमा महात्मा राजा निमिकहाँ, जो त्यस बेला ऋषिहरूद्वारा यज्ञ गराइरहेका थिए, सहसा पुगे ॥ २४ ॥ ती सूर्य सदृश तेजस्वी महाभागवतहरूलाई देखेर यजमान, ब्राह्मणगण तथा अग्नि सबै जुरुक्क उठे ॥ २५ ॥ महात्मा विदेहले उनलाई नारायण-परायण भक्त

---

¤ दृष्टान्त ( नारायण-भक्त ) एकपल्ट नारदजीको मनमा अहङ्कार आयो—म जस्तो भगवान्‌को प्रेमी भक्त अरु कोही पनि छैन। उनले नारदजीका मनको कुरा जाने र मनमनै विचार गरे—'हृदयमा उब्जेको यो गर्व म अवश्य उखेलिदिन्छु।' भगवानले आज्ञा गर्यो—'हिंड, परसम्मडुलेर आऊँ।' जब दुवैजना हिंडे, तब बाटोमा देखे—यौटा ब्राह्मण कम्मरमा तरवार बाँधेर सुकेको पाँत खाइरहेका छन्। नारदजीले त्यसलाई देख्नासाथ वैष्णव रहेछ भन्ने जाने, किनकि वैष्णवजन जीवहिंसालाई पाप मान्दछन् र घाँसमा पनि जीव मानेर सुकेको पाँत खाएर दिन काट्दछन्। तर यो कम्मरमा तरवार किन झुण्ड्याएको होला। यसको मर्म नारदजीले बुझ्न सकेनन्। यही कुरा उनले भगवानसित सोधे। भगवान्‌ले आज्ञा गर्नुभयो—'ब्राह्मणसित नै सोध।' नारदजी गएर ब्राह्मणलाई सोधे—'हे भाइ! वैष्णव जन त जीवहिंसालाई पाप मान्दछन्। अनि तिमीले कम्मरमा तरवार किन झुण्ड्याएका? यो तिमीलाई के काम लाग्दछ?' ब्राह्मणले भने—'यो तरवार तीन वटा दुष्टलाई मार्नको निमित्त हो।' नारदले सोधे—'ती तीन दुष्ट कुन-कुन हुन्?' ब्राह्मणले भने—'पहिलो दुष्ट अर्जुन हो, जसले मेरा इष्टदेव कृष्ण भगवान्‌लाई सारथी तुल्याएर रथ चलाउन लगायो।' नारदले सोधे—'अर्को को हो?' ब्राह्मणले उत्तर दिए—'अर्की द्रौपदी राक्षसनी हो, जसले भगवानलाई आफ्नू जुठो अन्न खुवाई।' नारदले सोधे—'तेस्रो को हो?' ब्राह्मणले भने—'तेस्रो दुष्ट नारद हो।' नारदले सोधे—'उनले के अपराध गरे?' ब्राह्मणले भने—'यो दुष्ट रात-दिन भगवानलाई डाक्छ र वीणा बजाएर गान गर्दछ। त्यसलाई भगवान्‌को अलिकति पनि ध्यान छैन। यो भगवान्‌को मीठो निद्रामा विघ्न पार्दछ।' नारदले त्यसको प्रेम र भक्तिको प्रशंसा गरे र त्यसै दिनदेखि आफ्नू अहङ्कार छाडिदिए।

आनेर दिव्य आसनमा बसाले र ती मुनिको अतिशय प्रेमपूर्वक पूजन गरे ॥ २६ ॥ आफ्नो शारीरिक तेजले ब्रह्माजीका छोरा सदृश सुशोभित ती नौ योगीश्वरसित राजा जनकले प्रसन्न भएर नम्रतापूर्वक प्रश्न गरे ॥२७॥ विदेह भन्दछन्—हे भगवन् ! म हजुरहरूलाई साक्षात् मधुसूदनका पार्षद ठान्दछु, किनकि भगवान् विष्णुका पार्षद संसारका प्राणीलाई पवित्र पार्नका लागि नै विचरण गर्दछन् ॥ २८ ॥ जीवलाई पहिले क्षणभंगुर मानव शरीर पाउनु नै दुर्लभ रहन्छ, यदि त्यो पाए पनि भगवद्भक्तहरूको दर्शन पाउनु म अझ दुर्लभ मान्दछु ॥ २९ ॥ अतः हे पुण्यात्मा महानुभाव हो ! म यो जिज्ञासा गरिरहेको छु कि संसारमा आत्यन्तिक कल्याण केसमा छ ? यस जगत्मा महात्माहरूका आधा क्षणको सत्सङ्ग पनि मनुष्यका लागि ठूलो खजाना पाए झैं हुन्छ ॥ ३० ॥ यदि मैले सुन्न योग्य छ भने मलाई त्यो भागवत-धर्म सुनाउनोस् जसले प्रसन्न भएर अजन्मा भगवान् आफ्ना शरणागत भक्तको निम्ति स्वयं आफूलाई पनि दिई दिन्छन् । नारदजी भन्नलागे—हे वसुदेव ! राजा निमिले यसरी प्रश्न गरेपछि ती महात्माले खुसीसाथ

मानात् स्वरुचा ब्रह्मपुत्रोपमान्नव ॥ प्रपच्छ परमप्रीतः प्रश्रयावनतो नृपः ॥ २७ ॥ विदेह उवाच ॥ मन्ये भगवतः साक्षात्पार्षदान्वो मधुद्विषः ॥ विष्णोर्भूतानि लोकानां पावनाय चरन्ति हि ॥ २८ ॥ दुर्लभो मानुषो देहो देहिनां क्षणभंगुरः ॥ तत्रापि दुर्लभं मन्ये वैकुण्ठप्रियदर्शनम् ॥ २९ ॥ अत आत्यन्तिकं क्षेमं पृच्छामि भवतोऽनघाः ॥ संसारेऽस्मिन्क्षणार्धोऽपि सत्सङ्गः शेवधिर्नृणाम् ॥ ३० ॥ धर्मान्भागवतान्ब्रूत यदि नः श्रुतये क्षमम् ॥ यैः प्रसन्नः प्रपन्नाय ददात्यात्मानमप्यजः ॥ ३१ ॥ श्रीनारद उवाच ॥ एवं ते निमिना पृष्टा वसुदेव महत्तमाः ॥ प्रतिपूज्याब्रुवन्प्रीत्या ससदस्यर्त्विजं नृपम् ॥ ३२ ॥ कविरुवाच ॥ मन्येऽकुतश्चिद्भयमच्युतस्य पादाम्बुजोपासनमत्र नित्यम् ॥ उद्विग्नबुद्धेरसदात्मभावाद्विश्वात्मना यत्र निवर्तते भीः ॥३३॥ ये वै भगवता प्रोक्ता उपाया ह्यात्मलब्धये ॥ अञ्जः पुंसामविदुषां विद्धि भागवतान्हि तान् ॥ ३४ ॥ यानास्थाय नरो राजन्न प्रमाद्येत कर्हिचित् ॥ धावन्निमील्य वा नेत्रे न स्खलेन्न पतेदिह ॥ ३५ ॥ कायेन वाचा मनसेन्द्रियैर्वा बुद्ध्यात्मना वानुसृतस्वभावात् ॥ करोति यद्यत्सकलं परस्मै नारायणायेति समर्पयेत्तत् ॥ ३६ ॥ भयं द्वितीयाभिनिवेशतः स्यादीशादपेतस्य विपर्ययोऽस्मृतिः ॥ तन्माययातो बुध आभजेत्तं

धन्यवाद दिए र सभासद तथा ऋत्विजसमेत राजा निमिसित भने ॥ ३१ ॥ ३२ ॥ कविले भने—हे राजन् ! यस लोकमा म त श्रीकृष्णका चरणकमलको नित्य उपासनालाई नै सर्वथा भयशून्य मान्दछु । असत्मा आत्मभावको कारण जसको बुद्धि उद्विग्न भएको रहन्छ, तिनको पनि उपासनाले सबै भय भागिजान्छ ॥३३॥ अज्ञ पुरुषलाई पनि तत्काल आत्म लाभ गराउनको निम्ति भगवान्ले जुन उपाय आज्ञा भएको छ, तिमी उनैलाई भागवत-धर्म जान॥३४॥ हे राजन् ! ती भागवत-धर्मको आश्रय लिएपछि कोही व्यक्ति कहिल्यै प्रमादमा पर्दैन र त्यसमाथि कुनै प्रकारको विघ्नले आक्रमण गर्न सक्तैन । त्यो संसारमा आँखा चिम्लेर दगुरे पनि कहीं चिप्लने र पछारिने हुँदैन ॥३५॥ यस धर्मको पालन गर्ने व्यक्तिको कर्तव्य हो कि शरीरले, वाणी, मनले, इन्द्रियहरूले, बुद्धि र अहङ्कार अथवा आफ्ना अनुगत स्वभावले जे जति कर्म गर्दछ, त्यो सबै परमात्मा नारायणका निम्ति नै हो, यस्तो ठानेर उनैलाई अर्पण गरोस् ॥३६॥ जो भगवान्बाट विमुख रहन्छ, त्यसको मनमा ईश्वरी मायाले भगवान्का स्वरूपको विस्मृति र 'म देह हुँ'—यस्तो उल्टो ज्ञान उत्पन्न हुन्छ भने मायाको

1263

अतिरिक्त अर्को वस्तुको सत्ताको अभिमान हुनाले भय प्राप्त हुन्छ। अतः बुद्धिमान् पुरुषको कर्तव्य हो—आफ्नू गुरुमा इष्टदेवको बुद्धि गरेर ती श्रीहरिलाई भक्तिभावले भजोस् ॥३७॥ यो द्वैतात्मक प्रपञ्च नभए पनि यसै गरी परमार्थरूप भास्तछ, जस्तै स्वप्न र मनोरथका पदार्थ सत्य नभए पनि चिन्तन गर्नेको बुद्धिमा सत्यवत् भासमान हुन्छन्। अतएव विचारकको कर्तव्य हो—पहिले कर्मको सङ्कल्प–विकल्प गर्ने चित्त रोकोस्, अनिमात्र अभयपद प्राप्त हुन्छ–अन्यथा हुँदैन ॥ ३८ ॥ लोकमा चक्रपाणि भगवान् विष्णुको कल्याणकारी जन्म र कर्मका गुण सुन्दै विचित्र लीलाहरूको अनुसार राखिएका उनका नामको निःसङ्कोच भएर गान गरोस् र असङ्ग भावले संसारमा डुलिरहोस् ॥ ३९ ॥ यस प्रकारको आचरण गर्ने प्राणी आफ्ना परमप्रिय प्रभुको नाम सङ्कीर्तनले ईश्वरमा अनुराग उत्पन्न भएपछि द्रवितचित्त भएर यस संसारको वास्ता नगरी कहिले हाँस्ने, कहिले, रुने कहिले कराउने, कहिले गाउने र उन्मत्त जस्तै नाच्न थाल्दछ ॥ ४० ॥ आकाश, वायु, अग्नि, जल, पृथ्वी, नक्षत्र, प्राणी, दिशाहरू, वृक्ष, नदी तथा समुद्र यी सबै उनै भगवान् हरिका नै

भक्त्यैकयेशं गुरुदेवतात्मा ॥ ३७ ॥ अविद्यमानोऽप्यवभाति हि द्वयो ध्यातुर्धिया स्वप्नमनोरथौ यथा ॥ तत्कर्म सङ्कल्पविकल्पकं मनो बुधो निरुन्ध्यादभयं ततः स्यात् ॥ ३८ ॥ शृण्वन्सुभद्राणि रथाङ्गपाणेर्जन्मानि कर्माणि च यानि लोके ॥ गीतानि नामानि तदर्थकानि गायन्विलज्जो विचरेदसङ्गः ॥ ३९ ॥ एवंव्रतः स्वप्रियनामकीर्त्या जातानुरागो द्रुतचित्त उच्चैः ॥ हसत्यथो रोदिति रौति गायत्युन्मादवन्नृत्यति लोकबाह्यः॥ ४० ॥ खं वायुमग्निं सलिलं महीं च ज्योतींषि सत्त्वानि दिशो द्रुमादीन् ॥ सरित्समुद्रांश्च हरेः शरीरं यत्किञ्च भूतं प्रणमेदनन्यः ॥ ४१ ॥ भक्तिः परेशानुभवो विरक्तिरन्यत्र चैव त्रिक एककालः ॥ प्रपद्यमानस्य यथाऽश्नतः स्युस्तुष्टिः पुष्टिः क्षुदपायोऽनुघासम् ॥ ४२ ॥ इत्यच्युताङ्घ्रिं भजतोऽनुवृत्त्या भक्तिर्विरक्तिर्भगवत्प्रबोधः ॥ भवन्ति वै भागवतस्य राजँस्ततः परां शान्तिमुपैति साक्षात् ॥ ४३ ॥ राजोवाच ॥ अथ भागवतं ब्रूत यद्धर्मो यादृशो नृणाम् ॥ यथाऽऽचरति यद्ब्रूते यैर्लिङ्गैर्भगवत्प्रियः ॥ ४४ ॥ हरिरुवाच ॥ सर्वभूतेषु यः पश्येद्भगवद्भावमात्मनः ॥ भूतानि भगवत्यात्मन्येष भागवतोत्तमः ॥ ४५ ॥ ईश्वरे तदधीनेषु बालिशेषु द्विषत्सु च ॥ प्रेममैत्रीकृपोपेक्षा यः करोति स मध्यमः ॥ ४६ ॥ अर्चायामेव हरये पूजां

शरीर हुन्। अतः यी सबैलाई अनन्यभावले प्रणाम गरोस् ॥ ४१ ॥ भगवान्को भजन गर्नेलाई परमेश्वरमा प्रेम, उनको स्वरूपानुभव तथा अरु संसारी वस्तुमा वैराग्य–यी तीनै कुरा साथै प्राप्त हुन्छन्। जस्तै–भोजन गर्नेलाई भोजनको प्रत्येक गाँसको साथ तुष्टि, पुष्टि र क्षुधा निवृत्ति–यी तीनै कुरा साथै प्राप्त हुन्छन् ॥ ४२ ॥ हे राजन्! भगवान् अच्युतका चरणकमलको निरन्तर भजन गर्ने भक्तलाई भगवत्प्रेम, विषयमा वैराग्य तथा भगवत्स्वरूपको ज्ञान–यी तीन अवश्य प्राप्त हुन्छन् र त्यो परम शान्तिमा प्राप्त हुन्छ ॥४३॥ राजा निमि भन्दछन्–अब हजुर भगवद्भक्तको विषयमा वर्णन गर्नुहवस्। उनको कुन धर्म हो, मनुष्यसित उनको कस्तो व्यवहार होस्, त्यो कस्तो आचरण गर्दो होस्, के भनि बोल्दछ कुन लक्षणले त्यो भगवान्को प्रिय मानिन्छ, त्यो सबै हजुर मलाई भन्नुहवस् ॥ ४४ ॥ श्रीकृष्णले भन्नुभयो–जो समस्त प्राणीमा वर्तमान आत्मालाई भगवद्रूपले हेर्दछ जो आफ्नू भगवत्स्वरूपमै सबै प्राणीलाई अवस्थित मान्दो होस्, त्यही सबै भगवद्भक्तमा श्रेष्ठ मानिन्छ ॥ ४५ ॥ जो भगवान्सित प्रेम, उनका भक्तसित मित्रता, अज्ञानीमा

कृपा र भगवान्‌का द्रोहको उपेक्षा गर्दछ, त्यो मध्यम श्रेणीको भक्त कहिन्छ ॥ ४६ ॥ जो भगवान्‌को पूजा-विग्रह अर्थात् प्रतिमादिको पूजामै श्रद्धाभक्तिले प्रवृत्त हुन्छ, उनका भक्तको तथा अन्य कसैको पूजा गर्दैन, त्यो साधारण भक्त मानिन्छ ॥ ४७ ॥ इन्द्रिय द्वारा विषयहरू भोग्दाभोग्दै पनि 'यो सबै भगवान्‌कै माया हो यस्तो विचार राखेर जोन तिनमा द्वेष गर्दछ, न तो सुख पाएर प्रसन्न नै हुन्छ, अवश्य त्यो भगवद्भक्तमा श्रेष्ठ मानिन्छ ॥ ४८ ॥ जो भगवान्‌को स्मरणमा तल्लीन रहनाले गर्दा शरीर, इन्द्रिय, प्राण, मन तथा बुद्धिका सांसारिक धर्म, जन्म-मरण, क्षुधा, भय, तृष्णा र परिश्रम आदिले मोहित हुँदैन, त्यो भगवद्भक्तमा श्रेष्ठ कहिन्छ ॥ ४९ ॥ कामना र कर्मका बीज अर्थात् वासना आदि जसको चित्तमा उद्भव हुँदैनन र एकमात्र भगवान् वासुदेवको नै जसलाई भर छ, त्यही भगवद्भक्तहरूमा उत्तम र श्रेष्ठ हुन्छ ॥ ५० ॥ जसको जन्म, कर्म, वर्ण, आश्रम तथा जातले गर्दा यस देहमा अहंभाव हुँदैन, त्यो अवश्य भगवान्‌को प्रिय बन्दछ ॥ ५१ ॥ जसको धनमा वा शरीरमा 'यो आफ्नू हो—यो विरानो हो' यस्तो भेदभाव हुँदैन,

यः श्रद्धयेहते ॥ न तद्भक्तेषु चान्येषु स भक्तः प्राकृतः स्मृतः ॥ ४७ ॥ गृहीत्वाऽपीन्द्रियैरर्थान्यो न द्वेष्टि न हृष्यति ॥ विष्णोर्मायामिमां पश्यन्स वै भागवतोत्तमः ॥ ४८ ॥ देहेन्द्रियप्राणमनोधियां यो जन्माप्ययक्षुद्भयतर्षकृच्छ्रैः ॥ संसारधर्मैरविमुह्यमानः स्मृत्या हरेर्भागवतप्रधानः ॥४९॥ न कामकर्मबीजानां यस्य चेतसि सम्भवः ॥ वासुदेवैकनिलयः स वै भागवतोत्तमः ॥ ५० ॥ न यस्य जन्मकर्मभ्यां न वर्णाश्रमजातिभिः ॥ सज्जतेऽस्मिन्नहंभावो देहे वै स हरेः प्रियः ॥ ५१ ॥ न यस्य स्वः पर इति वित्तेष्वात्मनि वा भिदा ॥ सर्वभूतसमः शान्तः स वै भागवतोत्तमः ॥ ५२ ॥ त्रिभुवनवैभवहेतवेऽप्यकुण्ठस्मृतिरजितात्मसुरादिभिर्विमृग्यात् ॥ न चलति भगवत्पदारविन्दाल्लवनिमिषार्धमपि यः स वैष्णवाग्र्यः ॥ ५३ ॥ भगवत उरुविक्रमांघ्रिशाखानखमणिचन्द्रिकया निरस्ततापे ॥ हृदि कथमुपसीदतां पुनः स प्रभवति चन्द्र इवोदितेऽर्कतापः ॥ ५४ ॥ विसृजति हृदयं न यस्य साक्षाद्धरिरवशाभिहितोऽप्यघौघनाशः ॥ प्रणयरशनया धृतांघ्रिपद्मः स भवति भागवतप्रधान उक्तः ॥ ५५ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे द्वितीयोऽध्यायः ॥ २ ॥

जो समस्त प्राणीहरूमा समदृष्टि राखेर शान्तचित्त छ, त्यो अवश्य नै भगवद्भक्तमा श्रेष्ठ मानिन्छ ॥ ५२ ॥ तीनै लोकका राज्य-वैभवको निम्ति पनि जसको भगवद्भजन छुट्‌दैन, भगवानमै मन लगाई राख्ने देवतादि पनि जसलाई खोज्ने गर्दछन्, ती भगवच्चरणारविन्दको सेवाबाट जो आधा पलको निम्ति पनि विचलित हुँदैन, त्यही सबै भगवद्भक्तमा अग्रणी कहिन्छ ॥ ५३ ॥ भगवान् विष्णुको उरुविक्रम अर्थात् ठूला-ठूला पाइला हुने चरणका औंलाको नङरूपी मणिको शीतल कान्तिले जसका कामादि ताप शान्त भइसकेको छ, ती भगवान्‌का चरणमा परेको पुरुषको हृदयमा फेरि त्यो ताप कसै गरी उत्पन्न हुन सक्तछ ? रात्रिमा चन्द्रमा उदाए पछि सूर्यको ताप के कहिले टिक्न सक्तछ ? ॥ ५४ ॥ जो विवश भएर आफ्नू नाम उच्चारण गरेपछि पनि सबै पापसमूह ध्वंस गरिदिन्छन्, ती हरि प्रेम-पाशमा आफ्ना चरणकमल बाँधिएपछि जसको हृदय कहिल्यै छाड्दैनन्, उनै भगवद्भक्तहरूमा श्रेष्ठ कहिन्छन् ॥ ५५ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे 'वामिश्री' नेपाली भाषाटीकायां द्वितीयोऽध्यायः ॥ २ ॥

( मायाको स्वरूप, उसबाट पारी तर्ने युक्ति र ब्रह्म तथा धर्मको निराकरण ) राजा निमि भन्न लागे—हे भगवन् ! अब म मायावीलाई पनि मोहित पार्ने विष्णुकी मायाको स्वरूप जान्ने इच्छा गर्दछु, हजुर त्यसको वर्णन गर्नु हवस् ॥ १ ॥ हे भगवन् ! म संसारको तापले तापिएको मरणधर्मा मनुष्य हुँ । अतः त्यो ताप मेट्ने औषधि मुखारविन्दबाट निस्केका हरिकथामृतरूपी वचन सुनेर म अघाउन्न ॥ २ ॥ हे महाबाहो ! आदिदेव नारायणले आफ्नू स्वरूप समान जीवहरूको भोग तथा मोक्षको निम्ति स्वयं रचित पञ्चभूत द्वारा नै अनेक थरिका उत्कृष्ट र निकृष्ट जीवहरूको सृष्टि गरेका छन् ॥ ३ ॥ ४ ॥ यसरी पञ्चमहाभूतद्वारा रचित प्राणीहरूमा स्वयं जीवरूपले प्रविष्ट भएर ती आफूलाई नै मनरूपले एक र बाह्य-इन्द्रिय रूपले दश भागमा विभक्त गरी विषयको भोग गर्दछन् । जीव आत्माद्वारा प्रकाशित इन्द्रियहरूले विषयलाई भोग्दछ र उत्पन्न शरीरादिलाई नै आत्मा मान्दै यसैमा आसक्त रहन्छ ॥ ५ ॥ फेरि देही आफ्ना कर्मेन्द्रिय द्वारा वासनापूर्ण काम गर्दै तथा तिनको सुख-दुःख भोग्दै अनित्य संसारमा भौंतारिई रहन्छ ॥ ६ ॥

राजोवाच ॥ परस्य विष्णोरीशस्य मायिनामपि मोहिनीम् ॥ मायां वेदितुमिच्छामि भगवन्तो ब्रुवन्तु नः ॥१॥ नानुतृप्ये जुषन्युष्मद्वचो हरिकथामृतम् ॥ संसारतापनिस्तप्तो मर्त्यस्तत्तापभेषजम् ॥२॥ अन्तरिक्ष उवाच ॥ एभिर्भूतानि भूतात्मा महाभूतैर्महाभुज ॥ ससर्जोच्चावचान्याद्यः स्वमात्रात्मप्रसिद्धये॥३॥ एवं सृष्टानि भूतानि प्रविष्टः पञ्चधातुभिः ॥ एकधा दशधात्मानं विभजञ्जुषते गुणान्॥४॥ गुणैर्गुणान्स भुञ्जान आत्मप्रद्योतितैः प्रभुः॥ मन्यमान इदं सृष्टमात्मानमिह सज्जते ॥५॥ कर्माणि कर्मभिः कुर्वन्सनिमित्तानि देहभृत् ॥ तत्तत्कर्मफलं गृह्णन्भ्रमतीह सुखेतरम् ॥६॥ इत्थं कर्मगतीर्गच्छन्बह्वभद्रवहाः पुमान् ॥ आभूतसम्प्लवात्सर्गप्रलयावश्नुतेऽवशः ॥७॥ धातूपप्लव आसन्ने व्यक्तं द्रव्यगुणात्मकम् ॥ अनादिनिधनः कालो ह्यव्यक्तायापकर्षति ॥ ८ ॥ शतवर्षा ह्यनावृष्टिर्भविष्यत्युल्बणा भुवि ॥ तत्कालोपचितोष्णार्को लोकाँस्त्रीन्प्रतपिष्यति ॥९॥ पातालतलमारभ्य सङ्कर्षणमुखानलः ॥ दहन्नूर्ध्वशिखो विष्वग्वर्धते वायुनेरितः॥१०॥ संवर्तको मेघगणो वर्षतिस्म शतं समाः॥धाराभिर्हस्तिहस्ताभिर्लीयते सलिले विराट् ॥११॥ ततो विराजमुत्सृज्य वैराजः पुरुषो नृप॥ अव्यक्तंविशते सूक्ष्मं निरिन्धन इवानलः॥१२॥ वायुना हृतगन्धा भूः सलिलत्वाय कल्पते॥ सलिलं तद्धृतरसं ज्योतिष्ट्वा-

यसरी विवश भएर अनेक थरिका कष्ट दिने गतिहरूमा प्राप्त भएर यो जीव महाप्रलयसम्म जन्म-मरणमा प्राप्त भइ रहन्छ ॥ ७ ॥ पञ्चभूतको प्रलय समय उपस्थित भएपछि अनादि र अनन्त कालसम्म यी द्रव्यगुणात्मक स्थूल-सूक्ष्मरूप व्यक्त सृष्टिलाई त्यो अव्यक्ततिर तानेर लैजान्छ ॥ ८ ॥ जब त्यो समय आउने छ, तब पृथ्वीमा सय वर्षसम्म घोर अनावृष्टि हुनेछ र बढेको उष्णताले सूर्यनारायण तीनै लोकलाई तपाउन लाग्दछन् ॥ ९ ॥ शेषको मुखबाट निस्केको अग्नि वायुद्वारा प्रेरित भई पाताल देखि समस्त विश्वलाई भस्म पार्दै अग्ला-होचा ज्वालाले चारैतिर फैलिनेछ ॥ १० ॥ त्यस बेला सम्वर्तक मेघ-समूह हात्तीको सुँड झैं मोटा-मोटा धाराले सय वर्षसम्म पानी पार्नेछन् । त्यसले समस्त ब्रह्माण्ड जलमा डुब्दछ ॥ ११ ॥ हे राजन् ! बिना काठको अग्नि झैं विराट पुरुष आफ्नू ब्रह्माण्डमय शरीर त्यागेर सूक्ष्मरूपधारी 'अव्यक्त' ब्रह्ममा लीन हुन्छ ॥ १२ ॥ त्यस समय वायु द्वारा गन्ध खिचिन्छ र पृथ्वी जलरूप हुन्छिन् । त्यही वायु द्वारा तानिएपछि जल पनि अग्निरूपमा परिणत हुनेछ । घोर अन्धकारले ढाकिएको अग्नि वायुमा

1266

र अवकाश द्वारा स्पर्शहीन वायु आकाशमा लय हुनेछ ॥ १३ ॥ १४ ॥ हे राजन् ! यसपछि कालद्वारा आफ्ना गुण अर्थात् शब्दरहित भएर आकाश तामस अहङ्कारमा, सबै इन्द्रिय राजस अहङ्कारमा र इन्द्रियका अधिष्ठाता देवगण समेत मन र बुद्धि सात्त्विक अहङ्कारमा लय भएर जान्छन् । अहङ्कार आफ्ना गुणसमेत लीन हुन्छन् र महत्तत्त्व भएर प्रकृतिमा लीन हुन्छ ॥ १५ ॥ यसरी मैले जगत्को उत्पत्ति, स्थिति र लय गर्ने भगवान्‌की त्रिगुणात्मिका मायाको वर्णन गरेर सुनाएँ । अब अरु के सुन्ने इच्छा छ ? राजा निमिले भने—हे महर्षे ! अब हजुर मलाई यस्तो उपदेश दिनुहवस्—जसले चित्त जित्न नसकेका पुरुषहरूको निम्ति ईश्वरी मायालाई स्थूल बुद्धि हुने पनि सहजै पारी तर्न सकून् ॥१६ ॥१७॥ प्रबुद्ध भन्दछन्—हे राजन् ! दुःखको नाश र सुखको प्राप्तिका निमित्त स्त्री-पुरुषको सम्बन्धमा बाँधिएर कर्मानुष्ठानमा संलग्न व्यक्तिलाई जुन विपरीत फल मिल्दछ, त्यो हेर्नु छ ॥ १८ ॥ यस दुःखदायक धनले दुर्लभ आत्माको निम्ति मृत्युस्वरूप र अचिन्त्य गृह, पुत्र, कुटुम्ब र पशु आदिलाई प्राप्त गर्नाले व्यक्तिलाई के सुख प्राप्त हुन

योपकल्पते ॥ १३ ॥ हृतरूपं तु तमसा वायौ ज्योतिः प्रलीयते ॥ हृतस्पर्शोऽवकाशेन वायुर्नभसि लीयते ॥१४॥ कालात्मना हृतगुणं नभ आत्मनि लीयते ॥ इन्द्रियाणि मनो बुद्धिः सह वैकारिकैर्नृप ॥ प्रविशन्ति ह्यहङ्कारं स्वगुणैरहमात्मनि ॥ १५ ॥ एषा माया भगवतः सर्गस्थित्यन्तकारिणी ॥ त्रिवर्णा वर्णितास्माभिः भूयः किं श्रोतुमिच्छसि ॥१६॥ राजोवाच ॥ यथैतामैश्वरीं मायां दुस्तरामकृतात्मभिः ॥ तरन्त्यञ्जः स्थूलधियो महर्ष इदमुच्यताम् ॥१७॥ प्रबुद्ध उवाच ॥ कर्माण्यारभमाणानां दुःखहत्यै सुखाय च ॥ पश्येत्पाकविपर्यासं मिथुनाचारिणां नृणाम् ॥१८॥ नित्यार्तिदेन वित्तेन दुर्लभेनात्ममृत्युना ॥ गृहापत्याप्तपशुभिः का प्रीतिः साधितैश्चलैः ॥१९॥ एवं लोकं परं विद्यान्नश्वरं कर्मनिर्मितम् ॥ सतुल्यातिशयध्वंसं यथा मण्डलवर्तिनाम् ॥ २० ॥ तस्माद्गुरुं प्रपद्येत जिज्ञासुः श्रेय उत्तमम् ॥ शब्दे परे च निष्णातं ब्रह्मण्युपशमाश्रयम् ॥२१॥ तत्र भागवतान्धर्माञ्छिक्षेद्गुर्वात्मदैवतः ॥ अमाययाऽनुवृत्त्या यैस्तुष्येदात्मात्मदो हरिः ॥ २२ ॥ सर्वतो मनसोऽसङ्गमादौ संगं च साधुषु ॥ दयां मैत्रीं प्रश्रयं च भूतेष्वद्धा यथोचितम् ॥२३॥ शौचं तपस्तितिक्षां च मौनं स्वाध्यायमार्जवम् ॥ ब्रह्मचर्यमहिंसां च समत्वं द्वन्द्वसंज्ञयोः ॥ २४ ॥ सर्वत्रात्मेश्वरान्वीक्षां कैवल्यम-

सक्छ ? ॥ १९ ॥ प्रत्येक मनुष्य यो जानुन् कि यसलोक तथा परलोक दुवै कर्मजनित र नाशवान् छन् इनमा मण्डलेश्वर राजाहरू झैं समान बलको निम्ति प्रतिस्पर्धा, उत्कृष्ट प्रति द्वेष र आफू उत्कृष्ट भएपछि पतनको डर लागिरहन्छ ॥ २० ॥ अतः आफ्नू श्रेयः साधनका इच्छुक जिज्ञासुको कर्तव्य यही हो—ऊ शब्द ब्रह्म अर्थात् वेद र परब्रह्ममा संलग्न शान्तचित्त गुरुका शरण पर्नू ॥ २१ ॥ ती गुरुदेवलाई नै आत्मा र इष्टदेव मानेर उनैसित भागवत्-धर्म सिकोस् । गुरुप्रति निष्कपट आचरण गर्नाले स्वयं आफूलाई समेत सुम्पिदिने श्रीकृष्ण प्रसन्न हुन्छन ॥ २२ ॥ सर्वप्रथम सबैतिरबाट मनको असक्तता, सत्पुरुषको, संगति, सबै प्राणीप्रति यथोचित मैत्री, दया, विनयभाव, शौच, तप तितिक्षा अर्थात् द्वन्द सहने, मौन अर्थात् व्यर्थवार्ता-वर्जन वा मननशीलता, स्वाध्याय, सरलता, ब्रह्मचर्य, सुख-दुःखादि द्वन्दमा समान व्यवहार, आत्मस्वरूप श्रीहरिलाई सर्वत्र देख्नु, एकान्त सेवन, अनिकेतता अर्थात् गृह आदिमा ममत्वको अभाव, पवित्र वस्त्र धारण, जे जति पाइन्छ यसैमा सन्तोष गर्नु, भगवत्सम्बन्धी शास्त्र र चर्चामा श्रद्धा,

1269-

अन्य शास्त्रको निन्दा नगर्नु, मन-वाणी-कर्मको संयम, सत्यभाषण, मन-वचन-कर्मले इन्द्रियलाई दण्डदानपूर्वक शम-दमादिको पालन, विचित्र लीलाधारी भगवान्को जन्म-कर्म र गुणको श्रवण, कीर्तन र ध्यान, उनकै निम्ति सबै कर्म गर्नु, यज्ञ, दान, जप-तप, आचार अथवा जो आफूलाई प्रिय छ त्यो सबै र स्त्री, पुत्र, घर र प्राण यी सबै परमात्मालाई अर्पण गरिदिनु नै भक्तको कर्तव्य हो। कृष्ण नै जसका आत्मा र स्वामी छन्, त्यस्ता भक्तजनसित प्रेम राख्नु। स्थावर जङ्गम दुवै प्रकारका प्राणीहरू महात्मा र साधुजनको सेवा गरोस्। भगवान्का पवित्र गुणहरूलाई परस्पर भन्नु-सुन्नु। जसले आपुसमा प्रेम, सन्तोष र शान्ति बढोस्, ती सबै कर्म गर्नु ॥२३-३०॥ यसरी पाप-पुञ्जनाशक कृष्ण भगवान्को स्वयं स्मरण गर्दै तथा अरूसित पनि गराउँदै भक्तजन वैधी भक्तिद्वारा प्रेमा भक्तिको उदय भएपछि परम आनन्दित हुन्छन् ॥३१॥ यस दशामा ती अलौकि पुरुष

निकेतताम् ॥ विविक्तचीरवसनं सन्तोषं येनकेनचित् ॥२५॥श्रद्धांभागवते शास्त्रेऽनिन्दामन्यत्र चापि हि॥ मनोवाक्कर्मदण्डं च सत्यं शमदमावपि॥२६॥ श्रवणं कीर्तनं ध्यानं हरेरद्भुतकर्मणः ॥ जन्मकर्मगुणानां च तदर्थेऽखिलचेष्टितम् ॥२७॥ इष्टं दत्तं तपो जप्तं वृत्तं यच्चात्मनः प्रियम् ॥ दारान्सुतान्गृहान्प्राणान् यत्परस्मै निवेदनम् ॥ २८ ॥ एवं कृष्णात्मनाथेषु मनुष्येषु च सौहृदम् ॥ परिचर्यां चोभयत्र महत्सु नृषु साधुषु ॥ २९ ॥ परस्परानुकथनं पावनं भगवद्यशः ॥ मिथो रतिर्मिथस्तुष्टिर्निवृत्तिर्मिथ आत्मनः ॥ ३० ॥ स्मरन्तः स्मारयन्तश्च मिथोऽघौघहरं हरिम् ॥ भक्त्या सञ्जातया भक्त्या बिभ्रत्युत्पुलकां तनुम् ॥ ३१ ॥ क्वचिद्रुदन्त्यच्युतचिन्तकाः क्वचिद्धसन्ति नन्दन्ति वदन्त्यलौकिकाः ॥ गायन्ति नृत्यन्त्यनुशीलयन्त्यजं भवन्ति तूष्णीं परमेत्य निर्वृताः ॥ ३२ ॥ इति भागवतान्धर्मान्शिक्षन्भक्त्या तदुत्थया ॥ नारायणपरो मायामञ्जस्तरति दुस्तराम् ॥ ३३ ॥ राजोवाच ॥ नारायणाभिधानस्य ब्रह्मणः परमात्मनः ॥ निष्ठामर्हथ नो वक्तुं यूयं हि ब्रह्मवादिनः ॥ ३४ ॥ पिप्पलायन उवाच ॥

भगवान् अच्युतको ध्यान गर्दै कहिले हाँस्ने, कहिले रुने, कहिले आनन्दित हुने र कहिले बरबराउने गर्न थाल्दछन्। कहिले नाच्ने र कहिले भगवद्गुणगान र ती अजन्मा प्रभुका लीलाहरूको चिन्तन गर्दै परम उपरतिमा पुगेर मौन हुने गर्दछन् ॥ ३२ ॥ यस प्रकारले भागवत-धर्मको अभ्यास गर्दा-गर्दा ती धर्मबाट उत्पन्न प्रेमा भक्ति द्वारा नारायण परायण भएपछि पुरुष अनायास यो दुस्तर मायादेखि पर पुग्दछन् ॥ ३३ ॥ राजा निमि भन्दछन्—हे मुनि हो! हजुर परब्रह्मको निरूपण गर्नुहुन्छ। अतएव हजुर हामीलाई नारायण नामक परब्रह्म परमात्माको स्वरूपको * उपदेश दिनुहवस् ॥ ३४ ॥ पिप्पलायन भन्दछन्—हे राजन्! जो यस संसारको उत्पत्ति, स्थिति र प्रलयका कारण भएर पनि आफू कारणरहित छन्।

---

* दृष्टान्त (उपदेशमा पुनरुक्तिको खाँचो)—कुनै ठाउँमा प्रसिद्ध उपदेशक आफ्नू भाषणमा अनेक थरिका विचित्र दृष्टान्तहरूको समावेश गरेर सुन्नेहरूको चित्त आकृष्ट पार्दथे, असत्यमा थोरै कुरा संयमी, कर्तव्यपरायण, प्रेमी र ईश्वर भक्त हुने उपदेश दिन्थे। यो पढ्दै कुराले सबैलाई धार्मिक हुनको निम्ति उन्नेजित पार्दथे। थोरै व्यक्तिले तिनको धार्मिक व्याख्यान अनेक स्थानमा सुनेको थियो। एक दिन तिनले उपदेशकसित साथे—हजुरको व्याख्यानमा पुनरुक्ति हुँदै रहन्छ, किनकि हजुर थोरै कुरालाई बारम्बार दोहोर्‍याउनु हुन्छ। उपदेशकले भने—हे भाइ! यो सनातन र सर्वथा प्राचीन उपदेश एकपल्ट मात्र सुनेर जो उसै अनुसार आचरण गर्न सकोस् र पछि विस्तार-विस्तार गहिरो ईश्वर प्रेम प्राप्त गरेर भक्तिको मीठो रस पिउन लाग्यो भने फेरि एक दिन पनि मेरो उपदेश सुन्ने आवश्यकता रहन्न।

जो जाग्रत्, स्वप्न र सुषुप्ति यी तीनै अवस्थाको भित्र र बाहिर पनि छन् । जसको द्वारा संजीवित भएर देह, इन्द्रिय, मन, प्राण र हृदय आफ्फ्ना व्यापारमा प्रवृत्त हुन्छन् ! उनैलाई हिमी परमतत्त्व नारायण जान ॥३५॥ जस्तै झिल्का आगोलाई प्रकाशित पार्न सक्तैनन्, त्यस्तै यस आत्मतत्त्वसम्म न मनको न वाणी, चक्षु, बुद्धि प्राण र इन्द्रियको नै गति पुग्दछ । शब्द पनि केवल निषेध वृत्तिद्वारा निषेधको अवधिस्वरूप तथा अर्थापत्ति प्रमाणले लक्षित पार्दछ, किनकि निषेधावधिको अर्थात् निषिद्ध पदार्थको आधार हो, त्यसको अभाव हुनाले गर्दा निषेधको सिद्धि नै हुन सक्तैन ॥३६॥ सृष्टिको आदिमा केवल ब्रह्म नै थियो । त्यही सत्त्व, रज, तम रूपले 'त्रिवृत्' अर्थात् प्रधान कहिन्छ । ज्ञानमय हुनाले उसलाई महत्तत्त्व, क्रियात्मक हुनाले सूत्र र जीवको उपाधि हुनाले अहङ्कार पनि भन्दछन् । त्यही महाशक्तिशाली ब्रह्म अर्थात् इन्द्रियका अधिष्ठाता देवता, क्रिया अर्थात् इन्द्रिय र अर्थ—इन्द्रिय-विषयको रूपमा भासमान हुन्छ । यसरी सत् वा दृश्य र असत् अर्थात् अदृश्य दुवै भन्दा पनि पर जे छ, त्यही ब्रह्म हो ॥ ३७ ॥ यो परमात्माले कहिल्यै जन्म लिएन र न त्यो कहिल्यै मर्दछ । त्यो ठूलो पनि हुँदैन र सानो पनि हुन्न, किनकि त्यो सर्वव्यापक, नित्य, अच्युत, ज्ञान-

स्थित्युद्भवप्रलयहेतुरहेतुरस्य यत्स्वप्नजागरसुषुप्तिषु सद्बहिश्च ॥ देहेन्द्रियासुहृदयानि चरन्ति येन सञ्जीवितानि तदवेहि परं नरेन्द्र ॥ ३५ ॥ नैतन्मनो विशति वागुत चक्षुरात्मा प्राणेन्द्रियाणि च यथाऽनलमर्चिषः स्वाः ॥ शब्दोऽपि बोधकनिषेधतयात्ममूलमर्थोक्तमाह यदृते न निषेधसिद्धिः ॥ ३६ ॥ सत्त्वं रजस्तम इति त्रिवृदेकमादौ सूत्रं महानहमिति प्रवदन्ति जीवम् ॥ ज्ञानक्रियार्थफलरूपतयोरुशक्ति ब्रह्मैव भाति सदसच्च तयोः परं यत् ॥ ३७ ॥ नात्मा जजान न मरिष्यति नैधतेऽसौ न क्षीयते सवनविद्व्यभिचारिणां हि ॥ सर्वत्र शश्वदनपाय्युपलब्धिमात्रं प्राणो यदेन्द्रियबलेन विकल्पितं सत् ॥ ३८ ॥ अण्डेषु पेशिषु तरुष्वविनिश्चितेषु प्राणो हि जीवमुपधावति तत्र तत्र ॥ सन्ने यदिन्द्रियगणेऽहमि च प्रसुप्ते कूटस्थ आशयमृते तदनुस्मृतिर्नः ॥ ३९ ॥ यर्ह्यब्जनाभचरणैषणयोरुभक्त्या चेतोमलानि विधमेद्गुणकर्मजानि ॥ तस्मिन्विशुद्ध उपलभ्यत आत्मतत्त्वं साक्षाद्यथाऽमलदृशोः सवितृप्रकाशः ॥ ४० ॥ राजोवाच ॥ कर्मयोगं वदत नः पुरुषो येन संस्कृतः ॥ विधूय स्वानि कर्माणि नैष्कर्म्यं विन्दते परम्

स्वरूप तथा परिवर्तनशील विकार र बाल्य यौवनादि अवस्थामय देहको साक्षी छ । जस्तै—यौटै प्राण इन्द्रिय-भेद वा स्थान-भेदले नाना विकल्पमा प्राप्त भइरहेछ, त्यस्तै एक्लै ब्रह्म विविधरूपमा प्रतीत हुन्छ ॥ ३८ ॥ अण्डज, जरायुज, उद्भिज र अनिश्चित अर्थात् स्वेदज योनिमा जहाँ-जहाँ जसरी प्राण जीवको संचार गर्दछ, त्यस्तै आत्मा पनि सबै अवस्थामा नाशोकवले स्थित भएर पनि असङ्ग रहन्छ । सुषुप्ति अवस्थामा इन्द्रिय निश्चेष्ट र अहङ्कार लीन भएपछि कूटस्थ आत्मा बिना त्यस अवस्थाको स्मृति नै हुन पाउन्न ॥३९॥ कमलनाभ विष्णुका चरण कमलको प्राप्तिको इच्छाले बढेको तीव्र भक्तिरूपी अग्निद्वारा जीव आफ्नू चित्तका गुणकर्मबाट उत्पन्न मललाई भस्म पारिदिन्छ । चित्त शुद्ध भएपछि आत्मतत्त्व त्यस्तै स्पष्ट भासमान हुन्छ, जस्तै निर्मल नेत्रमा सूर्यको प्रकाश आलोकित हुन्छ ॥ ४० ॥ अनि राजा निमि भन्दछन्—हे मुनिगण ! अब हजुर मलाई कर्मयोगको उपदेश दिनुहवस्, जसद्वारा शुद्ध हृदय मनुष्य आफ्ना कर्म त्यागेर परम नैष्कर्म्य अर्थात् आत्यन्तिक निवृत्ति पाउँदछ । पहिले पनि मैले यहो

प्रश्न आफ्ना पिता इक्ष्वाकुको साम्नुन्ने सनकादि ऋषिहरूसित गरेको थिएँ, तर उनले केही उत्तर दिएनन् । यसको कारण के थियो, त्यो पनि हजुर आज्ञा होस् ॥ ४१ ॥ आविर्होत्र भन्दछन्—कर्म, अकर्म यी सबै विषय वेदद्वारा ज्ञान हुन सक्तछ । लौकिक विचारले यसको ज्ञान हुन सक्तैन । वेद साक्षात् भगवान्‌का रूप हुन् त्यसमा ठूला-ठूला बुद्धिमान् पनि मुग्ध हुन्छन् ॥ ४३ ॥ वेद परोक्षवाद हो, जस्तै—व्यक्ति बालकलाई फुल्याउँछन्, त्यस्तै कर्मरूपी रोग हटाउन तिनमा कर्मरूपी औषधिको विधान कहिएको छ ॥४४॥ जो अजितेन्द्रिय र अज्ञानी पुरुष वेदोक्त आचरणको अनुसरण गर्दैन, त्यो विहित कर्म त्यागको पापले बारम्बार जन्म-मरणमा प्राप्त हुन्छ ॥ ४५ ॥ वेदोक्त कर्मलाई नै निःसङ्ग भावले ईश्वरार्पण गर्ने पुरुष नैष्कर्म्य सिद्धि प्राप्त गर्दछ । वेदमा जो स्वर्गादि प्राप्तिरूपिणी फलश्रुति कहिएका छन्, ती केवल कर्ममा रुचि उत्पन्न गर्नको निम्ति नै हुन् ॥४६॥ जो शीघ्र परमात्माको अहङ्काररूप हृदयग्रन्थि फुकाउन चाहन्छ, त्यसको कर्तव्य हो—त्यो वेदविधि तथा तन्त्रोक्त विधिले नियमानुसार भगवान् केशवको पूजा गरोस् ॥ ४७ ॥ सेवाद्वारा गुरुको कृपापात्र

॥ ४१ ॥ एवं प्रश्नमृषीन्पूर्वमपृच्छं पितुरन्तिके ॥ नाब्रुवन्ब्रह्मणः पुत्रास्तत्र कारणमुच्यताम् ॥ ४२ ॥ आविर्होत्र उवाच ॥ कर्माकर्मविकर्मेति वेदवादो न लौकिकः ॥ वेदस्य चेश्वरात्मत्वात्तत्र मुह्यन्ति सूरयः ॥ ४३ ॥ परोक्षवादो वेदोऽयं बालानामनुशासनम् ॥ कर्ममोक्षाय कर्माणि विधत्ते ह्यगदं यथा ॥४४॥ नाचरेद्यस्तु वेदोक्तं स्वयमज्ञोऽजितेन्द्रियः ॥ विकर्मणा ह्यधर्मेण मृत्योर्मृत्युमुपैति सः ॥ ४५ ॥ वेदोक्तमेव कुर्वाणो निःसङ्गोऽर्पितमीश्वरे ॥ नैष्कर्म्यां लभते सिद्धिं रोचनार्था फलश्रुतिः ॥ ४६ ॥ य आशु हृदयग्रन्थिं निर्जिहीर्षुः परात्मनः ॥ विधिनोपचरेद्देवं तन्त्रोक्तेन च केशवम् ॥ ४७ ॥ लब्धानुग्रह आचार्यात्तेन सन्दर्शितागमः ॥ महापुरुषमभ्यर्चेन्मूर्त्याऽभिमतयात्मनः ॥ ४८ ॥ शुचिः सम्मुखमासीनः प्राणसंयमनादिभिः ॥ पिण्डं विशोध्य संन्यासकृतरक्षोऽर्चयेद्धरिम् ॥ ४९ ॥ अर्चादौ हृदये चापि यथालब्धोपचारकैः ॥ द्रव्यक्षित्यात्मलिङ्गानि निष्पाद्य प्रोक्ष्य चासनम् ॥ ५० ॥ पाद्यादीनुपकल्प्याथ सन्निधाप्य समाहितः ॥ हृदादिभिः कृतन्यासो मूलमन्त्रेण चार्चयेत् ॥ ५१ ॥ साङ्गोपाङ्गां सपार्षदां तां तां मूर्तिं स्वमन्त्रतः ॥ पाद्यार्घ्याचमनीयाद्यैः स्नानवासोविभूषणैः ॥ ५२ ॥ गन्धमाल्याक्षतस्रग्भिर्धूपदीपोपहारकैः ॥ साङ्गं सम्पूज्य विधिवत्स्तवैः स्तुत्वा नमेद्धरिम् ॥ ५३ ॥ आत्मानं तन्मयं ध्यायन्मूर्तिं सम्पूजयेद्धरेः ॥ शेषमाधाय शिरसा स्वधाम्न्युद्वास्य सत्कृतम् ॥ ५४ ॥ एवमग्न्यर्कतो-

बनेर उसले बताएको विधि अनुसार आफ्नू अभिलषित मूर्तिमा महापुरुष नारायणको पूजा गरोस् ॥ ४८ ॥ पहिले देह र अन्तःकरण शुद्ध पारेर प्रतिमाको समक्ष बसी प्राणायामादि द्वारा नाडी शुद्धि गरेर अङ्गन्यासले [illegible] देहरक्षा गरी भगवान्‌को पूजा गरोस् ॥ ४९ ॥ बाहिरी प्रतिमा अथवा हृदयमा जहाँ पूजा गर्नु छ, त्यसको निम्ति जे जति पूजन सामग्री पाइन्छ, त्यो पूजन सामग्री पूजास्थान र शरीरादिलाई शुद्ध पारेर आसनमा जल छर्किई पाद्य-अर्घ्यादिका पात्रलाई यथास्थान राखोस् । अनि एकाग्रचित भएर अङ्गन्यास-करन्यास गरिसकेपछि मूल मन्त्रद्वारा प्रतिमाको पूजा गरोस् ।।५०।।५१।। उपाङ्ग वा आयुधादि र पार्षदसहित आफ्ना उपास्य देवको मूर्तिलाई उनकै मूलमन्त्रद्वारा पाद्य, अर्घ्य, आचमन, स्नान [illegible] वस्त्राभूषण गन्ध माला, अक्षता, पुष्पमाला, धूप, दीप र नैवेद्य आदिले विधिवत् पूजा गरेर उनकै स्तोत्र द्वारा स्तुति गरेर भगवान् कृष्णलाई अनन्त नमस्कार गरोस्

॥५२॥५३॥ यसरी आफ्नू आत्मालाई भगवद्रूप ठान्दै भगवानका प्रतिमाको पूजा गरोस्, अनि निर्माल्य शिरमा लगाई पूजित भगवद्विग्रहलाई यथास्थान राखिदेओस् ॥ ५४ ॥ यसरी अग्नि, सूर्य, जल, अतिथि अथवा आफ्नू हृदयमा जो प्राणी भगवान् कृष्णको पूजा गर्दछ, त्यो शीघ्र मुक्त भएर जान्छ ॥ ५५ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे 'शास्त्री' नेपाली भाषाटीकायां तृतीयोऽध्यायः ॥ ३ ॥

( भगवानका विविध अवतारको वर्णन )—राजा निमि भन्दछन्—हे मुनीश्वर हो ! विष्णुले स्वेच्छाले संसारमा धारण गरेका जुन-जुन अवतारले जे-जे लीला गरे, वर्तमानमा जे गर्दछन् र भविष्यमा जे गर्नन्, त्यो सबै हजुर मलाई यथार्थ भन्नुहवस् ॥ १ ॥ द्रुमिलले भने—हे राजन् ! जो पुरुष अनन्त भगवानका गुण गन्न खोज्दछ, त्यो मन्दबुद्धि हो । पृथ्वीका रजःकणहरू कुनै प्रकारले कोही गन्न सक्ला, तर सर्वशक्तिमान् प्रभुका गुणहरू गनेर कोही पनि पार पाउन सक्तैन ॥ २ ॥ आफूले रचेका पञ्चभूतहरू द्वारा ब्रह्माण्ड-

यादावतिथौ हृदये च यः ॥ यजतीश्वरमात्मानमचिरान्मुच्यते हि सः ॥ ५५ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे तृतीयोऽध्यायः ॥ ३ ॥

राजोवाच ॥ यानि यानीह कर्माणि यैर्यैः स्वच्छन्दजन्मभिः ॥ चक्रे करोति कर्ता वा हरिस्तानि ब्रुवन्तु नः ॥ १ ॥ द्रुमिल उवाच ॥ यो वा अनन्तस्य गुणाननन्ताननुक्रमिष्यन्स तु बालबुद्धिः ॥ रजांसि भूमेर्गणयेत्कथञ्चित्कालेन नैवाखिलशक्तिधाम्नः ॥ २ ॥ भूतैर्यदा पञ्चभिरात्मसृष्टैः पुरं विराजं विरचय्य तस्मिन् ॥ स्वांशेन विष्टः पुरुषाभिधानमवाप नारायण आदिदेवः ॥ ३ ॥ यत्काय एष भुवनत्रयसन्निवेशो यस्येन्द्रियैस्तनुभृतामुभयेन्द्रियाणि ॥ ज्ञानं स्वतः श्वसनतो बलमोज ईहा सत्त्वादिभिः स्थितिलयोद्भव आदिकर्ता ॥ ४ ॥ आदावभूच्छतधृती रजसाऽस्य सर्गे विष्णुः स्थितौ क्रतुपतिर्द्विजधर्मसेतुः ॥ रुद्रोऽप्ययाय तमसा पुरुषः स आद्य इत्युद्भवस्थितिलयाः सततं प्रजासु ॥ ५ ॥ धर्मस्य दक्षदुहितर्यजनिष्ट मूर्त्यां नारायणो नर ऋषिप्रवरः प्रशान्तः ॥ नैष्कर्म्यलक्षणमुवाच चचार कर्म योऽद्यापि चास्त ऋषिवर्य निषेवितांघ्रिः ॥ ६ ॥ इन्द्रो विशङ्क्य मम धाम जिघृक्षतीति कामं न्ययुङ्क्त सगणं स बदर्युपाख्यम् ॥ गत्वाऽप्सरोगणवसन्तसुमन्दवातैः स्त्रीप्रेक्षणेषुभिरविध्यदतन्महिज्ञः ॥ ७ ॥ विज्ञाय

रूपी पुरको रचना गरेर जब आदिदेव नारायण भगवानले आफ्ना अंशभूत जीवरूपले त्यसमा प्रवेश गरे तब उनको नाम 'पुरुष' भयो ॥ ३ ॥ उनको विराट् देहमा सम्पूर्ण त्रैलोक्यको समावेश छ, उसका इन्द्रियद्वारा प्राणीहरूका ज्ञानेन्द्रिय र कर्मेन्द्रिय, उनको स्वरूपबाट स्वतःसिद्ध ज्ञान अर्थात् आत्मा, श्वास-प्रश्वासले बल-देह शक्ति ओज अर्थात् इन्द्रियशक्ति, क्रियाशक्ति र सत्वादि गुणबाट स्थिति, उद्भव तथा लय हुन्छन्, उनै आदिकर्ता हुन् ॥४॥ सर्वप्रथम जगत्को उत्पत्तिका निम्ति उनको रजोगुणको अंशबाट ब्रह्मा उत्पन्न भए । अनि ती आदिपुरुष नै संसारको स्थितिका लागि आफ्नू सत्वांशले धर्म र विप्ररक्षक यज्ञपति विष्णु र तमोगुणको अंशले सृष्टिसंहारक रुद्ररूपले जायमान भए । यसरी निरन्तर उनैबाट प्रजाको उत्पत्ति, पालन र संहार हुँदै रहन्छ ॥५॥ धर्मको पत्नी दक्षकन्यारूपिणी मूर्तिको गर्भबाट शान्तात्मा ऋषिश्रेष्ठ नर-नारायणरूपमा अवतरित भए । उनले आत्मतत्वलाई लक्षित पार्ने कर्म त्यागरूपी कर्म अर्थात् सांख्य निष्ठाको उपदेश दिए र स्वयं पनि उनैको आचरण गरे । उनका चरणको मुनिजन सेवा गर्दछन् । ती अझ पनि बदरिकाश्रममा सर्वदा विराजमान रहन्छन्

॥ ६ ॥ यो आफ्नू घोर तपस्या द्वारा मेरो पद खोस्न खोज्दैछन्–यस्तो आशङ्का गरेर इन्द्रले उनलाई तपस्याबाट भ्रष्ट पार्न दल-बल सहित कामदेवलाई नियुक्त गरे र उनको महिमा नजान्नाले कामदेव बदरिकाश्रममा गएर अप्सरागण, वसन्त, मन्द-सुगन्ध वायु तथा स्त्रीहरूको कटाक्ष बाणले उनलाई वशमा पार्ने उपायमा लागे ॥७॥ इन्द्रदेवको कुचालाल केही आश्चर्य नमानेर र आदिदेव नारायणले भयले कामिरहेका ती कामादिसित हाँसेर भने–हे मदन ! हे मन्दमलयमारुत ! हे देवाङ्गना हो ! तिमीहरू नडराओ, हाम्रो आतिथ्य पूजा स्वीकार गर । त्यो अस्वीकार गरेर यहाँबाट फर्केर हाम्रो आश्रम शून्य नपार ॥ ८ ॥ हे राजन् ! अभयदायक भगवान्ले यति भनेपछि लाजले नतमस्तक देवता करुणास्वरमा भन्दछन्– हे विभो ! हजुर मायातीत र निर्विकार हुनुहुन्छ । आत्माराम र धीर पुरुष सदा हजुरका पाउको वन्दना गर्दछन् । अतः हजुरको निम्ति यो विस्मयको कुरा छैन ॥९॥ जो हजुरका दास छन् तिनको बाटोमा देवता अनेक विघ्न उपस्थित गर्दछन्, किनकि ती उनका धाम स्वर्ग नाघेर हजुरको परमपद पुग्दछन् तर बाहेक जो केवल कर्मकाण्डमा लागेर यज्ञादि द्वारा देवतालाई उनको भाग दिने गर्दछन्, तिनलाई कुनै विघ्न हुँदैन, तापनि यदि हजुर तिनको रक्षा गर्न लाग्नुहुन्छ तब ती भक्तजन सबै विघ्नका शिरमा खुट्टा टेकिदिन्छन्, ती आफ्नू

शक्रकृतमक्रममादिदेवः प्राह प्रहस्य गतविस्मय एजमानान् ॥ म भैष्ट भो मदन मारुत देववध्वो गृह्णीत नो बलिमशून्यमिमं कुरुध्वम् ॥८॥ इत्थं ब्रुवत्यभयदे नरदेव देवाः सव्रीडनम्रशिरसः सघृणं तमूचुः ॥ नैतद्विभो त्वयि परेऽविकृते विचित्रं स्वारामधीरनिकरानतपादपद्मे ॥ ९ ॥ त्वां सेवतां सुरकृता बहवोऽन्तरायाः स्वौको विलङ्घ्य परमं व्रजतां पदं ते ॥ नान्तस्य बर्हिषि बलीन्ददतः स्वभागान्धत्ते पदं त्वमविता यति विघ्नमूर्ध्नि ॥१०॥ क्षुत्तृट्त्रिकालगुणमारुतजैह्व्यशैश्न्यानस्मानपारजलधीनतितीर्य केचित् ॥ क्रोधस्य यान्ति विफलस्य वशं पदे गोर्मज्जन्ति दुश्चरतपश्च वृथोत्सृजन्ति ॥ ११ ॥ इति प्रगृणतां तेषां स्त्रियोऽत्यद्भुतदर्शनाः ॥ दर्शयामास शुश्रूषां स्वर्चिताः कुर्वतीर्विभुः ॥ १२ ॥ ते देवानुचरा दृष्ट्वा स्त्रियः श्रीरिव रूपिणीः ॥ गन्धेन मुमुहुस्तासां रूपौदार्यहतश्रियः ॥ १३ ॥ तानाह देवदेवेशः प्रणतान्प्रहसन्निव ॥ आसामेकतमां वृङ्ध्वं सवर्णां स्वर्गभूषणाम् ॥ १४ ॥ ओमित्यादेशमादाय कृत्वा तं सुरवन्दिनः ॥ उर्वशीमप्सरः श्रेष्ठां पुरस्कृत्य दिवं ययुः ॥ १५ ॥ इन्द्रायानम्य सदसि शृण्वतां त्रिदिवौक-

लक्ष्यबाट भ्रष्ट हुँदैनन् ॥ १० ॥ केही व्यक्ति अपार समुद्र झैं भोक-प्यास, जाडो-गर्मी र वर्षा तीनै कालका गुण, वायु, रसना र शिश्नेन्द्रियको वेग नाघेर पनि उल्टै निष्फल क्रोधको वशीभूत हुन्छन् ! जस्तै—कुनै समुद्र अपार तरेर पनि गोखुर झैं सानु खाल्डमा डुबुन् तथा आफ्नो कठोर तपस्या पनि बिसिदेउन् ॥ ११ ॥ यसरी देवगणले यसरी स्तुति गरेपछि तिनको गर्व चूर्ण पार्न नारायण भगवान्ले तिनलाई अनेक थरिका वस्त्रालङ्कारले सुसज्जित तथा अद्भुत रूप-लावण्य युक्त अनेक स्त्रीहरू देखाए, जो आश्रममा बसेर उनको सेवा गरिरहेका थिए ॥ १२ ॥ महारानी लक्ष्मी झैं रूपवती ती नारीहरूलाई देखेर तथा तिनका सौन्दर्यको महिमाले कान्तिहीन देवता तिनका अङ्गको दिव्य गन्धले मोहित भए ॥ १३ ॥ अब अतिशय दीनतामा प्राप्त ती देवानुचरसित भगवान्ले आज्ञा भयो—यी मध्ये जुन तिम्रो अनुरूप छन्, कुनै यौटीलाई स्वीकार गरेर लेऊ । तिमी जसलाई रोज्नेछौ त्यो स्त्री स्वर्गलोकको भूषणस्वरूपा हुनेछ' ॥ १४ ॥ यति सुनेपछि 'हुन्छ' भनेर ती देवदूत भगवानको आज्ञानुसार ती अप्सराहरूमा श्रेष्ठ सुन्दरी उर्वशीलाई

लिएर प्रभुलाई प्रणाम गरेर स्वर्गलोक फर्किए ॥ १५ ॥ उहाँ पुगेर तिनले देवराज इन्द्रलाई प्रणाम गरेर देवताहरूको साम्मुन्ने भगवान् नारायणको बल तथा प्रभाव सुनाए। त्यो सुनेर इन्द्र निकै भयभीत र विस्मित भए ॥ १६ ॥ त्यसै गरी भगवान् अच्युतले हंसावतार लिएर आत्मज्ञानको उपदेश दिएका थिए। दत्तात्रेय, सनक, सनन्दन, सनातन र सनत्कुमार तथा हाम्रा पिता श्रीऋषभदेव—यी सबै जगत्को कल्याणका निम्ति अवतार लिने भएका भगवान् विष्णुका कलावतार हुन्। यसै प्रकार हयग्रीव अवतार लिएर भगवान् मधुसूदनले वेदको उद्धार गरेका थिए ॥ १७ ॥ प्रलयकालमा मत्स्यावतार लिएर उनले मनु, पृथ्वी र औषधिहरूको रक्षा गरे। वराह अवतारमा जलमा डुबेकी पृथ्वीको उद्धार गर्ने बेलामा नारायणले दितिनन्दन हिरण्याक्षलाई मारे। कूर्मावतारमा समुद्र मन्थनको बेला मन्दराचल पिठिउँमा धारण गरे र हरि अवतारमा आफ्ना शरणागत आर्त गजराजलाई ग्राहबाट बचाए ॥१८॥ उनै भगवान्ले एक समय समुद्रमा परेर स्तुति गर्ने तथा तपस्याले अत्यन्त क्षीण शरीर हुने ऋषिहरूको रक्षा गरे। गोपदमात्र जलमा डुब्ने र भगवान्को स्तुति गर्ने ती बालखिल्यादि ऋषिहरूको उद्धार गरे। वृत्रवध ब्रह्महत्याको डरले लुकेका इन्द्रको उनैले रक्षा गरेर दानवहरूद्वारा बन्दी बनाई राखिएका देवताहरूका अनाथ स्त्रीहरूलाई उनीहरूबाट

साम् ॥ ऊचुर्नारायणबलं शक्रस्तत्रास विस्मितः ॥ १६ ॥ हंसस्वरूप्यवददच्युत आत्मयोगं दत्तः कुमार ऋषभो भगवान्पिता नः ॥ विष्णुः शिवाय जगतां कलयावतीर्णस्तेनाहृता मधुभिदा श्रुतयो हयास्ये ॥ १७ ॥ गुप्तोऽप्यये मनुरिलौषधयश्च मात्स्ये क्रौडे हतो दितिज उद्धरताम्भसः क्ष्माम् ॥ कौर्मे धृतोऽद्रिरमृतोन्मथने स्वपृष्ठे ग्राहात्प्रपन्नमिभराजममुञ्चदार्तम् ॥१८॥ संस्तुन्वतोऽब्धिपतितान्छ्रमणानृषींश्च शक्रं च वृत्रवधतस्तमसि प्रविष्टम् ॥ देवस्त्रियोऽसुरगृहे पिहिता अनाथा जघ्नेऽसुरेन्द्रमभयाय सतां नृसिंहे ॥१९॥ देवासुरे युधि च दैत्यपतीन्सुरार्थे हत्वाऽन्तरेषु भुवनान्यदधात्कलाभिः ॥ भूत्वाऽथ वामन इमामहरद्बलेः क्ष्मां याञ्चाछलेन समदाददितेः सुतेभ्यः ॥ २० ॥ निः क्षत्रियामकृत गां च त्रिः सप्तकृत्वो रामस्तु हैहयकुलात्ययभार्गवाग्निः ॥ सोऽब्धिं बबन्ध दशवक्त्रमहन्सलङ्कं सीतापतिर्जयति लोकमलघ्नकीर्तिः ॥ २१ ॥ भूमेर्भरावतरणाय यदुष्वजन्मा जातः करिष्यति सुरैरपि दुष्कराणि ॥ वादैर्विमोहयति यज्ञकृतोऽतदर्हाञ्छूद्रान्कलौ क्षितिभुजो न्यहनिष्यदन्ते ॥ २२ ॥ एवंविधानि कर्माणि जन्मानि च जगत्पतेः ॥

छुटाए र नृसिंहावतारमा सज्जनवर्गलाई अभय पार्नका निम्ति उनले दैत्यराज हिरण्यकशिपुको संहार गरे ॥१९॥ देवासुर संग्राममा भगवान्ले देवताहरूको उपकारका निम्ति दैत्यगणको वध गरे। यसरी विभिन्न मन्वन्तरमा उनले आफ्नो शक्तिद्वारा त्रिलोकको रक्षा गरे। फेरि वामन अवतारमा उनले भिक्षाको छलले यो पृथ्वी दैत्यराज बलिसित खोसेर देवताहरूलाई सुम्पिदिए ॥२०॥ हैहयवंशलाई नष्ट पार्न भृगुकुलमा अग्निस्वरूप परशुराम-अवतार लिएर एक्काइस पल्ट पृथ्वीलाई क्षत्रियहीन पारे। उनले रामावतारमा समुद्रमा सेतु बाँधे र लङ्का सहित दस मस्तक हुने रावणलाई नष्ट पारे। संसारको मल नष्ट पार्ने निर्मल कीर्ति हुने ती सीतापतिको सदा जय होस् ॥२१॥ भूमिको भार उतार्नका निम्ति उनै अजन्मा भगवान् यदुकुलमा श्रीकृष्णरूपले अवतार लिएर यस्ता अद्भुत कर्म गर्नेछन्, जो देवताहरूको निम्ति पनि दुष्कर छ। कलिमा बुद्धावतार लिएर ती यज्ञका अनधिकारीहरूलाई आफ्नू अहिंसावादले मोहित पार्नेछन्। कलियुगमा कल्कि-अवतार लिएर शूद्रजातिका राजाहरूलाई मार्नेछन् ॥२२॥ अतुल-कीर्तिशाली विश्वनाथ भगवान् हरिका यस्तै अनेकौं जन्म र कर्मका महात्माहरूले

1273

वर्णन गरें ॥ २३ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे पं० गौरीशंकर 'वासिष्ठ' कृत नेपाली भाषाटीकायां चतुर्थोऽध्यायः ॥ ४ ॥

( भगवान्को भक्ति-हीन पुरुषको गति र पूजाविधि वर्णन )—भगवान्का अनेक अवतारहरूको गाथा सुनेर राजा निमिले सोधे–हे आत्मज्ञानीहरूमा श्रेष्ठ मुनिगण ! जसका कामना भएका छैनन्, जसका इन्द्रिय वशमा छैनन् र जो भगवान् विष्णुको भजन पनि गर्दैनन्, तिनको के गति हुन्छ, त्यो आज्ञा हवस् ॥१॥ चमस ऋषि भन्दछन्–भगवान् आदिपुरुषका मुख, बाहु, तिघ्रा तथा चरणले सत्वादि गुणको अनुसार आश्रमसमेत भिन्न-भिन्न चार वर्ण जायमान भए ॥ २ ॥ यी वर्णाश्रममा उत्पन्न भएर पनि जो व्यक्ति आफ्नू उत्पत्ति स्थान-स्वरूप नारायणलाई भज्दैनन् वा उनको अनादर गर्दछन्, ती आफ्नू स्थानबाट भ्रष्ट भएर तल झर्दछन् ॥३॥ अँ, जो व्यक्ति हरिकथा वा हरिकीर्तन जान्दैनन्, ती व्यक्ति, स्त्री तथा शूद्रगण हजुर जस्ता भगवद्भक्तको दयाका पात्र नै हुन्छन् ॥ ४ ॥ अनेक ब्राह्मण, क्षत्रिय र वैश्य वेदाध्ययन तथा यज्ञोपवीतादि संस्कारले गर्दा हरिचरणको सामीप्यको अधिकार

भूरीणि भूरियशसो वर्णितानि महाभुज ॥ २३ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे चतुर्थोऽध्यायः ॥ ४ ॥

राजोवाच ॥ भगवन्तं हरिं प्रायो न भजन्त्यात्मवित्तमाः ॥ तेषामशान्तकामानां का निष्ठा विजितात्मनाम् ॥ १ ॥ चमस उवाच ॥ मुखबाहूरुपादेभ्यः पुरुषस्य श्रमैः सह ॥ चत्वारो जज्ञिरे वर्णा गुणैर्विप्रादयः पृथक् ॥२॥ य एषां पुरुषं साक्षादात्मप्रभवमीश्वरम् ॥ न भजन्त्यवजानन्ति स्थानाद्भ्रष्टाः पतन्त्यधः ॥३॥ दूरे हरिकथाः केचिद्दूरे चाच्युतकीर्तनाः ॥ स्त्रियःशूद्रादयश्चैव तेऽनुकम्प्या भवादृशाम् ॥४॥ विप्रो राजन्यवैश्यौ च हरेःप्राप्ताः पदान्तिकम् ॥ श्रौतेन जन्मनाथापि मुह्यन्त्याम्नायवादिनः ॥५॥ कर्मण्यकोविदाः स्तब्धा मूर्खाः पण्डितमानिनः ॥ वदन्ति चाटुकान्मूढा यया माध्व्या गिरोत्सुकाः ॥६॥ रजसा घोरसङ्कल्पाः कामुका अहिमन्यवः ॥ दाम्भिका मानिनः पापा विहसन्त्यच्युतप्रियान् ॥ ७ ॥ वदन्ति तेऽन्योन्यमुपासितस्त्रियो गृहेषु मैथुन्यसुखेषु चाशिषः ॥ यजन्त्यसृष्टान्नविधानदक्षिणं वृत्त्यै परं घ्नन्ति पशूनतद्विदः ॥ ८ ॥ श्रिया विभूत्याऽभिजनेन विद्यया त्यागेन रूपेण बलेन कर्मणा ॥ जातस्मयेनान्धधियः सहेश्वरान् सतोऽवमन्यन्ति हरिप्रियान्खलाः ॥ ९ ॥ सर्वेषु शश्वत्तनुभृत्स्ववस्थितं यथा खमात्मानमभीष्टमीश्वरम् ॥ वेदोपगीतं च न शृण्वतेऽबुधा मनोरथानां प्रवदन्ति वार्तया ॥ १० ॥ लोके व्यवायामिषमद्यसेवा नित्यास्तु जन्तोर्नहि तत्र चोदना ॥

पाएर पनि वैदिक अर्थवादले मोहित हुन्छन् ॥ ५ ॥ ती कर्मका रहस्य नजान्ने उद्धत र मूर्ख भएर पनि आफूलाई पण्डित मान्दछन् र फलश्रुतिका मधुर वाणीले मोहित भएर निकै ठूलो उत्सुकताले चाप्लुसी मीठो वाणी बोल्दछन् ॥६॥ ती कर्माभिमानी पुरुष रजोगुणको अधिकताले घोर संकल्प हुने, ठूला कामी, सर्पसमान क्रोधी, पाखण्डी, अभिमानी र पापी हुन्छन् । ती भगवान्का प्रियभक्तको उपहास गर्दै हिंड्दछन् ॥७॥ ती खोलभाट व्यक्ति प्रधानतः मैथुन सुख हुने घरमा आसक्त भएर परस्पर सोमको नै चर्चा गर्दछन् । ती व्यक्ति कर्मका रहस्यले अनभिज्ञ हुन्छन् र अन्नदान तथा दक्षिणा-रहित यज्ञादि गर्दै उदरपूर्तिको निम्ति पशुवध गर्दछन् ॥ ८ ॥ धन, वैभव, विद्यादान, रूप, बोल, कर्म तथा उत्तम कुल आदिको गर्वले अन्धो बुद्धि तथा विचार शून्य भएर ती दुष्ट भगवान् सहित भगवद्भक्त महात्माहरूको पनि तिरस्कार गर्न थाल्दछन् ॥ ९ ॥ जो आकाश झैं सबै देहधारीहरूमा सधैं स्थित र तिनको

12-74

प्रिय आत्मा हुन्, त्यस्ता वेद-प्रतिपादित भगवान्को विषयमा ती अज्ञ केही जान्दैनन् । कुराकानीको प्रसङ्गमा पनि ती थरि-थरिका कामनाकै चर्चा गर्दछन् ॥१०॥ स्त्रीप्रसंग र मांस-रक्सी सेवनमा सबै जीवको स्वाभाविक प्रवृत्ति रहन्छ, तर शास्त्रमा तिनको निम्ति कुनै विधान छैन । उनको निम्ति विवाह, यज्ञ र सौत्रामणि यज्ञमा सुराग्रहद्वारा मांस भक्षणको व्यवस्था छ, अन्य सबैलाई इनको निवृत्ति नै इष्ट रहन्छ ॥११॥ धनको पनि धर्म नै एकमात्र फल हो, किनकि धर्मले नै विज्ञान र अपरोक्ष साक्षात्कार सहित ज्ञान प्राप्ति हुन्छ र त्यसपछि शान्ति मिल्दछ । तर मानिस त्यसको उपयोग घर-गृहस्थीको निम्ति नै गर्दछन् र सधैं आफ्नू कपालमा उभिएको मृत्युलाई पनि देख्न सक्तैनन् ॥ १२ ॥ सौत्रामणि यज्ञमा रक्सी केवल सुँघ्ने विधान छ, पिउने होइन । यज्ञादिमा पशुको केवल आलभन :अर्थात् छुने विधान छ, हिंसा गर्ने होइन । केवल सन्तानोत्पादनको निम्ति स्त्री-प्रसंगमा प्रवृत्त हुनु भनेको छ, विषय-सुखको निम्ति होइन । यस विशुद्ध धर्मलाई ती मूर्ख जान्न सक्तैनन् ॥ १३ ॥ यो कथन राम्ररी नजान्ने व्यक्ति तथा अत्यन्त अभिमानी र आफूमा अहङ्कार राख्ने जो प्राणी छन्, ती जो कुनै कुरामा विश्वास गरेर पशुसित द्रोह गर्दछन्, उनीद्वारा मारिएका तिनै पशु पछि उनैलाई खान्छन् ॥ १४ ॥

व्यवस्थितिस्तेषु विवाहयज्ञसुराग्रहैरासु निवृत्तिरिष्टा ॥ ११ ॥ धनं च धर्मैकफलं यतो वै ज्ञानं सविज्ञानमनुप्रशान्ति ॥ गृहेषु युञ्जन्ति कलेवरस्य मृत्युं न पश्यन्ति दुरन्तवीर्यम् ॥ १२ ॥ यद्घ्राणभक्षो विहितः सुरायास्तथा पशोरालभनं न हिंसा ॥ एवं व्यवायः प्रजया न रत्या इमं विशुद्धं न विदुः स्वधर्मम् ॥ १३ ॥ ये त्वनेवंविदोऽसन्तः स्तब्धाः सदभिमानिनः ॥ पशून्द्रुह्यन्ति विस्रब्धाः प्रेत्य खादन्ति ते च तान् ॥ १४ ॥ द्विषन्तः परकायेषु स्वात्मानं हरिमीश्वरम् ॥ मृतके सानुबन्धेऽस्मिन्बद्धस्नेहाः पतन्त्यधः ॥ १५ ॥ ये कैवल्यमसम्प्राप्ता ये चातीताश्च मूढताम् ॥ त्रैवर्गिका ह्यक्षणिका आत्मानं घातयन्ति ते ॥ १६ ॥ एत आत्महनोऽशान्ता अज्ञाने ज्ञानमानिनः ॥ सीदन्त्यकृतकृत्या वै कालध्वस्तमनोरथाः ॥ १७ ॥ हित्वाऽत्यायासरचिता गृहापत्यसुहृच्छ्रियः ॥ तमो विशन्त्यनिच्छन्तो वासुदेवपराङ्मुखाः ॥ १८ ॥ राजोवाच ॥ कस्मिन्काले स भगवान् किंवर्णः कीदृशो नृभिः ॥ नाम्ना वा केन विधिना पूज्यते तदिहोच्यताम् ॥ १९ ॥ करभाजन उवाच ॥ कृतं त्रेता द्वापरं च कलिरित्येषु केशवः ॥

यो अवश्य नष्ट हुने शरीर र एक दिन अवश्य त्याग्नु पर्ने धनमा स्नेह गरेर जो अन्य देहमा विद्यमान आफ्नू नै आत्मा श्रीहरिसित द्वेष गर्दछन्, त्यस्ता व्यक्ति अवश्य अधोगतिमा प्राप्त हुन्छन् ॥१५॥ जसले आफ्नू पूर्ण ज्ञानद्वारा कैवल्यपद त प्राप्त गर्न सकेन, तर मूढताको पल्लोपट्टि पुगिसकेका छन्, यस्ता धर्म, अर्थ र कामरूपी त्रिवर्गमा अल्झेका पुरुष एक दिन पनि शान्ति पाउँदैनन् र स्वयं आफ्नू सर्वस्व नष्ट पार्दछन् ॥ १६ ॥ अज्ञानलाई नै ज्ञान मान्ने ती अशान्तात्मा तथा आत्मघाती प्राणी कालद्वारा आफ्ना सबै मनोरथ नष्ट भए पनि अकृतकार्य भएर अत्यन्त कष्ट पाउँछन् ॥ १७ ॥ ती भगवद्विरोधी व्यक्ति उत्पन्न कष्टले प्राप्त आफ्नू घर, पुत्र, मित्र र धनादिलाई यहीं छाडेर निश्चयनै अन्धकारमय नरकमा जाकिन्छन् ॥१८॥ राजा निमि भन्दछन्—कुन युगमा भगवान्को कस्तो वर्ण र कस्तो स्वरूप हुन्छ तथा कुन नाम र विधिले तिनको पूजन गरिन्छ, यो बताइयोस् ॥ १९ ॥ करभाजनले भने—हे राजन् ! सत्य, त्रेता, द्वापर र कलि—यी चारै युगमा भगवान् भिन्न-भिन्न वर्ण, नाम र आकार आदि धारण गर्दछन् । [illegible]

1275

भिन्न-भिन्न विधिले पूजा गर्दछ ॥ २० ॥ सत्ययुगमा भगवान् शुक्लवर्ण, चतुर्भुज, जटाजूटधारी, वल्कल वसन, कृष्णमृगचर्म, यज्ञोपवीत, रुद्राक्ष र दण्ड-कमण्डलु आदि धारण गर्दछन् ॥ २१ ॥ त्यस बेलाका शान्त, निर्वैर, सहृदय र समदर्शी व्यक्ति ती भगवान् नारायणको शम, दम र तप द्वारा उपासना गर्दछन् ॥ २२ ॥ त्यस बखत उनको हंस, सुवर्ण, वैकुण्ठ, धर्म, योगेश्वर, मनु, ईश्वर पुरुष, अव्यक्त तथा परमात्मा आदि नामले गुणगान गर्दछन् ॥ २३ ॥ त्रेतायुगमा भगवान् रक्तवर्ण, चतुर्भुज, त्रिमेखलाधारी, सुनौलो कपाल भएका वेदत्रयीरूप र स्रुक्-स्रुवा आदि यज्ञपात्रले सुशोभित रहन्छन् ॥ २४ ॥ त्यस बेलामा धर्मात्मा र ब्रह्मवादी पुरुष ती सर्वदेवमय हरिको वेदत्रयीरूप कर्मकाण्डको विधिले पूजा गर्दछन् ॥ २५ ॥ ती विष्णु, यज्ञ, पृश्निगर्भ, सर्वदेव, उरुक्रम, वृषाकपि, जयन्त र उरुगाय आदि नामले अभिहित हुन्छन् ॥ २६ ॥ द्वापरयुगमा भगवान् श्यामवर्ण, पीताम्बरधारी,

नानावर्णाभिधाकारो नानैव विधिनेज्यते ॥ २० ॥ कृते शुक्लश्चतुर्बाहुर्जटिलो वल्कलाम्बरः ॥ कृष्णाजिनोपवीताक्षान्बिभ्रद्दण्डकमण्डलू ॥ २१ ॥ मनुष्यास्तु तदा शान्ता निर्वैराः सुहृदः समाः ॥ यजन्ति तपसा देवं शमेन च दमेन च ॥ २२ ॥ हंसः सुपर्णो वैकुण्ठो धर्मो योगेश्वरो मनुः ॥ ईश्वरः पुरुषोऽव्यक्तः परमात्मेति गीयते ॥ २३ ॥ त्रेतायां रक्तवर्णोऽसौ चतुर्बाहुस्त्रिमेखलः ॥ हिरण्यकेशस्त्रय्यात्मा स्रुक्स्रुवाद्युपलक्षणः ॥ २४ ॥ तं तदा मनुजा देवं सर्वदेवमयं हरिम् ॥ यजन्ति विद्यया त्रय्या धर्मिष्ठा ब्रह्मवादिनः ॥ २५॥ विष्णुर्यज्ञः पृश्निगर्भः सर्वदेव उरुक्रमः ॥ वृषाकपिर्जयन्तश्च उरुगाय इतीर्यते ॥ २६ ॥ द्वापरे भगवाञ्छ्यामः पीतवासा निजायुधः ॥ श्रीवत्सादिभिरङ्कैश्च लक्षणैरुपलक्षितः ॥ २७ ॥ तं तदा पुरुषं मर्त्या महाराजोपलक्षणम् ॥ यजन्ति वेदतन्त्राभ्यां परं जिज्ञासवो नृप ॥ २८ ॥ नमस्ते वासुदेवाय नमः सङ्कर्षणाय च ॥ प्रद्युम्नायानिरुद्धाय तुभ्यं भगवते नमः ॥ २९ ॥ नारायणाय ऋषये पुरुषाय महात्मने ॥ विश्वेश्वराय विश्वाय सर्वभूतात्मने नमः ॥ ३० ॥ इति द्वापर उर्वीश स्तुवन्ति जगदीश्वरम् ॥ नानातन्त्रविधानेन कलावपि यथा शृणु ॥ ३१ ॥ कृष्णवर्णं त्विषाकृष्णं साङ्गोपाङ्गास्त्रपार्षदम् ॥ यज्ञैः सङ्कीर्तनप्रायैर्यजन्ति हि सुमेधसः ॥ ३२ ॥ ध्येयं सदा परिभवघ्नमभीष्टदोऽहं तीर्थास्पदं शिवविरिञ्चिनुतं शरण्यम् ॥ भृत्यार्तिहं प्रणतपाल भवाब्धिपोतं वन्दे महापुरुष ते चरणारविन्दम् ॥ ३३ ॥ त्यक्त्वा सुदुस्त्यजसुरेप्सितराज्यलक्ष्मीं धर्मिष्ठ आर्यवचसा यदगादरण्यम् ॥ मायामृगं दयितयेप्सितमन्वधावद्वन्दे महापुरुष ते

चक्रादि आयुध युक्त तथा श्रीवत्सादि एवं कौस्तुभादि चिन्हले सुशोभित भएर अवतार लिन्छन् ॥ २७ ॥ हे राजन् ! यस प्रकारका विविध राजचिन्हले युक्त परमात्मालाई जिज्ञासु व्यक्ति वैदिक र तान्त्रिक विधिले यजन गर्दछन् ॥ २८ ॥ वासुदेव, सङ्कर्षण, प्रद्युम्न, अनिरुद्ध एवं षडैश्वर्य युक्त हजुरलाई प्रणाम छ । ऋषिश्रेष्ठ नारायण, नर, विश्वेश्वर, विश्वरूप तथा सर्वभूतात्मा हजुरलाई अनेक प्रणाम छ । यसरी मानिस विविध शास्त्र विधिले द्वापर युगमा जगदीश्वरको स्तुति गर्दछन् । अब जसरी कलियुगमा उनको उपासना गरिन्छ, त्यो पनि सुन–॥ २९-३१ ॥ कलिमा कृष्णवर्ण, कृष्णकान्तिमय, साङ्गोपाङ्ग र अनेक पार्षदहरूले युक्त भगवान् कृष्णलाई बुद्धिमान् व्यक्ति संकीर्तन र मनन प्रायः यज्ञ द्वारा पूजा गर्दछन् ॥३२॥ ती स्तुति यस प्रकार गर्दछन्–'हे प्रणतपालक ! हामी हजुरका चरणकमलको वन्दना गर्दछौं । सधैं ध्यान गर्न योग्य मायाकृत पराभवलाई नष्ट पार्ने भक्त

12 76

वांछित फलदाता, तीर्थस्वरूप शिव र ब्रह्मादिले वन्दित शरणदायक सेवकका कष्ट निवारण गर्ने, संसाररूपी घोर समुद्रका निम्ति हजुर जहाज झैं हुनुहुन्छ ॥३३॥ हे धर्मात्मन् ! हे महापुरुष ! आफ्ना पिता (दशरथ) का वचनले सुख र वांछित तथा दुस्त्यज लक्ष्मी त्यागेर जो वनमा गए तथा आफ्नी प्रिया सीताको अभिलषित कपट-मृगको पछि दगुरे, ती हजुरका चरणकमलको हामी बारम्बार वन्दना गर्दछौं ॥ ३४ ॥ यसरी भिन्न-भिन्न युगका व्यक्ति आफाफ्ना युगको अनुरूप वर्ण, नाम र रूपादिले सबै पुरुषार्थका अधीश्वर श्रीहरिको पूजा गर्दछन् ॥३५॥ हे राजन् ! गुणज्ञ तथा सारसंग्रही सज्जन सबभन्दा बढी प्रिय कलियुगलाई नै मान्दछन्, किनकि यसमा भगवान्‌का नाम-सङ्कीर्तनले नै सबै स्वार्थसिद्धि हुन्छन् ॥३६॥ विविध योनिहरूमा ठक्कर खाँदै हिड्ने प्राणीको हरिकीर्तन भन्दा ठूलो कुनै लाभ छैन। किनकि यसले संसार-बन्धन नष्ट हुन्छन् र आत्मालाई परम शान्ति प्राप्त हुन्छ ॥ ३७॥ हे राजन् ! सत्यादि युगका व्यक्ति पनि कलियुगमा जन्मने मन गर्दछन्। कलिमा अनेक भगवद्भक्त महापुरुष जहाँ-तहाँ जन्म लिनेछन्। तिनमा धेरै भक्त द्रविडदेशमा हुनेछन्।

चरणारविन्दम् ॥ ३४ ॥ एवं युगानुरूपाभ्यां भगवान् युगवर्तिभिः ॥ मनुजैरिज्यते राजञ्छ्रेयसामीश्वरो हरिः ॥ ३५ ॥ कलिं सभाजयन्त्यार्या गुणज्ञाः सारभागिनः ॥ यत्र संकीर्तनेनैव सर्वः स्वार्थोऽभिलभ्यते ॥ ३६ ॥ न ह्यतः परमो लाभो देहिनां भ्राम्यतामिह ॥ यतो विन्देत परमां शान्तिं नश्यति संसृतिः ॥ ३७ ॥ कृतादिषु प्रजा राजन्कलाविच्छन्ति सम्भवम् ॥ कलौ खलु भविष्यन्ति नारायणपरायणाः ॥ ३८ ॥ क्वचि-त्क्वचिन्महाराज द्राविडेषु च भूरिशः ॥ ताम्रपर्णी नदी यत्र कृतमाला पयस्विनी ॥ ३९ ॥ कावेरी च महापुण्या प्रतीची च महानदी ॥ ये पिबन्ति जलं तासां मनुजा मनुजेश्वर ॥ प्रायो भक्ता भविष्यन्ति वासुदेवेऽमलाशयाः ॥ ४० ॥ देवर्षिभूताप्तनृणां पितॄणां न किंकरो नायमृणी च राजन् ॥ सर्वात्मना यः शरणं शरण्यं गतो मुकुन्दं परिहृत्य कर्तुम् ॥ ४१ ॥ स्वपादमूलं भजतः प्रियस्य त्यक्तान्यभावस्य हरिः परेशः ॥ विकर्म यच्चोत्पतितं कथञ्चिद्धुनोति सर्वं हृदि सन्निविष्टः ॥ ४२ ॥ नारद उवाच ॥ धर्मान्भागवतानित्थं श्रुत्वाऽथ मिथिलेश्वरः ॥ जायन्तेयान्मुनीन्प्रीतः सोपाध्यायो ह्यपूजयत् ॥ ४३ ॥ ततोऽन्तर्दधिरे सिद्धाः सर्वलोकस्य पश्यतः ॥ राजा धर्मानुपातिष्ठन्नवाप परमां गतिम् ॥ ४४ ॥ त्वमप्येतान्महाभाग धर्मान्भा-गवताञ्छ्रुतान् ॥ आस्थितः श्रद्धया युक्तो निःसङ्गो यास्यसे परम् ॥ ४५ ॥ युवयोः खलु दम्पत्योर्यशसा पूरितं जगत् ॥ पुत्रतामगमद्यद्वां भगवा-

जहाँ ताम्रपर्णी कृतमाला, पयस्विनी, पवित्र कावेरी, प्रतीची तथा महानदी आदि नदीहरू बग्दछन् ! हे राजन् ! जो जन ती नदीहरूको जल पिउँछन्, ती शुद्धचित्त भएर वासुदेवका भक्त बन्दछन् ॥ ३८-४० ॥ हे राजन् ! जो सबै काम छाडेर सम्पूर्णरूपले शरणागतवत्सल भगवान् कृष्णचन्द्रको शरणमा जान्छन्, ती देव, ऋषि, भूतगण, कुटुम्बीजन अथवा पितृगण कसैका पनि दास अथवा ऋणी रहन्नन् ॥ ४१ ॥ अनन्यभावले आफ्ना चरणकमलको भजन गर्ने भक्तद्वारा यदि कुनै निषिद्ध कर्म भयो भने पनि उनको हृदयमा विराजमान ती महाप्रभु ती कर्मको मार्जन गरिदिन्छन् ॥ ४२ ॥ नारदजी भन्दछन्—यो भागवत-धर्म सुनेर उपाध्याय सहित मिथिलाधिपति महाराज निमिले ती जयन्ती-तनय योगीश्वरहरूको विधिवत् पूजा गरे ॥ ४३ ॥ अनि सबैले हेर्दा-हेर्दै ती सिद्ध अन्तर्धान भए र राजा निमिले ती धर्मको पालन गरेर अन्त्यमा परमपद प्राप्त गरे ॥ ४४ ॥

हे महाभाग वसुदेवजी ! तिमी पनि संसारबाट असङ्ग भएर यस भागवत-धर्मको श्रद्धापूर्वक पालन गरे परमगति पाउने छौ॥४५॥ तिमी दम्पतीको यशले सारा संसार व्याप्त छ, किनकि साक्षात् त्रैलोक्य नाथ भगवान् कृष्ण तिम्रा पुत्र भएर जन्मेका छन् ॥ ४६ ॥ ती भगवान् कृष्णमा पुत्र स्नेह गर्दै, उनलाई हेर्दै, आलिंगन गर्दै, कुराकानी गर्दै र सुत्ने-बस्ने र खान-पान गर्नाले तिमी दुवैले आफ्ना अन्तःकरण पवित्र परिसक्यौ ॥ ४७ ॥ जब भगवान्सित वैरत्व गरेर शिशुपाल, पौण्ड्क र शाल्वादि राजा सुत्दा-बस्ता सदैव श्रीकृष्णकै गति हेराई र चेष्टा आदिको ध्यान गरेर तन्मय हुनाले गर्दा उनकै समान भइसके। अनि जो एकमात्र उनकै प्रेमी भक्त छन्, उनको त कुरै छैन ॥ ४८ ॥ जसले आफ्ना ऐश्वर्यलाई माया-मानवरूपले लुकाइराखेका छन्, ती परम पुरुष, अव्यय र सर्वेश्वर भगवान् कृष्णलाई तिमी आफ्नू छोरो मात्र नठान ॥ ४९ ॥ भूमिका भार र राजा-रूपधारी असुरको नाश र सज्जनको रक्षाका निमित्त अवतार लिने यी कृष्णचन्द्रको कीर्ति भक्तजनको मुक्तिका लागि नै संसारमा फैलिएको छ ॥ ५० ॥ शुकदेव भन्दछन्—हे राजन् !

नीश्वरो हरिः ॥४६॥ दर्शनालिङ्गनालापैः शयनासनभोजनैः ॥ आत्मा वां पावितः कृष्णे पुत्रस्नेहं प्रकुर्वतोः ॥४७॥ वैरेण यं नृपतयः शिशुपालपौण्ड्रशाल्वादयो गतिविलासविलोकनाद्यैः ॥ ध्यायन्त आकृतधियः शयनासनादौ तत्साम्यमापुरनुरक्तधियां पुनः किम् ॥४८॥ माऽपत्यबुद्धिमकृथाः कृष्णे सर्वात्मनीश्वरे ॥ मायामनुष्यभावेन गूढैश्वर्ये परेऽव्यये ॥ ४९ ॥ भूभारासुरराजन्यहन्तवे गुप्तये सताम् ॥ अवतीर्णस्य निर्वृत्यै यशो लोके वितन्यते ॥५०॥ श्रीशुक उवाच ॥ एतच्छ्रुत्वा महाभागो वसुदेवोऽतिविस्मितः ॥ देवकी च महाभागा जहतुर्मोहमात्मनः ॥५१॥ इतिहासमिमं पुण्यं धारयेद्यः समाहितः ॥ स विधूयेह शमलं ब्रह्मभूयाय कल्पते ॥५२॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे पञ्चमोऽध्यायः ॥५॥

श्रीशुक उवाच ॥ अथ ब्रह्मात्मजैर्देवैः प्रजेशैरावृतोऽभ्यगात् ॥ भवश्च भूतभव्येशो ययौ भूतगणैर्वृतः ॥ १ ॥ इन्द्रो मरुद्भिर्भगवानादित्या वसवोऽश्विनौ ॥ ऋभवोऽङ्गिरसो रुद्रा विश्वे साध्याश्च देवताः ॥ २ ॥ गन्धर्वाप्सरसो नागाः सिद्धचारणगुह्यकाः ॥ ऋषयः पितरश्चैव सविद्याधरकिन्नराः ॥ ३ ॥ द्वारकामुपसंजग्मुः सर्वे कृष्णदिदृक्षवः ॥ वपुषा येन भगवान्नरलोकमनोरमः ॥ यशो वितेने लोकेषु सर्वलोकमलापहम् ॥ ४ ॥ यस्यां विभ्राजमानायां समृद्धायां महर्द्धिभिः ॥ व्यचक्षतावितृप्ताक्षाः कृष्णमद्भुतदर्शनम् ॥ ५ ॥ स्वर्गोद्यानोपगैर्माल्यैश्छादयन्तो यदूत्तमम् ॥ गोभि-

यति सुनेर महाभाग वसुदेव तथा परम सौभाग्यवती देवकीले अतिशय विस्मित भएर आफ्नू मोह त्यागिदिए ॥५१॥ जो प्राणी सावधान मनले यस पवित्र इतिहासको स्मरण गर्दछ, त्यो यस लोकमा आफ्ना सबै पाप पखालेर ब्रह्मभावमा प्राप्त हुन्छ ॥५२॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे नेपाली भाषाटीकायां पञ्चमोऽध्यायः ॥ ५ ॥

श्रीशुकदेव भन्दछन्—हे राजन् ! एकपल्ट आफ्ना पुत्रहरू, देवगण तथा प्रजापति सहित ब्रह्माजी भूतगण समेत भूतभावन शंकर, मरुद्गणसहित देवराज इन्द्र, बाह्र आदित्य, अष्ट वसु, अश्विनी-कुमार, ऋभु, अङ्गिरा, रुद्र, विश्वेदेव, साध्यगण, देवगण, गन्धर्व, अप्सरा, नाग, सिद्ध, चारण, गुह्यक, ऋषिगण, पितृ, विद्याधर तथा किन्नर—यी सबै मिलेर कृष्णको दर्शन गर्न त्यस द्वारकामा आए, जसको द्वारा नरलोक-मनोरम भगवानले समस्त संसारको मल हरण गर्ने पवित्र सुयश सबै लोकमा फिंजाएका थिए । श्री गर्ग महर्षि

समृद्धिले सम्पन्न र देदीप्यमान द्वारकापुरीमा विराजमान भगवान् कृष्णको अद्भुत रूप र अतृप्त नेत्रले हेर्नलागे र स्वर्गको उपवन नन्दनवनमा उत्पन्न दिव्यपुष्पको वर्षाले यदुश्रेष्ठ भगवान् कृष्णलाई आच्छादित पार्दै तिनले विचित्र पदहरू र अर्थयुक्त सुललित वाक्यले जगन्नियन्ता कृष्णको स्तुति गरे ॥ १–६ ॥ देवगण भन्दछन्—हे नाथ ! कर्मका बन्धनबाट मुक्ति पाउने इच्छुक भक्तजन हजुरका जुन चरणको आफ्नू हृदयमा ध्यान गर्दछन्, तिनलाई हाम्रो बुद्धि, इन्द्रिय, प्राण, मन तथा वचनले प्रणाम गर्दछौं ॥७॥ हजुर आफ्नो त्रिगुणात्मिका मायाले उसका गुणमा नियन्तारूपले स्थित भएर यो अनिर्वचनीय प्रपञ्चको रचना, पालन र संहार गर्दछन्, तर हे अजित ! हजुर कहिल्यै यी कर्महरूमा लिप्त रहनु हुन्न, किनकि हजुर आफ्नू अखण्ड आनन्दमा निमग्न र रागादि दोषबाट पृथक् रहनु हुन्छ ॥ ८ ॥ हे सर्वश्रेष्ठ र पूज्य प्रभो ! जसको मन मलीन रहन्छ, तिनको विद्या, शास्त्र श्रवण, स्वध्याय, दान, तप र क्रियाले त्यस्तो शुद्धि कदापि हुँदैन, जस्तो हजुरको परमपावन यश श्रवणद्वारा पुष्ट भएर बढ्दो उत्तम श्रद्धा शुद्धि भएर आउँछ॥९॥ हे भगवन् !

श्चित्रपदार्थाभिस्तुष्टुवुर्जगदीश्वरम् ॥६॥ देवा ऊचुः ॥ नताः स्म ते नाथ पदारविन्दं बुद्धीन्द्रियप्राणमनोवचोभिः ॥ यच्चिन्त्यतेऽन्तर्हृदि भावयुक्तैर्मुमुक्षुभिः कर्ममयोरुपाशात् ॥ ७ ॥ त्वं मायया त्रिगुणयात्मनि दुर्विभाव्यं व्यक्तं सृजस्यवसि लुम्पसि तद्गुणस्थः ॥ नैतैर्भवानजित कर्मभिरज्यते वै यत्स्वे सुखेऽव्यवहितेऽभिरतोऽनवद्यः ॥ ८ ॥ शुद्धिर्नृणां न तु तथेड्य दुराशयानां विद्याश्रुताध्ययनदानतपःक्रियाभिः ॥ सत्त्वात्मनामृषभ ते यशसि प्रवृद्धसच्छ्रद्धया श्रवणसम्भृतया यथा स्यात् ॥ ९ ॥ स्यान्नस्तवाङ्घ्रिरशुभाशयधूमकेतुः क्षेमाय यो मुनिभिरार्द्रहृदोह्यमानः ॥ यः सात्वतैः समविभूतय आत्मवद्भिर्व्यूहेऽर्चितः सवनशः स्वरतिक्रमाय ॥१०॥ यश्चिन्त्यते प्रयतपाणिभिरध्वराग्नौ त्रय्या निरुक्तविधिनेश हविर्गृहीत्वा ॥ अध्यात्मयोग उत योगिभिरात्ममायां जिज्ञासुभिः परमभागवतैः परीष्टः ॥ ११ ॥ पर्युष्टया तव विभो वनमालयेयं संस्पर्धिनी भगवती प्रतिपत्निवच्छ्रीः ॥ यः सुप्रणीतममुयार्हणमाददन्नो भूयात्सदाङ्घ्रिरशुभाशयधूमकेतुः ॥ १२ ॥ केतुस्त्रिविक्रमयुतस्त्रिपतत्पताको यस्ते भयाभयकरोऽसुरदेवचम्वोः ॥ स्वर्गाय साधुषु खलेष्वितराय भूमन् पादः पुनातु भगवन्भजतामघं नः ॥ १३ ॥ नस्योतगाव इव यस्य वशे भवन्ति ब्रह्मादयस्तनुभृतो मिथुरर्द्यमानाः ॥

मुनिजन आफ्नू कल्याणार्थ जसको प्रेमार्द्र हृदयले पूजा गर्दछन्, धीर सात्वतगण अर्थात् यादव जन समान वैभव अर्थात् सालोक्यादिको प्राप्ति तथा स्वर्गको अतिक्रमणार्थ जसलाई तीनै समय वासुदेव, सङ्कर्षण, प्रद्युम्न र अनिरुद्ध यी चार व्यूहद्वारा पूजा गर्दछन्, याज्ञिक वेदत्रयी द्वारा कहिएको विधिले आफ्ना संयत हातमा हविष्य लिएर यज्ञाग्निमा आहुति दिई जसको चिन्तन गर्दै र हजुरको मायाका जिज्ञासु योगी जसका अध्यात्मयोगद्वारा ध्यान गर्दछन् र जो परम भागवतका एकमात्र आश्रय तथा परमइष्ट छन्, ती हजुरका चरणकमल हाम्रा सर्व अशुभहरू भस्म पार्न अग्निको काम गरुन् ॥१०॥११॥ हे विभो ! हजुरको बैलिएको वनमालाबाट भगवती लक्ष्मी यद्यपि सौताजस्तै डाह गर्दछिन्,तो तथापि हजुर त्यस मालाद्वारा गरिएको अर्चन-पूजन स्वीकार गर्नुहुन्छ । हजुरका चरण हाम्रा अशुभहरू भस्म पार्नको निम्ति सधैं अग्निस्वरूप होउन् । हे भूमन् ! वामन अवतारमा तीन धाराबाट बग्ने त्रिपथगा गङ्गा जसको पताका थियो, जो दानवलाई भय र देवगणलाई अभयदायक छ, त्यो हजुरको तीन पाइलाले युक्त चरण हजुरलाई भज्ने हामी भक्तहरूको पाप नष्ट गरोस् ॥१२॥१३॥

काम-क्रोधादिको कारण उहसा परस्पर संघर्ष हुन्छ, ती ब्रह्मादि सबै देहधारी देवता नाकमा छेडेका गोरू झैं जुन कालस्वरूप तथा प्रकृति-पुरुषदेखि टाढा हजुरका वशीभूत छन् त्यस्ता पुरुषोत्तमका चरण हाम्रो कल्याण गरुन् ॥ १४ ॥ हजुर नै जगत्को उत्पत्ति, स्थिति र लयका कारण हुनुहुन्छ, किनकि हजुरकै प्रकृति-पुरुष तथा महत्तत्त्वको नियन्त्रण गर्ने काल मानिन्छ । शीत, ग्रीष्म र वर्षारूपी तीन नाभिले युक्त गम्भीर वेगवान् कालस्वरूप हजुर पुरुषोत्तम नै सम्पूर्ण संसारको क्षय गर्न प्रवृत्त हुनुहुन्छ । १५ ॥ हजुरकै प्रेरणाले अमोघवीर्य पुरुष प्रकृतिले युक्त भएर महत्तत्त्वरूपी गर्भ स्थापित गर्दछ र त्रिगुणमयी मायाको अनुसरण गरेर त्यो महत्तत्त्व नै पृथ्वी, जल, तेज, वायु, आकाश, अहङ्कार तथा मनरूपी सात आवरणसमेत यस सुवर्णमय ब्रह्माण्डको रचना गर्दछ ॥ १६ ॥ अतः हे हृषीकेश ! हजुर चराचर जगत्का अधीश्वर हुनुहुन्छ । अतएव मायाका गुणवैषम्यले उपस्थित यी पदार्थहरू भोग्दै हजुर तिनमा लिप्त रहनु हुन्न र कतिपय व्यक्ति त उनलाई स्वयं त्यागेर पनि डसित डराउँछन् ॥ १७ ॥ किनकि तिनका इन्द्रियलाई मन्दहास्य द्वारा प्रदर्शित

कालस्य ते प्रकृतिपूरुषयोः परस्य शं नस्तनोतु चरणः पुरुषोत्तमस्य ॥ १४ ॥ अस्यासि हेतुरुदयस्थितिसंयमानामव्यक्तजीवमहतामपि कालमाहुः ॥ सोऽयं त्रिणाभिरखिलापचये प्रवृत्तः कालो गभीररय उत्तमपूरुषस्त्वम् ॥ १५ ॥ त्वत्तः पुमान्समधिगम्य यथा स्ववीर्यं धत्ते महान्तमिव गर्भममोघवीर्यः ॥ सोऽयं तयाऽनुगत आत्मन आण्डकोशं हैमं ससर्ज बहिरावरणैरुपेतम् ॥ १६ ॥ तत्तस्थुषश्च जगतश्च भवानधीशो यन्माययोत्थगुणविक्रियोपनीताम् ॥ अर्थाञ्जुषन्नपि हृषीकपते न लिप्तो येऽन्ये स्वतः परिहृतादपि बिभ्यति स्म ॥ १७ ॥ स्मायावलोकलवदर्शितभावहारिभ्रूमण्डलप्रहितसौरतमन्त्रशौण्डैः ॥ पत्न्यस्तु षोडशसहस्रमनङ्गबाणैर्यस्येन्द्रियं विमथितुं करणैर्न विभ्व्यः ॥ १८ ॥ विभ्व्यस्तवामृतकथोदवहास्त्रिलोक्याः पादावनेजसरितः शमलानि हन्तुम् ॥ आनुश्रवं श्रुतिभिरङ्घ्रिजमङ्गसङ्गैस्तीर्थद्वयं शुचिषदस्त उपस्पृशन्ति ॥ १९ ॥ बादरायणिरुवाच ॥ इत्यभिष्टूय विबुधः सेशः शतधृतिर्हरिम् ॥ अभ्यभाषत गोविन्दं प्रणम्याम्बरमाश्रितः ॥ २० ॥ ब्रह्मोवाच ॥ भूमेर्भारावताराय पुरा विज्ञापितः प्रभो ॥ त्वमस्माभिरशेषात्मंस्तत्तथैवोपपादितम् ॥ २१ ॥ धर्मश्च स्थापितः सत्सु सत्यसन्धेषु वै त्वया ॥ कीर्तिश्च दिक्षु विक्षिप्ता सर्वलोकमलापहा ॥ २२ ॥ अवतीर्य

भाव-भङ्गीयुक्त भृकुटीले चलाएका सुरत मन्त्र-परिपुष्ट कामबाण द्वारा सोह हजार रमणीहरूले पनि घायल पार्न सकेका थिएनन् ॥१८॥ हजुरको कथारूपी जल-प्रवाहले युक्त सुकीर्तिरूपी नदी तथा हजुरका पाउपखालेको जलले उत्पन्न गङ्गाजी—यी दुवै त्रैलोक्यका पापराशि पखाल्न समर्थ छन् । अतःपत्पङ्क्तसेवी विवेकीजन आफ्ना श्रवणेन्द्रियद्वारा हजुरको कीर्ति-नदीमा तथा शरीर द्वारा गङ्गामा डुबुल्की मार्दै यी दुवै तीर्थको सतत सेवन गर्दछन् ॥ १९ ॥ शुकदेवजी भन्दछन्—हे राजन् ! अन्य देवगण र श्रीमहादेव समेत आकाशमा स्थित भगवान् ब्रह्माजी श्रीकृष्ण भगवानको यस प्रकार स्तुति गरेर उनलाई प्रणाम गरी भन्नलागे ॥ २० ॥ ब्रह्माजीले भने—हे सर्वात्मन् प्रभो ! पहिले हामीले नै हजुरसित भूमिको भारी टार्नको निम्ति प्रार्थना गरेका थियौं । त्यो काम हजुरले उचितरूपले सम्पन्न गरिदिनु भयो ॥ २१ ॥ हजुरले सत्यपरायण साधु पुरुषहरूमा धर्मको स्थापना गरेर सबै लोकको मल हरण पार्ने आफ्नो कीर्ति दसै दिशाहरूमा फैलाइदिनुभयो ॥ २२ ॥ हजुरले यदुवंशमा अवतार लिई तथा यो अनुपम र दिव्य स्वरूप धारण गरेर जगत्को कल्याणार्थ आफ्नू उदात्त पराक्रमले

अगणित काम गरेका छन् ॥ २३ ॥ हे भगवन् ! हजुरका चरित्रको श्रवण र कीर्तन गर्ने साधु पुरुष कलियुगमा सहजै अज्ञानान्धकारबाट पारी तर्दछन् ॥ २४ ॥ हे पुरुषोत्तम ! हजुर यदुवंशमा उत्पन्न भएको एकसय पचीस वर्ष बितिसके ॥ २५ ॥ हे सर्वाधार ! अब यहाँ देवताहरूको कुनै कार्य शेष रहेको छैन र विप्र-श्रापले हजुरको यादव कुल पनि नष्ट भइसकेको छ ॥ २६ ॥ अतः यदि हजुरको इच्छा भए आफ्नू परमधाम पाल्नुहवस् र लोकसहित आफ्ना दास हामी लोकपालहरूको पालन गर्नोस् ॥ २७ ॥ भगवान् भन्नुहुन्छ–हे देवेश्वर ! तिमी जस्तो भन्दछौ मैले पनि त्यस्तै गर्ने निश्चो गरिसकेको छु । मैले तिमीहरूका काम पूर्ण गरेर पृथ्वीको भार टारिदिएँ । यो यादव वंश बल-वैभवले उन्मत्त भएर सारा संसार निल्न खोज्दै थियो, तर मैले यसलाई किनाराले महासागरलाई रोके झैं रोकिदिएँ । यो उद्धत तथा बढेको यदुवंशको विनाश नगरी म यहाँबाट प्रस्थान गरिदिएँ भने

यदोर्वंशे विप्रद्रुपमनुत्तमम् ॥ कर्माण्युद्दामवृत्तानि हिताय जगतोऽकृथाः ॥ २३ ॥ यानि ते चरितानीश मनुष्याः साधवः कलौ ॥ शृण्वन्तः कीर्तयन्तश्च तरिष्यन्त्यञ्जसा तमः ॥ २४ ॥ यदुवंशेऽवतीर्णस्य भवतः पुरुषोत्तम ॥ शरच्छतं व्यतीयाय पञ्चविंशाधिकं प्रभो ॥ २५ ॥ नाधुना तेऽखिलाधार देवकार्यावशेषितम् ॥ कुलं च विप्रशापेन नष्टप्रायमभूदिदम् ॥ २६ ॥ ततः स्वधाम परमं विशस्व यदि मन्यसे ॥ सलोकाँल्लोकपाला्नः पाहि वैकुण्ठकिङ्करान् ॥ २७ ॥ श्रीभगवानुवाच ॥ अवधारितमेतन्मे यदात्थ विबुधेश्वर ॥ कृतं वः कार्यमखिलं भूमेर्भारोऽवतारितः ॥ २८ ॥ तदिदं यादवकुलं वीर्यशौर्यश्रियोद्धतम् ॥ लोकं जिघृक्षद्रुद्धं मे वेलयेव महार्णवः ॥ यद्यसंहृत्य दृप्तानां यदूनां विपुलं कुलम् ॥ गन्तास्म्यनेन लोकोऽयमुद्वेलेन विनङ्क्ष्यति ॥ ३० ॥ इदानीं नाश आरब्धः कुलस्य द्विजशापतः ॥ यास्यामि भवनं ब्रह्मन्नेतदन्ते तवानघ ॥ ३१ ॥ श्रीशुक उवाच ॥ इत्युक्तो लोकनाथेन स्वयम्भूः प्रणिपत्य तम् ॥ सह देवगणैर्देवः स्वधाम समपद्यत ॥ ३२ ॥ अथ तस्यां महोत्पातान्द्वारवत्यां समुत्थितान् ॥ विलोक्य भगवानाह यदुवृद्धान्समागतान् ॥ ३३ ॥ श्रीभगवानुवाच ॥ एते वै सुमहोत्पाता ह्युत्तिष्ठन्तीह सर्वतः ॥ शापश्च नः कुलस्यासीद्ब्राह्मणेभ्यो दुरत्ययः ॥ ३४ ॥ न वस्तव्यमिहास्माभिर्जिजीविषुभिरार्यकाः ॥ प्रभासं सुमहत्पुण्यं यास्यामोऽद्यैव मा चिरम् ॥३५॥ यत्र स्नात्वा दक्षशापाद्गृहीतो यक्ष्मणोडुराट् ॥ विमुक्तः किल्बिषात्सद्यो भेजे भूयः कलोदयम् ॥ ३६ ॥ वयं च तस्मिन्नाप्लुत्य तर्पयित्वा पितॄन्सुरान् ॥ भोज-

यो उच्छृङ्खल यादव-समुदायले सारा संसार नष्ट हुनेछ । अब ब्राह्मणहरूको श्रापले यिनको नाश चाँडै हुने भएको छ । अतः हे ब्रह्मन् ! हे निष्पाप ! म यिनको नाश भएपछि ब्रह्म तिम्रो धाम आउनेछु' ॥ २८-३१ ॥ शुकदेवजी भन्दछन्—भगवानूले यति भनेपछि देवता सहित ब्रह्माजी उनलाई प्रणाम गरेर आफ्नो लोक फर्किए ॥ ३२ ॥ अनि द्वारकामा नित्य नयाँ उत्पात भएको देखेर आफ्नो नगरीमा आएका बूढा-पाकालित भगवान्ले भन्नुभयो । श्रीकृष्ण भन्नुहुन्छ–हिजो आज यहाँ अनेक उत्पात भइरहेका देखिन्छन् र हाम्रो कुललाई ब्राह्मणको दुस्तर श्राप लागिसकेको छ । अतः हे आर्यगण ! अब हामीलाई बाँच्न मन भए यहाँ बस्नु हुँदैन । ढीलो नगरेर आजै हामी त्यो परम पवित्र प्रभासक्षेत्र जाऔं—जसमा स्नान गरेर चन्द्रमा दक्षप्रजापतिको श्रापले प्राप्त क्षयरोगबाट मुक्त भएका थिए । दोषमुक्त भएपछि तिनका कलाहरू पुनः बढ्न लागेका थिए । हामी पनि

त्यहाँ स्नान गरेर पितृ र देवतालाई तर्पण गरौंला र विविध मीठा व्यञ्जनहरूले उत्तम ब्राह्मणहरूलाई भोजन गराउँला । त्यस पवित्र क्षेत्रमा सत्पात्रलाई दान दिएर हामी त्यस दानद्वारा यी महान् सङ्कटलाई जवरी बलियो डुङ्गामा बसेर समुद्र तर्छन्, त्यसै गरी तर्नेछौं ॥ ३३-३८ ॥ श्री शुकदेव भन्नुहुन्छ–हे कुलनन्दन ! हे राजा परीक्षित् ! भगवान्‌को यस्तो आदेश पाएर प्रभास तीर्थ जानको निम्ति सबै यादव आफाफ्ना रथादि तयार पार्नलागे ॥३९॥ त्यो तयारी देखेर र भगवान्‌को आज्ञा सुनी तथा नित्य भइरहेका अनिष्ट सूचक उत्पात देखेर श्रीकृष्णका अनुगामी भक्त उद्धवले एकान्तमा जगदीश्वर भगवान् कृष्णका चरणमा मस्तक राखी साष्टाङ्ग प्रणाम गरेर हात जोरी नम्र स्वरमा भने ॥४०॥४१॥ उद्धव भन्दछन्–जपको सुयश श्रवण तथा कीर्तन परम पवित्र छ, यस्ता हे देवदेवेश्वर ! हे योगेश्वर ! हे नाथ हजुर सर्व समर्थ भएर पनि जुन ब्राह्मणका श्रापको प्रतीकार गर्नु भएन—यसले ज्ञात हुन्छ कि यस कुलको संहार गरेर हजुर यो लोक अवश्य त्याग्नुहुन्छ ॥४२॥ हे केशव ! म त एकदिनको निम्ति पनि हजुरको पाउ छाड्न चाहन्न ।

यित्वोशिजौ विप्रान्नानागुणवतान्धसा ॥ ३७ ॥ तेषु दानानि पात्रेषु श्रद्धयोप्त्वा महान्ति वै ॥ वृजिनानि तरिष्यामो दानैर्नौभिरिवार्णवम् ॥ ३८ ॥ श्रीशुक उवाच ॥ एवं भगवताऽऽदिष्टा यादवाः कुलनन्दन ॥ गन्तुं कृतधियस्तीर्थं स्यन्दनान्समयूयुजन् ॥३९॥ तन्निरीक्ष्योद्धवो राजञ्छ्रुत्वा भगवतोदितम् ॥ दृष्ट्वाऽरिष्टानि घोराणि नित्यं कृष्णमनुव्रतः ॥ ४० ॥ विविक्त उपसङ्गम्य जगतामीश्वरेश्वरम् ॥ प्रणम्य शिरसा पादौ प्राञ्जलिस्तमभाषत ॥४१॥ उद्धव उवाच ॥ देवदेवेश योगेश पुण्यश्रवणकीर्तन ॥ संहृत्यैतत्कुलं नूनं लोकं सन्त्यक्ष्यते भवान् ॥ विप्रशापं समर्थोऽपि प्रत्यहन्न यदीश्वरः ॥ ४२ ॥ नाहं तवाङ्घ्रिकमलं क्षणार्धमपि केशव ॥ त्यक्तुं समुत्सहे नाथ स्वधाम नय मामपि ॥ ४३ ॥ तव विक्रीडितं कृष्ण नृणां परममङ्गलम् ॥ कर्णपीयूषमास्वाद्य त्यजन्त्यन्यस्पृहां जनाः ॥ ४४ ॥ शय्यासनाटनस्थानस्नानक्रीडाशनादिषु ॥ कथं त्वां प्रियमात्मानं वयं भक्तास्त्यजेमहि ॥ ४५ ॥ त्वयोपभुक्तस्रग्गन्धवासोऽलङ्कारचर्चिताः ॥ उच्छिष्टभोजिनो दासास्तव मायां जयेमहि ॥ ४६ ॥ वातरशना य ऋषयः श्रमणा ऊर्ध्वमन्थिनः ॥ ब्रह्माख्यं धाम ते यान्ति शान्ताः संन्यासिनोऽमलाः ॥ ४७ ॥ वयं त्विह महायोगिन्भ्रमन्तः कर्मवर्त्मसु ॥ त्वद्वार्तया तरिष्यामस्तावकैर्दुस्तरं तमः ॥ ४८ ॥ स्मरन्तः कीर्तयन्तस्ते कृतानि गदितानि च ॥ गत्युत्स्मितेक्षणक्ष्वेलि यन्नृलोकविडम्बनम् ॥ ४९ ॥ श्रीशुक उवाच ॥ एवं विज्ञापितो

अतः हे नाथ ! मलाई पनि आफूसँगै आफ्नू धाम लैजानोस् ॥ ४३ ॥ हे कृष्ण ! हजुरका लीलाहरू मनुष्यको सदैव नै मङ्गल गर्दछन् । त्यो कर्णामृत झैं लीलारस पिएर हजुरका भक्त सबै इच्छाहरू त्यागिदिन्छन् ! सुत्ने, डुल्ने, स्नान, क्रीडा र भोजनादि सबै व्यापारमा निरन्तर हजुरका प्रेमी-भक्त हामी आफ्ना प्रिय आत्मारूप हजुरलाई कसरी सहलै त्याग्न सक्नेछौं ? ॥ ४४ ॥ ४५ ॥ हजुरले भोगेका माला, चन्दन, वस्त्र र अलङ्कार धारण गर्ने र हजुरले खाएर छाडेको पुरा भोजन गर्ने हामी दास हजुरको मायालाई अवश्य जित्न सक्नेछौं ॥४६॥ जो केवल वायु भक्षण गर्ने ऊर्ध्वरेता र अध्यात्मविद्यामा परिश्रम गर्ने ऋषिगण छन्, जो निर्मल चित्त र शान्त संन्यासी छन्, ती हजुरको ब्रह्मपदमा प्राप्त हुन्छन् ॥ ४७ ॥ तर हे योगेश्वर ! यस कर्मकलापमा नअल्झिएरै हजुरका भक्तगणसित हजुरको चरित्र, बोलचाल, गति, हाँसो, हेराई, परिहास तथा अनेकानेक माया-मानव रूपले

गरिएका अन्यान्य लीलाहरूको परस्पर चर्चा, स्मरण र कीर्तन गरेर नैं हजुरकी दुस्तर मायालाई नाघ्ने छौं ॥ ४८ ॥ ४९ ॥ श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! उद्धवले त्यसरी निवेदन गरेपछि देवकी-नन्दन आफ्ना अनन्य र प्रियभक्त उद्धवसित भन्नुहुन्छ ॥५०॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे नेपाली भाषाटीकायां षष्ठोऽध्यायः ॥६॥

भगवान् भन्न लाग्नुभयो–हे उद्धव ! तिमी जे भन्दछौ, म त्यही गर्न खोजिरहेको छु । ब्रह्मा, शिव र इन्द्र सबै लोकपाल मेरो वैकुण्ठ गमनका अभिलाषी छन् ॥ १ ॥ मैले यहाँ देवगणको काम सम्पन्न गरिदिएँ । यही कार्यको निम्ति मैले ब्रह्माको प्रार्थनामा आफ्नू अंश बलराम सहित यस मृत्यु लोकमा अवतार लिएको थिएँ ॥२॥ अब विप्रशापले दग्ध यो कुल पनि परस्पर कलहले नष्ट हुन्छ र द्वारका पनि आजको सातौं दिन समुद्रमा डुब्नेछ ॥३॥ हे साधो ! जुन दिन म यो लोक छाड्नेछु उसै दिनदेखि यो अमङ्गलमय नगर शीघ्र कलियुगले अभिभूत हुनेछ ॥३॥ मैले यो पृथ्वी छाडिदिएपछि तिमीले पनि यहाँ बस्नु पर्दैन किनकि, कलियुगमा प्रजाको रुचि अधर्ममा नै बढ्ने छ ॥ ५ ॥

राजन्भगवान्देवकीसुतः ॥ एकान्तिनं प्रियं भृत्यमुद्धवं समभाषत ॥ ५० ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे षष्ठोऽध्यायः ॥ ६ ॥

श्रीभगवानुवाच ॥ यदात्थ मां महाभाग तच्चिकीर्षितमेव मे ॥ ब्रह्मा भवो लोकपालाः स्वर्वासं मेऽभिकाङ्क्षिणः ॥ १ ॥ मया निष्पादितं ह्यत्र देवकार्यमशेषतः ॥ यदर्थमवतीर्णोऽहमंशेन ब्रह्मणाऽर्थितः ॥ २ ॥ कुलं वै शापनिर्दग्धं नङ्क्ष्यत्यन्योन्यविग्रहात् ॥ समुद्रः सप्तमेऽह्न्येतां पुरीं च प्लावयिष्यति ॥ ३ ॥ यर्ह्येवायं मया त्यक्तो लोकोऽयं नष्टमङ्गलः ॥ भविष्यत्यचिरात्साधो कलिनाऽपि निराकृतः ॥ ४ ॥ न वस्तव्यं त्वयैवेह मया त्यक्ते महीतले ॥ जनोऽधर्मरुचिर्भद्र भविष्यति कलौ युगे ॥ ५ ॥ त्वं तु सर्वं परित्यज्य स्नेहं स्वजनबन्धुषु ॥ मय्यावेश्य मनः सम्यक्समदृग्विचरस्व गाम् ॥ ६ ॥ यदिदं मनसा वाचा चक्षुर्भ्यां श्रवणादिभिः ॥ नश्वरं गृह्यमाणं च विद्धि मायामनोमयम् ॥ ७ ॥ पुंसोऽयुक्तस्य नानार्थो भ्रमः स गुणदोषभाक् ॥ कर्माकर्मविकर्मेति गुणदोषधियो भिदा ॥ ८ ॥ तस्माद्युक्तेन्द्रियग्रामो युक्तचित्त इदं जगत् ॥ आत्मनीक्षस्व विततमात्मानं मय्यधीश्वरे ॥ ९ ॥ ज्ञानविज्ञानसंयुक्त आत्मभूतः शरीरिणा ॥ आत्मानुभवतुष्टात्मा नान्तरायैर्विहन्यते ॥ १० ॥ दोषबुद्ध्योभयातीतो निषेधान्न निवर्तते ॥ गुणबुद्ध्या च विहितं न करोति यथाऽर्भकः ॥ ११ ॥ सर्वभूतसुहृच्छान्तो ज्ञानविज्ञाननिश्चयः ॥ पश्यन्मदात्मकं विश्वं न

अब तिमी आफ्ना कुटुम्ब र बान्धवको मोह त्यागी ममा राम्ररी मन-लगाई सर्वत्र समदृष्टि राखेर स्वेच्छानुसार पृथ्वीतलमा विचरण गर ॥ ६ ॥ मन, वाणी, नेत्र तथा कान आदि इन्द्रियले जे गति देखिन्छ, त्यो सबै नाशवान् छ । मनोमय हुनाले यसलाई तिमी माया नै ठान ॥ ७॥ जो असंयत चित्त पुरुष हुन्छन्, तिनकै सदा भेदबुद्धि हुन्छ । त्यो पनि गुणदोषमय भ्रम नै हो । त्यो गुण-दोषमयी बुद्धिको नै कर्म, अकर्म र विकर्मरूप भेद हुन्छन् । अतः चित्त र इन्द्रिय संयम गरेर यस जगत्लाई आफ्नू आत्मामा र त्यस आत्मालाई म परमात्मामा देख ॥ ८ ॥ ९ ॥ यसरी ज्ञान-विज्ञानले युक्त भएपछि तिमी सबै देहधारीहरूका आत्मा स्वरूप हुनेछौ र आत्मानुभवले नै सन्तुष्ट रहनाले सदा तिमी विघ्नले बाधित हुने छैनौ ॥ १० ॥ यसरी गुण-दोषको बुद्धिले मुक्त पुरुष न दोष दृष्टिले निषिद्ध त्याग्दछ, न गुणबुद्धिले कुनै बालक समान विहित कर्मको अनुष्ठान नै

गर्दछ ॥ ११ ॥ त्यो सबै प्राणीको सुहृद, शान्त र ज्ञान-विज्ञानको अटल स्थितियुक्त भएर सम्पूर्ण जगत्‌तलाई मेरै रूप देख्दै फेरि कुनैपनि सांसारिक विपत्तिमा पर्दैन ॥ १२ ॥ शुकदेवजी भन्दछन्—हे राजन् ! श्रीकृष्णको यस्तो उपदेश सुनेर महान् भगवद्भक्त तथा आत्मतत्त्वका जिज्ञासु उद्धव श्रीअच्युतलाई प्रणाम गरेर भन्न लागे ॥ १३ ॥ उद्धव भन्दछन्—हे योगेश्वर ! हे योगवेत्ताहरूका गुप्त-निधि ! हे योगस्वरूप ! हे योगका उत्पत्ति स्थान ! हजुरले मेरो निःश्रेयस अर्थात् मोक्षको निम्ति संन्यासरूपी कर्म त्यागको उपदेश दिनु भयो ॥१४॥ तर हे भूमन् ! हे सर्वात्मन् ! मेरो विचार छ—विषयीहरूका लागि कामनाहरूको त्याग कठिन छ। विशेष हजुरमा जसको भक्ति छैन, त्यस्ताको लागि त त्यो झन् कठोर छ ॥ १५ ॥ हे नाथ ! यसै गरी म पनि छु। 'यो मेरो हो, यो म हुँ' यस्तो मूढ बुद्धिले युक्त भएर म हजुरको माया रचित देह र स्त्री-पुत्रादि सम्बन्धीहरूमा निमग्न भएको छु। अतः हे भगवन् ! यस दासलाई संक्षेपमा यस प्रकार संन्यास-तत्त्वको उपदेश दिनुहवस्—जसले म सरलतापूर्वक त्यो साधना गर्न सकूँ ॥१६॥ हे भगवन् ! हजुर

विपद्येत वै पुनः ॥१२॥ श्रीशुक उवाच ॥ इत्यादिष्टो भगवता महाभागवतो नृप ॥ उद्धवः प्रणिपत्याह तत्त्वजिज्ञासुरच्युतम् ॥१३॥ उद्धव उवाच ॥ योगेश योगविन्यास योगात्मन् योगसम्भव ॥ निःश्रेयसाय मे प्रोक्तस्त्यागः संन्यासलक्षणः ॥ १४ ॥ त्यागोऽयं दुष्करो भूमन्कामानां विषयात्मभिः ॥ सुतरां त्वयि सर्वात्मन्नभक्तैरिति मे मतिः ॥ १५ ॥ सोऽहं ममाहमिति मूढमतिर्विगाढस्त्वन्मायया विरचितात्मनि सानुबन्धे ॥ तत्त्वञ्जसा निगदितं भवता यथाऽहं संसाधयामि भगवन्ननुशाधि भृत्यम् ॥ १६ ॥ सत्यस्य ते स्वदृश आत्मान आत्मनोऽयं वक्तारमीश विबुधेष्वपि नानुचक्षे ॥ सर्वे विमोहितधियस्तव माययेमे ब्रह्मादयस्तनुभृतो बहिरर्थभावाः ॥ १७ ॥ तस्माद्भवन्तमनवद्यमनन्तपारं सर्वज्ञमीश्वरमकुण्ठविकुण्ठधिष्ण्यम् ॥ निर्विण्णधीरिह मुहुर्वृजिनाभितप्तो नारायणं नरसखं शरणं प्रपद्ये ॥ १८ ॥ श्रीभगवानुवाच ॥ प्रायेण मनुजा लोके लोकतत्त्वविचक्षणाः ॥ समुद्धरन्ति ह्यात्मानमात्मनैवाशुभाशयात् ॥ १९ ॥ आत्मनो गुरुरात्मैव पुरुषस्य विशेषतः ॥ यत्प्रत्यक्षानुमानाभ्यां श्रेयोऽसावनुविन्दते ॥ २० ॥ पुरुषत्वे च मां धीराः सांख्ययोगविशारदाः ॥ आविस्तरां प्रपश्यन्ति सर्वशक्त्युपबृंहितम् ॥ २१ ॥ एकद्वित्रिचतुष्पादो बहुपादस्तथापदः ॥ बह्व्यः सन्ति पुरः सृष्टास्तासां

सत्यस्वरूप तथा स्वयं प्रकाश साक्षात् आत्मा नै हुनुहुन्छ। हजुरभन्दा बर्ता आत्मज्ञानको उपदेशक मलाई देवतामा पनि कोही देखिन्न। ब्रह्मादि देहधारी देवता हजुरको मायाले मुग्ध भएर, बाहिरी मायिक पदार्थलाई सत्य ठान्दछन् ॥ १७ ॥ अतः अनेक आपत्तिले सन्तप्त र संसारबाट खिन्न-चित्त भएर म निर्मल, अनन्त, अपार, सर्वज्ञ, अनादि ईश्वर तथा कालादिले अपरिच्छेद्य वैकुण्ठ निवासी तथा नरका सखा नारायण-स्वरूप हजुर ईश्वरको शरणमा आएको छु ॥१८॥ त्यति सुनी भगवान्‌ले भन्नुभयो—संसारका तत्त्वको आलोचन गर्ने पुरुष प्रायः स्वयं आफ्नू चित्तको अशुभ वासनाबाट आफ्नू उद्धार गर्दछन् ॥ १९ ॥ किनकि सबै प्राणीका आत्मा नै आफ्ना गुरु हुन। तिनमा पनि मनुष्यको आत्मा त विशेष गुरु हुन, किनकि प्रत्यक्ष र अनुमान द्वारा तत्काल आफ्नू श्रेयको निर्णय गर्दछ ॥ २० ॥ मनुष्यमा जो बुद्धिमान् पुरुष सांख्ययोग अर्थात् प्रकृति पुरुष विवेकमा कुशल छन्, ती शक्ति सम्पन्न मेरोस्वरूप राम्ररी देख्न सक्दछन् ॥२१॥ मैले एकपद, द्विपद, त्रिपद, चतुष्पद, बहुपद र पादहीन रूपले अनेक थरिका शरीर रचेको छु, तिनमा पनि मलाई तत्त्वमन्दा

10 X 4

धेरै प्रिय मनुष्य-देह नै छ ॥ २२ ॥ किनकि संयतचित्त पुरुष यही देहमा हेतु तथा फलको विचार गर्दै देखिने गुण वा बुद्धि आदि इन्द्रियहरूको चिह्नद्वारा अनुमान गरेर म अग्राह्य ईश्वरको अनुसन्धान गर्दछन् ॥ २३ ॥ यस विषयमा अवधूत र अमित तेजस्वी यदुको संवाद नामक प्राचीन इतिहास भन्दछु ॥ २४ ॥ एकपल्ट धर्मज्ञ राजा यदुले यौटा निर्भीक तथा ठूला विद्वान् तरुण अवधूत ब्राह्मणलाई डुलिरहेका देखेर सोधे ॥ २५ ॥ यदु भन्दछन्—हे ब्रह्मन् ! कर्माभावले विहीन हजुरको यस्तो विमल बुद्धि कसरी र कहाँ भयो ? जसको भरमा हजुर विद्वान् भएर पनि बालक झैं स्वेच्छानुसार घुम्नुहुन्छ ॥ २६ ॥ संसारका व्यक्ति प्रायः आयु, यश र वैभव आदिको निम्ति नै अर्थ, धर्म, काम अथवा तत्त्वको जिज्ञासा गर्दछन् ॥२७॥ तर हजुर त समर्थ, विद्वान्, दक्ष, राम्रा तथा मिष्टभाषी भएर पनि उन्मत्त तथा पिशाच समान न केही गर्नुहुन्छ न केही इच्छा नै राख्नुहुन्छ ॥ २८ ॥ सबै

मे पौरुषी प्रिया ॥ २२ ॥ अत्र मां मार्गयन्त्यद्धा युक्ता हेतुभिरीश्वरम् ॥ गृह्यमाणैर्गुणैर्लिङ्गैरग्राह्यमनुमानतः ॥ २३ ॥ अत्राप्युदाहरन्तीममितिहासं पुरातनम् ॥ अवधूतस्य संवादं यदोरमिततेजसः ॥ २४ ॥ अवधूतं द्विजं कञ्चिच्चरन्तमकुतोभयम् ॥ कविं निरीक्ष्य तरुणं यदुः पप्रच्छ धर्मवित् ॥ २५ ॥ यदुरुवाच ॥ कुतो बुद्धिरियं ब्रह्मन्नकर्तुः सुविशारदा ॥ यामासाद्य भवाँल्लोके विद्वांश्चरति बालवत् ॥ २६ ॥ प्रायो धर्मार्थकामेषु विवित्सायां च मानवाः ॥ हेतुनैव समीहन्ते आयुषो यशसः श्रियः ॥ २७ ॥ त्वं तु कल्पः कविर्दक्षः सुभगोऽमृतभाषणः ॥ न कर्ता नेहते किञ्चिज्जडोन्मत्तपिशाचवत् ॥ २८ ॥ जनेषु दह्यमानेषु कामलोभदवाग्निना ॥ न तप्यसेऽग्निना मुक्तो गङ्गाम्भःस्थ इव द्विपः ॥ २९ ॥ त्वं हि नः पृच्छतां ब्रह्मन्नात्मन्यानन्दकारणम् ॥ ब्रूहि स्पर्शविहीनस्य भवतः केवलात्मनः ॥ ३० ॥ श्रीभगवानुवाच ॥ यदुनैवं महाभागो ब्रह्मण्येन सुमेधसा ॥ पृष्टः सभाजितः प्राह प्रश्रयावनतं द्विजः ॥ ३१ ॥ ब्राह्मण उवाच ॥ सन्ति मे गुरवो राजन्बहवो बुद्ध्युपाश्रिताः ॥ यतो बुद्धिमुपादाय मुक्तोऽटामीह तान्छृणु ॥ ३२ ॥ पृथिवी वायुराकाशमापोऽग्निश्चन्द्रमा रविः ॥ कपोतोऽजगरः सिन्धुः पतङ्गो मधुकृद्गजः ॥३३॥ मधुहा हरिणो मीनः पिङ्गला कुररोऽर्भकः ॥ कुमारी शरकृत्सर्प ऊर्णनाभिः सुपेशकृत् ॥३४॥ एते मे गुरवो राजँश्चतुर्विंशतिराश्रिताः ॥ शिक्षावृत्तिभिरेतेषामन्वशिक्षमिहात्मनः ॥ ३५ ॥ यतो यदनुशिक्षामि यथा वा नाहुषात्मज ॥ तत्तथा पुरुषव्याघ्र निबोध कथयामि ते ॥ ३६ ॥ भूतैराक्रम्यमाणोऽपि

व्यक्ति कामनाको दावानलमा डढिरहेछन्, तर हजुर गङ्गाजलमा उभिएको गजराज झैं अग्निबाट मुक्त हुनाले त्यसबाट सन्तप्त हुनुहुन्न ॥ २० ॥ हे ब्रह्मन् ! हामी पुत्र, कलत्रादिरूपी संसारको स्पर्शले रहित एवं आत्मस्वरूपमा स्थित हजुरको कारण सोधिरहेका छौं, कृपा गरेर मलाई आज्ञा हवस् ॥ ३० ॥ श्री भगवान् भन्नुहुन्छ—ब्राह्मणका भक्त र राम्रो बुद्धि हुने यदुले त्यति सोधेपछि महाभाग द्विजश्रेष्ठ प्रसन्न भएर विनयावनत राजा यदुसित भन्नलागे ॥ ३१ ॥ अवधूतले भने–हे राजन् ! मेरा धेरै थरि गुरु छन् । उनलाई मैले आफ्नू बुद्धिले स्वीकार गरें । उनैबाट बुद्धि पाएर बन्धन रहित भई म स्वच्छन्द डुलिरहन्छु। तिनका नाम हुन्–॥३२॥पृथिवी, वायु, आकाश, जल,अग्नि, चन्द्रमा, सूर्य,परेवा, अजिङ्गर समुद्र, फतिङ्गा, मधुमक्षिका, हात्ती, मह काढ्ने मानिस, हरिण, माछा, पिङ्गला वेश्या, कुररी पक्षी, कुमारी, बालक बाण बनाउने व्यक्ति, सर्प, ऊर्णनाभि अर्थात् माकुरो र भृङ्गी

कीट ॥३३॥३४॥ हे राजन् ! मैले इनै चौबीस गुरुको आश्रय लिएँ र इनैसित शिक्षा लिई लोकमा आफूलाई सुशिक्षित पारें ॥३५॥ हे ययाति-पुत्र ! मैले जोसित र जसरी जे जति सिकें, हे पुरुषसिंह ! त्यो भन्दछु तिमी सुन ॥ ३६ ॥ दैवी मायाले प्रेरित भएर कोही *निन्दा गरोस् वा कुनै प्रकारको कष्ट पुर्‍याओस् तापनि विद्वान् आफ्नू मार्गबाट विचलित नहोस्, यो धैर्य-व्रत मैले पृथ्वीसित सिकें ॥३७॥ साधुको कर्तव्य हो—जसका सारा चेष्टाहरू सर्वदा अर्काकै निम्ति हुन्छ र जसको उत्पत्ति केवल परोपकारका निम्ति हुन्छ, ती पर्वत तथा वृक्षबाट परोपकार गर्ने सिकें ॥ ३८ ॥ जस्तै प्राण केवल भोजन खोज्दछ, उसलाई कुनै प्रकारको रूप-रस आदिको खाँचो पर्दैन । त्यस्तै नै योगी पनि जे गर्दा ज्ञान नष्ट हुँदैन र मन वाणी पनि विकृत नहोस्, यस्तो भोजनले सन्तुष्ट रहोस् ॥ ३९ ॥ रसनादि इन्द्रियलाई मनपर्ने पदार्थहरू नखोजोस् । जस्तै—वायु सर्वगामी भएर पनि आफ्नू स्वरूपले सदा निर्लिप्त रहन्छ, त्यस्तै नाना प्रकारका विषयहरू ग्रहण गरेर पनि योगीजन तिनको गुण-दोषबाट सर्वदा पृथक् रहोस् र तिनमा लिप्त नहोस् ॥ ४० ॥ जस्तै—वायु गन्ध वहन

धीरो दैववशानुगैः ॥ तद्विद्वान्न चलेन्मार्गादन्वशिक्षं क्षितेर्व्रतम् ॥३७॥ शश्वत्परार्थसर्वेहः परार्थैकान्तसम्भवः ॥ साधुः शिक्षेत भूभृत्तो नगशिष्यः परात्मताम् ॥३८॥ प्राणवृत्त्यैव सन्तुष्येन्मुनिर्नैवेन्द्रियप्रियैः ॥ ज्ञानं यथा न नश्येत नावकीर्येत वाङ्मनः ॥३९॥ विषयेष्वाविशन्योगी नानाधर्मेषु सर्वतः ॥ गुणदोषव्यपेतात्मा न विषज्जेत वायुवत् ॥ ४० ॥ पार्थिवेष्विह देहेषु प्रविष्टस्तद्गुणाश्रयः ॥ गुणैर्न युज्यते योगी गन्धैर्वायुरिवात्मदृक् ॥४१॥ अन्तर्हितश्च स्थिरजङ्गमेषु ब्रह्मात्मभावेन समन्वयेन ॥ व्याप्त्याव्यवच्छेदमसङ्गमात्मनो मुनिर्नभस्त्वं विततस्य भावयेत् ॥ ४२ ॥ तेजोऽबन्नमयैर्भावैर्मेघाद्यैर्वायुनेरितैः ॥ न स्पृश्यते नभस्तद्वत्कालसृष्टैर्गुणैः पुमान् ॥४३॥ स्वच्छः प्रकृतितः स्निग्धो माधुर्यस्तीर्थभूर्नृणाम् ॥ मुनिः पुनात्यपां मित्रमीक्षोपस्पर्शकीर्तनैः ॥ ४४ ॥ तेजस्वी तपसा दीप्तो दुर्धर्षोदरभाजनः ॥ सर्वभक्ष्योऽपि युक्तात्मा नादत्ते मलमग्निवत् ॥ ४५ ॥ क्वचिच्छन्नः

गर्दै रहे पनि सधैं शुद्ध बनिरहन्छ, त्यस्तै यस पार्थिव शरीरमा यिनका गुणहरूको आश्रय लिएर पनि आत्मज्ञानी पुरुष तिनमा आसक्त नहोस् । यस रीतिले प्राणवायुसित संयम र बाह्य वायुसित असंग रहने शिक्षा पाएँ ॥४१॥ आफ्नू स्वरूपद्वारा सबैको अनुगत हुनाले ब्रह्म सबै स्थावर-जङ्गम उपाधिहरूमा स्थित छ । मुनिको कर्तव्य हो—मणिहरूमा व्याप्त सूत्र जस्तै ती सर्वगत आत्माको व्याप्ति द्वारा उसको अपरिच्छिन्नता, असंगता तथा आकाशरूपताको भावना गरोस् ॥४२॥ जस्तै—तेज, जल र अन्नमय पदार्थ तथा वायुजनित मेघादिले आच्छन्न पनि आकाश तीबाट निर्लिप्त रहन्छ, त्यस्तै आत्माको पनि कालकृत गुणसित कुनै सम्बन्ध रहन्न । यो गुण आकाशसित सिकनु पर्दछ ॥ ४३ ॥ स्वभावत शुद्ध, स्नेहयुक्त, मधुरभाषी तथा मनुष्यका लागि तीर्थस्वरूप मुनि दर्शन र यशोगानले नै जल झैं आफ्ना साथीहरूलाई पवित्र पार्दछ । यो गुण जलसित सीक्नु ॥ ४४ ॥ अग्निबाट जुन शिक्षा पाएँ, त्यो सुन—जितेन्द्रिय मुनि अग्नि समान तेजस्वी, तपले देदीप्यमान र अक्षोभ्य रहन्छ । त्यो केवल उदररूप पात्र राख्दछ अर्थात् जे जति पाइन्छ त्यो पेटमा हालिन्छ, कहिले केही

---

* दृष्टान्त ( निन्दाबाट कोही जोगिदैन )—कसैले एकपल्ट स्वामी दयानन्दसित भन्यो—'अनेक व्यक्ति हजुरको कुरा मान्दैनन् र निन्दा गर्दछन् । तिनको औषधि के गर्ने ?' स्वामीजीले उत्तर दिए—'भक्त एकमात्र ईश्वरको आज्ञा पालन गर्ने सोच्दछ । कसैको विरोध वा निन्दाको मैले कहिल्यै वास्ता गरिन । सबैलाई बनाउने ईश्वर पनि जब श्रद्धाहीन निन्दकको मुख बुझ्न सक्दैनन् भने म ती निन्दकबाट कसरी जोगिन सक्छु !'

संचय गरेर राख्तैन तथा अग्नि झैं सर्वभक्षी भएर पनि संयतचित्त रहन्छ । त्यो कहिले गुप्त र कहिले प्रकटरूपमा रहन्छ एवं आत्म कल्याणकारी इच्छा हुनेमित सेवित हुन्छ । त्यो आफ्नू दाताको अतीत र आगामी अशुभहरू भस्म पार्दै सर्वै सर्वत्र अन्न ग्रहण गर्दछ । भिन्न-भिन्न उपाधि अर्थात् काष्ठ-लौहादिमा प्रविष्ट अग्नि जस्तै तद्रूप देखिन्छ, त्यस्तै विभु आत्मा पनि आफ्नो मायाद्वारा रचित सत्यासत्यरूप प्रपंचमा प्रविष्ट भएर उपाधि अनुसार काम गर्दछ । यो गुण अग्निबाट लिनु ॥ ४५-४७ ॥ अलक्ष्य गति कालको प्रभावले घट्ने-बढ्ने चन्द्रमाका कलाहरू झैं जन्मदेखि मृत्युपर्यन्त सबै अवस्था शरीरको नै हुन्छ आत्माको होइन । अग्निको ज्वाला जस्तै निरन्तर छिन-छिनमा उत्पन्न र विलीन हुँदै रहन्छ, जीवको उत्पत्ति र नाश छिन-छिनमा भइरहन्छ, तर अज्ञानवश तो देखिइन्दैनन् । तर उसमा कुनै भेद प्रतीत हुँदैन । त्यस्तै जल प्रवाह झैं वेगवान् कालद्वारा यो मैले चन्द्रमासित सिकें ॥४८॥४९॥ सूर्यसित जे सिकें, त्यो पनि सुन—जस्तै सूर्य आफ्ना किरणले पृथ्वीको जल तानेर वेलामा वर्षा गर्दछ त्यस्तै योगी पनि गुणानुवर्तिनी इन्द्रिय द्वारा त्रिगुणमय

कचित्स्पष्ट उपास्यः श्रेय इच्छताम् ॥ भुङ्क्ते सर्वत्र दातॄणां दहन्प्रागुत्तराशुभम् ॥ ४६ ॥ स्वमायया सृष्टमिदं सदसल्लक्षणं विभुः ॥ प्रविष्ट ईयते तत्तत्स्वरूपोऽग्निरिवैधसि ॥ ४७ ॥ विसर्गाद्याः श्मशानान्ता भावा देहस्य नात्मनः ॥ कलानामिव चन्द्रस्य कालेनाव्यक्तवर्त्मना ॥ ४८ ॥ कालेन ह्योघवेगेन भूतानां प्रभवाप्ययौ ॥ नित्यावपि न दृश्येते आत्मनोऽग्नेर्यथार्चिषाम् ॥ ४९ ॥ गुणैर्गुणानुपादत्ते यथाकालं विमुञ्चति ॥ न तेषु युज्यते योगी गोभिर्गा इव गोपतिः ॥ ५० ॥ बुध्यते स्वेन भेदेन व्यक्तिस्थ इव तद्गतः लक्ष्यते स्थूलमतिभिरात्मा चावस्थितोऽर्कवत् ॥ ५१ ॥ नातिस्नेहः प्रसङ्गो वा कर्तव्यः क्वापि केनचित् ॥ कुर्वन्विन्देत सन्तापं कपोत इव दीनधीः ॥ ५२ ॥ कपोतः कश्चनारण्ये कृतनीडो वनस्पतौ ॥ कपोत्या भार्यया सार्धमुवास कतिचित्समाः ॥ ५३ ॥ कपोतौ स्नेहगुणितहृदयौ गृहधर्मिणौ ॥ दृष्टिंदृष्ट्याऽङ्गमङ्गेन बुद्धिं बुद्ध्या बबन्धतुः ॥ ५४ ॥ शय्यासनाटनस्थानवार्ताक्रीडाशनादिकम् ॥ मिथुनीभूय विस्रब्धौ चेरतुर्वनराजिषु ॥ ५५ ॥ यं यं वाञ्छामि सा राजँस्तर्पयन्त्यनुकम्पिना ॥ तं तं समनयत् कामं कृच्छ्रेणाप्यजितेन्द्रियः ॥५६॥ कपोती प्रथमं गर्भं गृह्णती काल आगते ॥ अण्डानि सुषुवे नीडे स्वपत्युः सन्निधौ सती

पदार्थ ग्रहण गर्दछ र यथा समय त्यो त्यागी पनि दिन्छ, तिनमा कहिल्यै आसक्त हुँदैन । सूर्य झैं व्यक्तिगत उपाधिका भेदले स्थूलबुद्धि व्यक्तिलाई आत्मा व्यक्ति विशेषमा स्थित ज्ञात हुन्छ ॥ ५० ॥ ५१ ॥ मैले परेवासित जे शिक्षा पाएँ, त्यो पनि सुन—कहिल्यै कसैसित वर्ता प्रेम नगरोस् र न कसैमा आसक्त रहोस् । नभए त्यो दीनबुद्धि परेवा झैं दुःखी हुनुपर्दछ ॥ ५२ ॥ हे राजन् ! भाँटा परेवा कुनै वनका वृक्षमा गुँड बनाएर केही वर्षसम्म आफ्नी स्त्री परेवीसित बस्यो ॥ ५३ ॥ ती गृहस्थ थिए र परस्पर प्रेम-बन्धनमा बाँधिई दुवै कपोत-दम्पती आफ्नू दृष्टिसित दृष्टि, अङ्गसित अङ्ग र मनसित मन मिलाई संगसँगै बस्दथे ॥ ५४ ॥ ती दुवैका परस्पर विश्वास हुनाले त्यस वनमा मिलेर सँगै सँगै सुत्ने, बस्ने, डुल्ने कुराकानी, क्रीडा र भोजनादि समेत गर्दथे ॥ ५५ ॥ हेराजन् ! आफ्ना सबै इन्द्रिय तृप्त पार्ने आफ्नी सबै तरहले कृपापात्री परेवी जे माग्दथी, त्यो अजितेन्द्रिय परेवा निकै कष्ट बोकेर पनि उसलाई इच्छित वस्तु ल्याएर दिन्थ्यो ॥ ५६ ॥ कालक्रमले परेवीलाई पहिलो गर्भ रह्यो र त्यस सतीले

आफ्नू पतिको नगीचै त्यही गुँडमा फुल पारी ॥ ५७ ॥ भगवान्‌को अचिन्त्य शक्ति को प्रभावले तिनका अवयवको रचना भएपछि फुल्बाट कोमल शरीर र रौंले युक्त चल्ला उत्पन्न भए ॥ ५८ ॥ ती बच्चाको शब्द सुन्दै र तिनको कलरवले आनन्दमग्न हुँदै ती पुत्रवत्सल दम्पतीले प्रेमपूर्वक तिनको पालन-पोषण गरे ॥ ५९ ॥ ती बच्चाको कोमल स्पर्श हुने प्वाँख, तिनको कलरव, बालसुलभ चेष्टा र यता-उता उफ्रनाले ती माता-पितालाई आनन्द प्राप्त हुन्थ्यो ॥ ६० ॥ यसरी भगवान् विष्णुको मायाले मोहित भएर परस्पर स्नेहमा आबद्ध तथा बच्चाको पालन-पोषणको चिन्तामा व्याकुल कपोत दम्पती ती बच्चाको पालन-पोषण सहर्ष गर्दै रहे ॥ ६१ ॥ एक दिन ती दम्पती चारो लिन गए र चाराको खोजीमा निकै बेर वनमा यता-उता अलमलिइरहे ॥ ६२ ॥ यता यौटा व्याधाले परेवाका ती स साना बच्चा गुँडको वरि-परि डुलिरहेका देखेर आफ्नू जाल फिजाएर अल्झायो ॥ ६३ ॥ उसै वेला आफ्ना सन्तानको पोषणमा अतिशय उत्सुक रहने परेवाका जोडी, जुन वनमा गएका थिए, चारो लिएर आफ्नू गुँडमा फर्केर आए

॥ ५७ ॥ तेषु काले व्यजायन्त रचितावयवा हरेः ॥ शक्तिभिर्दुर्विभाव्याभिः कोमलाङ्गतनूरुहाः ॥ ५८ ॥ प्रजाः पुपुषतुः प्रीतौ दम्पती पुत्रवत्सलौ ॥ शृण्वन्तौ कूजितं तासां निर्वृतौ कलभाषितैः ॥ ५९ ॥ तासां पतत्रैः सुस्पर्शैः कूजितैर्मुग्धचेष्टितैः ॥ प्रत्युद्गमैरदीनानां पितरौ मुदमापतुः ॥ ६० ॥ स्नेहानुबद्धहृदयावन्योन्यं विष्णुमायया ॥ विमोहितौ दीनधियौ शिशून्पुपुषतुः प्रजाः ॥ ६१ ॥ एकदा जग्मतुस्तासामन्नार्थं तौ कुटुम्बिनौ ॥ परितः कानने तस्मिन्नर्थिनौ चेरतुश्चिरम् ॥ ६२ ॥ दृष्ट्वा ताँल्लुब्धकः कश्चिद्यदृच्छातो वनेचरः ॥ जगृहे जालमातत्य चरतः स्वालयान्तिके ॥ ६३ ॥ कपोतश्च कपोती च प्रजापोषे सदोत्सुकौ ॥ गतौ पोषणमादाय स्वनीडमुपजग्मतुः ॥ ६४ ॥ कपोती स्वात्मजान्वीक्ष्य बालकाञ्जालसंवृतान् ॥ तानभ्यधावत्क्रोशन्ती क्रोशतो भृशदुःखिता ॥६५॥ साऽसकृत्स्नेहगुणिता दीनचित्ताऽजमायया ॥ स्वयंचाबध्यत शिचा बद्धान्पश्यन्त्यपस्मृतिः ॥६६॥ कपोतश्चात्मजान्बद्धानात्मनोऽप्यधिकान्प्रियान् ॥ भार्यां चात्मसमां दीनो विललापातिदुःखितः ॥ ६७ ॥ अहो मे पश्यतापायमल्पपुण्यस्य दुर्मतेः ॥ अतृप्तस्याकृतार्थस्य गृहस्त्रैवर्गिको हतः ॥६८॥ अनुरूपाऽनुकूला च यस्य मे पतिदेवता ॥ शून्ये गृहे मां सन्त्यज्य पुत्रैः स्वर्याति साधुभिः ॥६९॥ सोऽहं शून्ये गृहे दीनो मृतदारो मृतप्रजः ॥ जिजीविषे किमर्थं वा विधुरो दुःखजीवितः ॥ ७० ॥ तांस्तथैवावृताञ्छिग्भिर्मृत्युग्रस्तान्विचेष्टतः ॥

॥ ६४ ॥ परेवी आफ्ना जालमा अल्झेका र दुःखले प्वाँख फटफटाई कराएका देखेर आफू पनि अत्यन्त दुःखी भई विलाप गर्दै तिनको नगीचै पुगी ॥ ६५ ॥ निरन्तर स्नेह-बन्धनमा बाँधिएकी र दैवी-मायाले दीनचित्त परेवी जालमा बाँधिएका बच्चालाई देखेर अचेत भई स्वयं पनि जालमा परी ॥ ६६ ॥ अनि परेवा आफ्ना प्राण-भन्दा प्रिय बच्चा र प्राण प्रिया पत्नी जालमा परेकी देखेर अतिशय दुःखित भई विलाप गर्नलाग्यो—॥ ६७ ॥ अहो ! म अभागी र मन्दमतिको दुर्दशा त हेर ! संसार-सुखले तृप्त र कृतार्थ नहुँदै मेरा यी अर्थ-धर्म-कामरूपी त्रिवर्गका साधन स्वरूप बसेको घर आज उजडियो ॥ ६८ ॥ हेर ! मेरी सुयोग्य, आज्ञाकारिणी र पतिव्रता पत्नी पनि मलाई यो शून्य घरमा एक्लै छाडेर आफ्ना बच्चाका साथै स्वर्ग गइरहेकी छ ॥ ६९ ॥ यसरी जसका स्त्री र बच्चा नष्ट भइरहेछन्, यस्तो म अत्यन्त दीन र विधुर भएर यो शून्य घरमा

आफ्नु दुःखमय जीवन विताउने इच्छा कसरी गरूँ ? ॥ ७० ॥ जालमा परेर ती मृत्युग्रस्त र त्यसबाट मुक्तिको लागि प्रयत्न गर्ने स्त्री र बच्चालाई देखेर त्यो दीन र बुद्धिहीन परेवा आफू पनि त्यही जालमा हाम्फाल्यो। त्यो कुटुम्बी परेवा–पत्नी र बच्चा पाएर आफूलाई कृतकृत्य मान्दै निर्दयी व्याधाको घर गयो। ७२ ॥ यसको तात्पर्य हो–जो कुटुम्बी अशान्त चित्त भएर निरन्तर द्वन्दमा नै रहिरहन्छ, त्यो कुटुम्बको पालन-पोषणमै लागिरहनाले त्यही पक्षी झैं मोह बन्धनमा बाँधिई दीन भएर दुःख पाउँछ ॥ ७३ ॥ खुलेको मुक्तिद्वार झैं मनुष्य देह पाएर पनि जो ती परेवाको समान आफ्नु घरमै आसक्त रहन्छन् तिनलाई शास्त्रमा 'आरूढच्युत' अर्थात् एकपल्ट उक्लेर लडेको मनुष्य भनिन्छ ॥ ७४ । इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे पं० गौरीशंकर कृत 'वासिष्ठी' भाषाटीकायां सप्तमोऽध्यायः ॥ ७ ॥

( अवधूतोपाख्यानको मध्यभाग )–अवधूत भन्दछन्–हे राजन् ! दुःख जस्तै इन्द्रियका सुख नरकमा पनि स्वयं प्राप्त हुन्छन्। अतः बुद्धिमान् व्यक्ति सुख नखोजुन्

स्वयं च कृपणः शिशु पश्यन्नप्यबुधोऽपतत् ॥ ७१ ॥ तं लब्ध्वा लुब्धकः क्रूरः कपोतं गृहमेधिनम् ॥ कपोतकान्कपोतीं च सिद्धार्थः प्रययौ गृहम् ॥ ७ ॥ एवं कुटुम्ब्यशान्तात्मा द्वन्द्वारामः पतत्रिवत् ॥ पुष्णन्कुटुम्बं कृपणः सानुबन्धोऽवसीदति ॥ ७३ ॥ यः प्राप्य मानुषं लोकं मुक्तिद्वारमपावृतम् ॥ गृहेषु खगवत्सक्तस्तमारूढच्युतं विदुः ॥ ७४ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे सप्तमोऽध्यायः ॥ ७ ॥

ब्राह्मण उवाच ॥ सुखमैन्द्रियकं राजन्स्वर्गे नरक एव च ॥ देहिनां यद्यथा दुःखं तस्मान्नेच्छेत तद्बुधः ॥ १ ॥ ग्रासं सुमृष्टं विरसं महान्तं स्तोकमेव वा ॥ यदृच्छयैवापतितं ग्रसेदाजगरोऽक्रियः ॥ २ ॥ शयीताहानि भूरीणि निराहारोऽनुक्रमः ॥ यदि नोपलभेद्ग्रासो महाहिरिव दिष्टभुक् ॥ ३ ॥ ओजःसहोबलयुतं बिभ्रद्देहमकर्मकम् ॥ शयानो वीतनिद्रश्च नेहेतेन्द्रियवानपि ॥ ४ ॥ मुनिः प्रसन्नगम्भीरो दुर्विगाह्यो दुरत्यय ॥ अनन्तपारो ह्यक्षोभ्यः स्तिमितोद इवार्णवः ॥ ५ ॥ समृद्धकामो हीनो वा नारायणपरो मुनिः ॥ नोपसर्पेत शुष्येत सरिद्भिरिव सागरः ॥ ६ ॥ दृष्ट्वा स्त्रियं देवमायां तद्भावैरजितेन्द्रियः ॥ प्रलोभितः पतत्यन्धे तमस्यग्नौ पतङ्गवत् ॥ ७ ॥ योषिद्धिरण्याभरणाम्बरादिद्रव्येषु मायारचितेषु मूढः

मीठो नमीठो, थोरै, धेरै वा एक दुइ गाँस अन्न नमागिकन अनायास जे पाइन्छ, त्यही अजिङ्गर झैं निरीह भावले पेट भरोस् ॥ २ ॥ कदाचित् केही भोजन पाइएन भने प्रारब्धको भोग ठानेर अजिङ्गर झैं त्यसको निम्ति कुनै प्रयत्न नगरेर धेरै दिनसम्म निराहार नै रहोस् ॥ ३ ॥ मनोबल, इन्द्रियबल र शारीरिक बलयुक्त भएर पनि निश्चेष्ट रहोस्। ननिदाए 'पनि सुते जस्तै तथा इन्द्रिययुक्त भएर पनि कुनै चेष्टा नगरोस्। यो शिक्षा अजिङ्गरबाट पाएँ ॥ ४ ॥ समुद्रबाट मैले जे सिखें, त्यो भन्छु—मुनिले निस्तरङ्ग समुद्र झैं शान्त, गम्भीर, अगम्य, अभेद्य र क्षोभरहित हुनु पर्दछ। जस्तै—नदीका जलले समुद्र बढ्दैन र गर्मीमा घट्तैन। यसै गरी नारायण-परायण योगिले पनि केही पाएर प्रसन्न र नपाएर खिन्न हुनु हुँदैन ॥ ५ ॥ ६ ॥ पतङ्ग जस्तै रूपमा मोहित भएर आगोमा डढेर मर्दछ, त्यस्तै नै अजितेन्द्रिय व्यक्ति पनि देवमाया रूपिणी स्त्रीलाई देखेर त्यसका हाउ-भाउमा लोभिई घोर अन्धकारमा जान्छि ॥ ७ ॥ स्त्री, सुन र वस्त्रादि मायामय पदार्थमा जो मूढ भोगबुद्धिले गर्दा आसक्त रहन्छ' त्यो विवेक

हराई फतिङ्ग झैं एक दिन नष्ट हुन्छ। यो मैले पुतलीसंग सीखें ॥ ८ ॥ भिक्षुकको कर्तव्य हो—गृहस्थलाई कुनै कष्ट नदिनु, मधुकरी वृत्तिको आश्रय लिएर जटिल निर्वाह हुनसक्छ त्यति नै अन्न अनेक घरबाट मागेर खाओस्। यो मैले भौंरीसित सिखें ॥ ९ ॥ जस्तै-भ्रमर विभिन्न फूलहरुबाट त्यसको सार लिन्छ, त्यस्तै नै बुद्धिमान् पुरुष पनि साना ठूला सबै शास्त्रबाट उनको सार लेओस् ॥ १० ॥ यतिको कर्तव्य हो—भौंरी जस्तै भिक्षाबाट सायंकाल वा केही भोलिको निम्ति संचय गरेर नराखोस्। आफ्ना दुवै हात र पेटलाई नै पात्र मानेर पानी जति हातमा अटाउँछ र पेटमा पुग्दछ, त्यति नै अन्न लेओस्—बर्ता होइन ॥ ११॥ सायंकाल वा भोलिको लागि सञ्चय नगरोस्। नभए आफ्नै संचित महसित जस्तै भौंरी नष्ट हुन्छन्, त्यस्तै यति पनि संग्रह गरेपछि त्यही संग्रहीत पदार्थसित नष्ट भएर जान्छ ॥ १२ ॥ भिक्षुकको कर्तव्य हो—काठको पुतली झैं धेरै स्त्रीलाई खुट्टाले पनि स्पर्श नगरोस्। यदि यस्तो गर्दछ भने ढोईको अङ्गसङ्गले जसरी हात्ती बाँधिन्छ, त्यस्तै उ पनि बाँधिन्छ ॥ १३ ॥ बुद्धिमान् पुरुषको प्रधान कर्तव्य हो कि साक्षात् मृत्युस्वरूपा

प्रलोभितात्मा ह्युपभोगबुद्ध्या पतङ्गवन्नश्यति नष्टदृष्टिः ॥ ८ ॥ स्तोकं स्तोकं ग्रसेद्ग्रासं देहो वर्तेत यावता ॥ गृहानहिंसन्नातिष्ठेतद्वृत्तिं माधुकरीं मुनिः ॥ ९ ॥ अणुभ्यश्च महद्भ्यश्च शास्त्रेभ्यः कुशलो नरः ॥ सर्वतः सारमादद्यात्पुष्पेभ्य इव षट्पदः ॥ १० ॥ सायन्तनं श्वस्तनं वा न संगृह्णीत भिक्षितम् ॥ पाणिपात्रोदरामत्रो मक्षिकेव न संग्रही ॥ ११ ॥ सायन्तनं श्वस्तनं वा न संगृह्णीत भिक्षुकः ॥ मक्षिका इव संगृह्णन् सह तेन विनश्यति ॥ १२ ॥ पदाऽपि युवतीं भिक्षुर्न स्पृशेद्दारवीमपि ॥ स्पृशन्करीव बध्यते करिण्या अङ्गसङ्गतः ॥ १३ ॥ नाधिगच्छेत्स्त्रियं प्राज्ञः कर्हिचिन्मृत्युमात्मनः ॥ बलाधिकैः स हन्येत गजैरन्यैर्गजो यथा ॥१४॥ न देयं नोपभोग्यं च लुब्धैर्यद् दुःखसञ्चितम् ॥ भुङ्क्ते तदपि तच्चान्यो मधुहेवार्थविन्मधु ॥१५॥ सुदुःखोपार्जितैर्वित्तैराशासानां गृहाशिषः ॥ मधुहेवाग्रतो भुङ्क्ते यतिर्वै गृहमेधिनाम् ॥१६॥ ग्राम्यगीतं न शृणुयाद्यतिर्वनचरः क्वचित् ॥ शिक्षेत हरिणाद्बद्धान्मृगयोर्गीतमोहितात् ॥ १७ ॥ नृत्यवादित्रगीतानि जुषन्ग्राम्याणि योषिताम् ॥ आसां क्रीडनको वश्य ऋष्यशृङ्गो मृगीसुतः ॥ १८ ॥ जिह्वयाऽतिप्रमाथिन्या जनो रसविमोहितः ॥ मृत्युमृच्छत्यसद्बुद्धिर्मीनस्तु बडिशैर्यथा ॥ १९ ॥ इन्द्रियाणि जयन्त्याशु निराहारा मनीषिणः ॥

स्त्रीलाई पनि कहिल्यै स्वीकार नगरोस् किनकि स्त्रीसंग गर्ने व्यक्तिलाई सबल पुरुष उसै गरी मारिदिन्छन्, जसरी ढोईको पछिलागेको हात्तीलाई अन्य हात्तीहरूले मार्दछन्। यो मैले हात्तीबाट जानें ॥ १४ ॥ लोभी जुन पदार्थको निकै कष्टले संग्रह गर्दछन्, त्यो ती न स्वयं भोग्दछन्, न अरु कसैलाई भोग्न दिन्छन्। भौंरीहरूको मह काढ्ने व्यक्ति जस्तै तिनको धन पनि अर्को अर्थवेत्ता नै भोग्दछ ॥ १५ ॥ जस्तै भौंरीको मह काढ्नेले तिनको सामुन्ने नै झिकेर खाइदिन्छ, त्यस्तै गरी कष्टपूर्वक संग्रहीत अनेक धनले विविध गृहोचित सुखको आशा राख्ने गृहस्थका पदार्थहरू भिक्षुक ती भन्दा पनि पहिल्यै भोग्दछन् ॥ १६ ॥ यो मैले मह काढ्नेसित जानें। बनवासी यति कहिल्यै ग्राम्यगीत नसुनुन्। व्याधाको गानले मोहित भई जालमा अल्झने हरिणसित यो उपदेश लिनु ॥१७॥ एक पटक स्त्रीहरूको ग्राम्यगीत सुन्दै नृत्य हेरेर हरिणी-पुत्र ज्ञानी कहिएका ऋष्यशृङ्ग तिनका हातको कठपुतली बनेका थिए—यो हरिणबाट सिखें ॥ १८ ॥ जस्तै—बल्छीमा लागेको चारोको लोभमा माछा आफ्नू जीवन गुमाउँछ, त्यस्तै रस-लोलुप मनुष्य अत्यन्त बलवती जिह्वाको वशीभूत भएर

मारिन्छ ॥ १९ ॥ विचारशील पुरुष निराहार बसेर जिब्रो बाहेक अरु सबै इन्द्रिय शीघ्र वशमा पारिलिन्छन् । यो रसना अन्न त्यागले त झन प्रबल हुन्छे । अतएव यसलाई जित्नु अति कठिन छ । अन्य समस्त इन्द्रियलाई जितिसकेर पनि मनुष्य जबसम्म रसनेन्द्रियलाई वशमा पार्दैन, तबसम्म त्यो जितेन्द्रिय हुन सक्तैन । किनकि रस जितेपछि नै सबै विषय जित्न सकिन्छ—अन्यथा सकिन्न । यो मैले मालाधिप सिखें ॥ २० ॥ २१ ॥ हे नृपनन्दन ! पूर्वकालमा विदेहनगरमा पिङ्गला नाम की यौटी वेश्या बस्तथी । त्यसबाट सिकेको सुन ॥ २२ ॥ एक दिन त्यो स्वेच्छाचारिणी वेश्या कुनै प्रेमीलाई रमणस्थानमा डाक्ने इच्छाले खूब शृङ्गार गरेर धेरै बेरसम्म घरको ढोकामा उभिइरही ॥ २३ ॥ हे नरश्रेष्ठ ! त्यो अर्थलोलुपा वेश्या जो पुरुष त्यो बाटोबाट हिंड्थ्यो, त्यसलाई देखेर मनमा ठान्दथी—यो कुनै धनी नागरिक होला—जो मलाई अधिक धन दिनेछ

वर्जयित्वा तु रसनं तन्निरन्नस्य वर्धते ॥ २० ॥ तावज्जितेन्द्रियो न स्याद्विजितान्येन्द्रियः पुमान् ॥ न जयेद्रसनं यावज्जितं सर्वं जिते रसे ॥२१॥ पिङ्गला नाम वेश्याऽऽसीद्विदेवनगरे पुरा ॥ तस्या मे शिक्षितं किञ्चिन्निबोध नृपनन्दन ॥२२॥ सा स्वैरिण्येकदा कान्तं संकेत उपनेष्यती ॥ अभूत्काले बहिर्द्वारि बिभ्रती रूपमुत्तमम् ॥२३॥ मार्ग आगच्छतो वीक्ष्य पुरुषान्पुरुषर्षभ ॥ ताञ्छुल्कदान्वित्तवतः कान्तान्मेनेऽर्थकामुका ॥२४॥ आगतेष्वपयातेषु सा संकेतोपजीविनी ॥ अप्यन्तो वित्तवान्कोऽपि मामुपैष्यति भूरिदः ॥ २५ ॥ एवं दुराशया ध्वस्तनिद्रा द्वार्यवलम्बती ॥ निर्गच्छन्ती प्रविशती निशीथं समपद्यत ॥ २६ ॥ तस्या वित्ताशया शुष्यद्वक्त्राया दीनचेतसः ॥ निर्वेदः परमो जज्ञे चिन्ताहेतुः सुखावहः ॥ २७ ॥ तस्या निर्विण्णचित्ताया गीतं शृणु यथा मम ॥ निर्वेद आशापाशानां पुरुस्य यथा ह्यसिः ॥२८॥ न ह्यङ्गाजातनिर्वेदो देहबन्धं जिहासति ॥ यथा विज्ञान-

॥ २२ ॥ तर त्यो गएपछि वेश्या विचार्दथी—कुनै अर्को धेरै धन दिने धनी पुरुष मेरो आउँदै होला ॥ २५ ॥ यही दुराशामा त्यो धेरै बेरसम्म आफ्नू ढोकामा नै उभिन्दा त्यसलाई निद्रा लाग्न सकेन । त्यो कहिले भित्र र कहिले बाहिर गर्दागर्दै आधा रात बित्यो ॥ २६ ॥ यस प्रकार धनको दुराशाले प्रतीक्षा गर्दा गर्दा त्यसको मुख सुक्यो र अन्तमा त्यो चिन्तेका कुराले व्याकुल चित्त वेश्याको हृदयमा सुखकारक वैराग्य उत्पन्न भयो ॥ २७ ॥ चित्तमा वैराग्य उत्पन्न भएपछि त्यसले जे भनी त्यो सुन । हे राजन् ! पुरुषको आशारूपी पाश काट्न वैराग्य खड्गको समान हुन्छ ॥ २८ ॥ हे तात ! जसको हृदयमा वैराग्य उत्पन्न हुँदैन, त्यो पुरुष कहिल्यै देह-बन्धनलाई तोड्न सक्तैन । जस्तै—

दृष्टान्त ( चितेका कुरा )—सन्त रसखान युवावस्थामा निकै रागी थिए, तर भगवानको कृपाले त्यस अवस्थामै तिनको हृदयमा भगवद्भक्ति जागिसकेको थियो र मुसलमान भएर पनि ती श्रीकृष्णका भक्त बनिसकेका थिए । त्यसै बेला कुनै धनी मुसलमान परिवारकी ए[illegible] षोडशी युवती कामको वशीभूत भएर उनीकहाँ आई । उसले आफ्नू इच्छा सुनाई, तर उनले यस्तो व्यर्थ कुराको लागि अस्वीकार गरिदिए । निकै दिनपछि एक दिन ती बनैमा बसिरहेका थिए । उहाँ युवती निकै व्याकुलित त्यहाँ आई । रसखान त्यसलाई देख्नासाथ तुरुन्त उठेर हिंडिदिए । युवतीले दगुर्दै गएर भनी—'कुनै अपराध नगरेर नै हजुर मेरो प्राणान्त लिनु हुन्छ ?' त्यसका शब्द नसुन्दै ती परतिर लागेर भागे । धेरै वर्षपछि वृद्धावस्था आयो र रसखानको मनमा यो विचार आयो—'यदि त्यस युवतीको इच्छा पूर्ण गरिदिएको भए पनि के बाधा थियो र ? पछि पश्चात्ताप गरेर प्रायश्चित्त भने थियो ।' मनमा यस्तो चिन्ता[illegible] उनको प्राणको सीमा रहने र आफ्नू मनसित उनले भने—'ए दुराचारी, पापी मन ! यौवनमा जुन भावलाई धिक्कारेको थिइस्, त्यही या वृद्धावस्थामा किन जागिरहेको छ ? न कर्ति दुष्ट छस् !' यही कुरा सम्झेर तीन दिनसम्म अन्न जल त्यागी एकान्तमा बसिरहे ।

विज्ञान विहीन पुरुष माया त्याग्न सक्तैन ॥ २९ ॥ पिङ्गलाले भनी—अहो ! म इन्द्रियपरायणाको मोह-विस्तार हेर, म मूर्खा यी तुच्छ तथा लम्पट प्रेमीहरूसित सुख खोज्दैछु ॥ ३० ॥ हरे, म कस्ती अबुझ रहीछु, जो सधैं आफ्नू नजीक रमण गर्ने र नित्य रति तथा धन दिने ती सत्पुरुष ईश्वरलाई छाडेर कामना पूर्तिमा असमर्थ तथा दुःख, भय रोग, शोक एवं मोह आदि दिने यी तुच्छ पुरुषहरूलाई रिझाउँछु ॥ ३१ ॥ अहो ! मैले यो अतिशय निन्दनीय आजीविका अर्थात् वेश्या वृत्ति द्वारा व्यर्थ आफूलाई सन्तप्त पारें हा ! म यी स्त्री-लम्पट, अर्थलोलुप र अनुशोचनीय पुरुषहरूद्वारा किनेको देहले रति तथा धनको इच्छा गर्दथें ॥ ३२ ॥ जुन देह अस्थिरूपी बाङ्गो-टिङ्गो बाँसको लिङ्गमा अडिएको त्वचा, रोम र नङले आवृत्त, नाशवान् र मलमूत्रले भरिएको नौ द्वार हुने घररूपी यो देह छ । यसको मनाहेक अरु कुन स्त्री सेवन गर्छी ॥ ३३ ॥ विदेहको यस नगरीमा यौटी मनै यस्ती मूर्खा छु, जो ती आत्मप्रद अच्युत परमात्मालाई छाडेर अन्य पुरुषसित आफ्नो कामना पूर्ण पार्न खोज्दैछु ॥ ३४ ॥ ती अनन्त प्रभु सबै देहधारीहरूका सुहृद,

रहितो मनुजो ममतां नृप ॥ २६ ॥ पिङ्गलोवाच ॥ अहो मे मोहविततिं पश्यताविजितात्मनः ॥ या कान्तादसतः कामं कामये येन बालिशा ॥ ३० ॥ सन्तं समीपे रमणं रतिप्रदं वित्तप्रदं नित्यमिमं विहाय ॥ अकामदं दुःखभयाधिशोकमोहप्रदं तुच्छमहं भजेऽज्ञा ॥ ३१ ॥ अहो मयाऽऽत्मा परितापितो वृथा सांकेत्यवृत्त्याऽतिविगर्ह्यवार्तया ॥ स्त्रैणान्नराद्याऽर्थतृषोऽनुशोच्यात्क्रीतेन वित्तं रतिमात्मनेच्छती ॥ ३२ ॥ यदस्थिभिर्निर्मितवंशवं- श्यस्थूणं त्वचारोमनखैः पिनद्धम् ॥ क्षरन्नवद्वारमगारमेतद्विण्मूत्रपूर्णं मदुपैति काऽन्या ॥ ३३ ॥ विदेहानां पुरे ह्यस्मिन्नहमेकैव मूढधीः ॥ याऽन्यमि- च्छत्यसत्यस्मादात्मदात्काममच्युतात् ॥ ३४ ॥ सुहृत्प्रेष्ठतमो नाथ आत्मा चायं शरीरिणाम् ॥ तं विक्रीयात्मनैवाहं रमेऽनेन यथा रमा ॥ ३५ ॥ कियत्प्रियं ते व्यभजन्कामा ये कामदा नराः ॥ आद्यन्तवन्तो भार्याया देवा वा कालविद्रुताः ॥ ३६ ॥ नूनं मे भगवान्प्रीतो विष्णुः केनापि कर्मणा ॥ निर्वेदोऽयं दुराशाया यन्मे जातः सुखावहः ॥३७॥ मैवं स्युर्मन्दभाग्यायाः क्लेशा निर्वेदहेतवः ॥ येनानुबन्धं निर्हृत्य पुरुषः शममृच्छति ॥३८॥ तेनोपकृतमादाय शिरसा ग्राम्यसङ्गताः ॥ त्यक्त्वा दुराशाः शरणं व्रजामि तमधीश्वरम् ॥ ३९ ॥ सन्तुष्टा श्रद्दधत्येतद्यथालाभेन जीवती ॥ विहराम्यमुनैवाहमात्मना रमणेन वै ॥४०॥ संसारकूपे पतितं विषयैर्मुषितेक्षणम् ॥ ग्रस्तं कालाहिनाऽऽत्मानं कोऽन्यस्त्रातुमधीश्वरः ॥ ४१ ॥ आत्मैव

प्रियतम, स्वामी र आत्मा हुन् । अब उनैको हात बिकेर म लक्ष्मी झैं उनैसित रमण गर्दछु ॥ ३५ ॥ यी जुन काम र भोगप्रद पुरुष छन्, यीबाट मेरो के कल्याण होला ? अथवा अरु पनि अनेक आदि-अन्त हुने पुरुष र कालसित भयभीत देवता छन्, ती पनि आफ्नी भार्यालाई कति सन्तुष्ट पार्दछन् ? ॥ ३६ ॥ अवश्य मेरो कुनै शुभकर्मले भगवान् प्रसन्न भएछन्, त्यसैले यस दुराशाबाट मेरो मनमा यस्तो सुखदायी वैराग्य उत्पन्न भयो ॥ ३७ ॥ यदि म मन्दभाग्य भए मैले यो कष्ट किन बोक्नु पर्दथ्यो, जो ती वैराग्यका हेतु हुन्—जसद्वारा मनुष्य गृहादिको बन्धन छिनालेर शान्ति प्राप्त गर्दछ ॥ ३८ ॥ अब म यस उपकारलाई शिरोधार्य गरेर विषयजनित दुराशा त्यागेर ती जगदीश्वरको नै शरणमा जान्छु ॥ ३९ ॥ अब म सन्तोष र श्रद्धापूर्वक प्रारब्धवश जे पाइन्छ, त्यसैले जीवन-निर्वाह गर्दै आफ्नू आत्मारूपी पुरुषसित नै रमण गर्दछु ॥ ४० ॥ अपार संसाररूपी कूपमा परी,

विषय-वासनाले नष्टदृष्टि र कालरूपी सर्पले डसेको यस आत्मा अर्थात् जीवको रक्षा परमात्माबाहेक अरु कसले गर्न सक्छ ? ॥ ४१ ॥ सबै विषयबाट विरक्त आत्मा नै आफ्नु रक्षक हुन्छ । अतः प्रमादरहित भएर यस जगत्लाई निरन्तर कालरूपी सर्पले डसेको ठानोस् ॥ ४२ ॥ अवधूत भन्दछन्–हे राजन् ! यस्तो निश्चय गरेर पिङ्गला वेश्या कुनै कामिनीको अभिलाषा अनित दुराशा त्यागेर शान्तभावले स्थित भई आफ्नु शय्यामा गएर सुती ॥ ४३ ॥ आशा नै परम दुःख र निराशा नै परम सुख हो, किनकि पिङ्गला कान्तको आशा छाडिदिएपछि सुखले निदाई ॥ ४४ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे पं० गौरीशंकर कृत 'वासिष्ठी' भाषाटीकायामष्टमोऽध्यायः ॥८॥

( अवधूतोपाख्यानको अन्तिमभाग )–अवधूत भन्दछन्—हे राजन् ! मनुष्यलाई जे जे वस्तु मनपर्दछन्, तिनको संचय नै उनको कष्टको कारण हुन्छ । यस्तो ठानेर जो अकिञ्चन भावले बसेर केही पनि संग्रह गर्दैन, त्यो अनन्त सुख पाउँदछ । यो मैले कुररी पक्षीसित सिकें ॥ १ ॥ यौटा कुररी पक्षी चुच्चोमा मासु लिएर उड्दै थियो । मासु नहुने

ह्यात्मनो गोप्ता निर्विद्येत यदाऽखिलात् ॥ अप्रमत्त इदं पश्येद्ग्रस्तं कालाहिना जगत् ॥ ४२ ॥ ब्राह्मण उवाच ॥ एवं सा व्यवसितमतिर्दुराशां कान्ततर्षजाम् ॥ छित्त्वोपशममास्थाय शय्यामुपविवेश सा ॥ ४३ ॥ आशा हि परमं दुःखं नैराश्यं परमं सुखम् ॥ यथा सञ्छिद्य कान्ताशां सुखं सुष्वाप पिङ्गला ॥ ४४ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे पिङ्गलोपाख्याने अष्टमोऽध्यायः ॥ ८ ॥

ब्राह्मण उवाच ॥ परिग्रहो हि दुःखाय यद्यत्प्रियतमं नृणाम् ॥ अनन्तं सुखमाप्नोति तद्विद्वान्यस्त्वकिञ्चनः ॥१॥ सामिषं कुररं जघ्नुर्बलिनो ये निरामिषाः ॥ तदामिषं परित्यज्य स सुखं समविन्दत॥२॥ न मे मानावमानौ स्तो न चिन्ता गेहपुत्रिणाम् ॥ आत्मक्रीड आत्मरतिर्विचरामीह बालवत्॥३॥ द्वावेव चिन्तया मुक्तौ परमानन्द आप्लुतौ ॥ यो विमुग्धो जडो बालो यो गुणेभ्यः परं गतः॥४॥ क्वचित्कुमारी त्वात्मानं वृणानान्गृहमागतान् ॥ स्वयं तानर्हयामास क्वापि यातेषु बन्धुषु॥५॥ तेषामभ्यवहारार्थं शालीन्रहसि पार्थिव ॥ अवघ्नन्त्याः प्रकोष्ठस्थाश्चक्रुः शङ्खाः स्वनं महत् ॥६॥ सा तज्जुगुप्सितं मत्वा महती व्रीडिता ततः ॥ बभञ्जैकैकशः शङ्खान्द्वौ द्वौ पाण्योरशेषयत् ॥ ७ ॥ उभयोरप्यभूद्घोषो ह्यवघ्नन्त्याः स्म शङ्खयोः ॥ तत्राप्येकं निरभिदेकस्मान्नाभवद्ध्वनिः ॥ ८ ॥ अन्वशिक्षमिमं तस्या उपदेशमन्दिरम ॥ लोकाननुचरन्नेताँल्लोकतत्त्व विवित्सया ॥ ९ ॥ वासो बहूनां कलहो भवेद्वार्ता

बलवान् पक्षीहरूले उसलाई घेरे कुटे । अनि उसले त्यो मासु छाडेर नै शान्ति पायो ॥ २ ॥ मलाई मान र अपमानको केही विचार छैन, घर वा परिवारको पनि केही चिन्ता छैन । म त आफ्नु आत्मामै क्रीडा गर्दै र आत्मामै मग्न रहेर बालक झैं निःशङ्क विचरण गर्दछु ॥ ३ ॥ संसारमा दुई थरिका व्यक्ति नै निश्चिन्त तथा परमानन्द पूर्ण रहन्छन् । यौटा केही नजान्ने निश्चेष्ट बालक र अर्को गुणातीत महात्मा । यो मैले बालकसित सिकें ॥ ४ ॥ यौटी कुमारी कन्याले आफना बाबु-आमा कतै बाहिर गएका बेला आफूलाई वरण गर्न घरमा आएका व्यक्तिको आतिथ्य स्वयं गरी ॥ ५ ॥ हे राजन् ! जब त्यो उनलाई खुवाउन घरभित्र एकान्तमा धान कुट्न थाली [illegible] चूराहरू बज्नलागे ॥ ६ ॥ चूराको शब्दलाई निन्दाजनक ठानेर त्यो लज्जित भई र एक-एक गरेर सबै चूराहरू फोरिदिई र दुबै हातमा [illegible] चूराहरू मात्र राखी ॥ ७ ॥

12-73

धान कुट्ता ती दुइटा चुराको पनि शब्द हुन लाग्यो। अनि उसले एक-एक चुरा अझ फुकालिदिई। अब एक-एक चुराको कुनै शब्द भएन ॥ ८ ॥ हे अरिमर्दन! लोकतत्त्वको जिज्ञासावश पृथ्वीमा डुल्दा मैले यही शिक्षा पाएँ—धेरै मानिससित बस्नाले कलह हुन्छ र दुइजना सँगै रहनाले परस्पर कुरा हुँदै रहन्छ। अतः त्यस कुमारीको चुरा सदृश सदा एक्लै डुलास्। यो शिक्षा मैले कुमारी कन्यासित पाएँ ॥ ९ ॥ १० ॥ वैराग्य तथा अभ्यासद्वारा निरालस्य भावले आसन र श्वासलाई जितेर आफ्नू वशमा गरिएको चित्तलाई यौटै लक्ष्य अर्थात् परमात्मामा लगाओस् ॥११॥ ती परमानन्द स्वरूप तथा परमपदमा स्थित यो मन विस्तार-विस्तार कर्मरूपी धूलो छाडिदिन्छ र फेरि सत्वगुणको उद्रेकले रज र तम त्यागेर दाउरारहित अग्नि झैं शान्त हुन्छ ॥१२॥ यसरी आत्मामा चित्तको निरोध भएपछि यसलाई बाहिर-भित्र कहीं पनि कुनै पदार्थको भान रहन्न। जस्तै कि यौटा बाण बनाउने मानिसले बाण बनाउमा निमग्न रहनाले नजीकैबाट गएको राजाको सवारी पनि देख्नै सकेन। यो मैले बाण बनाउने व्यक्तिसित सिकेको हुँ ॥ १३ ॥ मुनिको एतब्य हो सधैं असंले

द्वयोरपि ॥ एक एव चरेत्तस्मात्कुमार्या इव कङ्कणः ॥ १० ॥ मन एकत्र संयुञ्ज्याज्जितश्वासो जितासनः ॥ वैराग्याभ्यासयोगेन ध्रियमाणतन्द्रितः ॥११॥ यस्मिन्मनो लब्धपदं यदेतच्छनैः शनैर्मुञ्चति कर्मरेणून् ॥ सत्त्वेन वृद्धेन रजस्तमश्च विधूय निर्वाणमुपैत्यनिन्धनम् ॥१२॥ तदैवमात्मन्यवरुद्धचित्तो न वेद किञ्चिद्बहिरन्तरं वा ॥ यथेषुकारो नृपतिं व्रजन्तमिषौ गतात्मा न ददर्श पार्श्वे ॥ १३ ॥ एकचार्यनिकेतः स्यादप्रमत्तो गुहाशयः ॥ अलक्ष्यमाण आचारैर्मुनिरेकोऽल्पभाषणः ॥ १४ ॥ गृहारम्भो हि दुःखाय विफलश्चाध्रुवात्मनः ॥ सर्पः परकृतं वेश्म प्रविश्य सुखमेधते ॥१५॥ एको नारायणो देवः पूर्वसृष्टं स्वमायया ॥ संहृत्य कालकलया कल्पान्त इदमीश्वरः ॥ १६ ॥ एक एवाद्वितीयोऽभूदात्माधारोऽखिलाश्रयः ॥ कालेनात्मानुभावेन साम्यं नीतासु शक्तिषु ॥ सत्त्वादिष्वादिपुरुषः प्रधानपुरुषेश्वरः ॥ १७ ॥ परावराणां परम आस्ते कैवल्यसंज्ञितः ॥ केवलानुभवानन्दसन्दोहो निरुपाधिकः ॥ १८ ॥ केवलात्मानुभावेन स्वमायां त्रिगुणात्मिकाम् ॥ संक्षोभयन्सृजत्यादौ तया सूत्रमरिन्दम ॥ १९ ॥ तामाहुस्त्रिगुणव्यक्तिं सृजन्तीं विश्वतोमुखम् ॥ यस्मिन्प्रोतमिदं विश्वं येन संसरते पुमान् ॥ २० ॥ यथोर्णनाभिर्हृदयादूर्णां सन्तत्य वक्त्रतः ॥ तया विहृत्य

एक्लै डुलिरहोस् कुनै यौटै स्थानमा नबसोस्, प्रमाद, नगरोस्, गुफादि एकान्तमा बसोस्, बाह्य आचारबाट आफूलाई लुकाओस्, एक्लो र अल्पभाषी बनोस् ॥ १४ ॥ यस अनित्य देहको निम्ति घर बनाउने ब्याउलो नगरोस्, किनकि घर दुःखको कारण हो। सर्प अर्काको घरमा पनि सुखपूर्वक बस्तछ। यो मैले सर्पसित सिकेको हुँ ॥ १५ ॥ पूर्वकालमा आफ्नी मायाले रचेको यस विश्वलाई कल्पको अन्त्य भएपछि एक्लै नारायण नै कालरूपले लय गरेर आत्माधार र सर्वाधिष्ठान रूपले शेष रहन्छन्। आफ्नै शक्ति स्वरूप कालद्वारा सत्वादि गुणको साम्यावस्थामा प्राप्त भएपछि प्रधान र पुरुषका नियन्ता, परावर अर्थात् लौकिक र अलौकिक प्रपञ्चका कारण स्वरूप आदि पुरुष कैवल्यरूपले शेष रहन्छन्। हे शत्रुदमन! अनि ती विशुद्ध विज्ञानानन्दघन निरुपाधिक भगवान् नै केवल आफ्नी शक्ति अर्थात् कालद्वारा त्रिगुणमयी मायालाई क्षुब्ध पारेर पहिले क्रियाशक्ति प्रधान सूत्र अर्थात् महतत्त्वको रचना गर्दछन्। त्रिविध सृष्टि रच्ने भगवान् त्यस सूत्रबाट गुणत्रयको कार्य गर्दछन्। जसमा यो विश्व निमग्न रहन्छ र जसले गर्दा जीवलाई संसारको बन्धन प्राप्त हुन्छ

॥ १६-२० ॥ जस्तै माकुरो मुखद्वारा जाल फिंजाएर त्यसैमा विहार गरेपछि त्यसलाई स्वयं फेरि निलिदिन्छ, त्यस्तै नै परमात्मा पनि स्वयं आफूबाटै यो प्रपञ्च फिंजाएर फेरि आफूमा नै लीन पार्ने गर्दछन्। यो ज्ञान मैले माकुरोबाट पाएको हुँ ॥२१॥ देहधारी जीव स्नेहले द्वेष वा भयले जेतुकै वस्तुमा पूर्णरूपले आफ्नू चित्त लगाइदिन्छ। अन्त्यमा त्यो तद्रूप बन्दछ। जस्तै भृङ्गी कीराद्वारा आफ्नू प्वालमा थुनेको कीरा डरले उसैको ध्यान गर्दा-गर्दा अन्त्यमा आफ्नो पूर्वरूप नछाडेर पनि उसैको रूप झैं बन्दछ। यो मैले भृङ्गीबाट सिखें ॥२२-२३॥ हे राजन्! यसरी मैले यति गुरुहरूसित यो शिक्षा पाएँ। अब आफ्नू देहबाट मैले जे जति सिखें त्यो सुन–॥२४॥ मेरो विवेक र वैराग्यको हेतु यो देह पनि मेरो गुरु हो, किनकि उत्पत्ति र नाश नै शरीरको धर्म हो र निरन्तर कष्ट पाउनु नै यसको उत्तरोत्तर फल हो। यद्यपि म यसले तत्त्वचिन्तन गर्दछु तापनि मेरो निश्चय यस्तो छ–यो पराई अर्थात् स्याल

भूयस्तां ग्रसत्येवं महेश्वरः ॥ २१ ॥ यत्र यत्र मनो देही धारयेत्सकलं धिया ॥ स्नेहाद्द्वेषाद्भयाद्वापि याति तत्तत्सरूपताम् ॥ २२ ॥ कीटः पेशस्कृतं ध्यायन्कुड्यां तेन प्रवेशितः ॥ याति तत्सात्मतां राजन्पूर्वरूपमसन्त्यजन् ॥ २३ ॥ एवं गुरुभ्य एतेभ्य एषा मे शिक्षिता मतिः ॥ स्वात्मोपशिक्षितां बुद्धिं शृणु मे वदतः प्रभो ॥ २४ ॥ देहो गुरुर्मम विरक्तिविवेकहेतुर्बिभ्रत्स्म सत्त्वनिधनं सततार्त्युदर्कम् ॥ तत्त्वान्यनेन विमृशामि यथा तथापि पारक्यमित्यवसितो विचराम्यसङ्गः ॥ २५ ॥ जायात्मजार्थपशुभृत्यगृहाप्तवर्गान् पुष्णाति यत्प्रियचिकीर्षितमावितन्वन् ॥ स्वान्ते सकृच्छ्रमवरुद्धधनः स देहः सृष्ट्वाऽस्य बीजमवसीदति वृक्षधर्मा ॥ २६ ॥ जिह्वैकतोऽमुमपकर्षति कर्हि तर्षा शिश्नोऽन्यतस्त्वगुदरं श्रवणं कुतश्चित् ॥ घ्राणोऽन्यतश्चपलदृक् क्व च कर्मशक्तिर्बह्व्यः सपत्न्य इव गेहपतिं लुनन्ति ॥ २७ ॥ सृष्ट्वा पुराणि विविधान्यजयाऽऽत्मशक्त्या वृक्षान्सरीसृपपशून्खगदंशमत्स्यान् ॥ तैस्तैरतुष्टहृदयः पुरुषं विधाय ब्रह्मावलोकधिषणं मुदमाप देवः ॥ २८ ॥ लब्ध्वा सुदुर्लभमिदं बहुसम्भवान्ते मानुष्यमर्थदमनित्यमपीह धीरः ॥ तूर्णं यतेत न पतेदनुमृत्यु यावन्निःश्रेयसाय विषयः खलु सर्वतः स्यात् ॥ २९ ॥ एवं सञ्जातवैराग्यो विज्ञानालोक आत्मनि ॥ विच-

कुकुर आदिको भक्ष्य हो। यसले सदा असङ्ग भएर डुल्दछु ॥२५॥ जसका प्रिय कामनाहरूको विस्तार गर्ने पुरुष धन, पशु, सेवक, स्त्री-पुत्र, घर र कुटुम्बको पोषण गर्दछ, ठूला-ठूला कष्ट खपेर धनसंचय गर्ने प्राणी देहरूपी वृक्ष झैं स्वभाव हुनाले अन्य देहको निम्ति कर्मरूपी बीज छरेर आफ्नू आयु समाप्त भएपछि नाशमा प्राप्त हुन्छ ॥२६॥ जस्तै धेरै थरि सौताहरू गृहस्वामीलाई आफू-आफूतिर तान्दछन्, त्यस्तै जीवलाई उसका ज्ञानेन्द्रिय तथा कर्मेन्द्रिय पीडित पार्दै रहन्छन्। यसलाई रसना कहिल्यै एकातिर तान्दछ भने पिपासा अर्कोतिर। यसै गरी शिश्न अन्यत्र तान्दछ भने त्वचा, उदर र श्रवणेन्द्रिय कतै अर्कैतिर तान्न थाल्दछन्। त्यस्तै घ्राण र चंचल नेत्र अर्कोतिर तान्दछन् ॥ २७ ॥ ती भगवान्‌ले आफ्नो अजेय मायाशक्ति द्वारा वृक्ष, सर्प, पशु, पक्षी, देश र मत्स्य आदि विविध योनिहरू रचेर पनि संतुष्ट नभई जब ब्रह्मदर्शनको योग्यताले सम्पन्न मनुष्य देह रचे, अनि उनले प्रसन्नता प्राप्त गरे। अतः यो मनुष्य देह नै सब भन्दा श्रेष्ठ छ ॥ २८ ॥ मनुष्यदेह अनित्य भए पनि समस्त पुरुषार्थको साधन हो। अनेक जन्मपछि यो दुर्लभ नरदेह पाएर बुद्धि

मान् पुरुषको कर्तव्य हो—त्यो फेरि मृत्युको हातमा पर्नुभन्दा पहिले नै आफ्नू निःश्रेयस अर्थात् सायुज्य मोक्ष प्राप्तिको निम्ति प्रयत्न गराम्, किनकि विषय सुख त सबै जन्महरूका प्राप्त हुँदै रहन्छ। अतः त्यसको संग्रहमा आफ्नू अमूल्य समय नष्ट नपारोस् ॥२९॥ यसरी हृदयमा वैराग्ययुक्त ज्ञानालोकले आलोकित भएर म निरहङ्कार, निःसङ्ग भएर यस भूमण्डले-मा स्वच्छन्दरूपले घुमिरहन्छु ॥ ३० ॥ यौटै गुरुले यथेष्ट र बलियो बोध प्राप्त हुन सक्तैन। त्यसको निम्ति स्वयं पनि विचार गर्न आवश्यकता पर्दछ। हेर यौटै अद्वितीय ब्रह्मको ब्रह्मर्षिहरूले विविध प्रकारले निरूपण गरेका छन् ॥ ३१ ॥ भगवान् भन्नुहुन्छ—हे उद्धव ! ती गम्भीर-बुद्धि ब्राह्मणश्रेष्ठ राजा यदुलाई यसरी उपदेश दिएर बिदा भई प्रणाम तथा पूजा आदि गरेपछि प्रसन्न चित्तले इच्छानुसार हिंडे ॥ ३२ ॥ यसरी हाम्रा पूर्वज यदु ती अवधूतको *शङ्का समाधानपूर्ण उपदेश सुनेर सर्वथा निःसङ्ग भई समदर्शी पदमा प्राप्त

रामि महीमेतां मुक्तसङ्गोऽनहंकृतिः ॥ ३० ॥ न ह्येकस्माद्गुरोर्ज्ञानं सुस्थिरं स्यात्सुपुष्कलम् ॥ ब्रह्मैतदद्वितीयं हि गीयते बहुधर्षिभिः ॥ ३१ ॥ श्रीभगवानुवाच ॥ इत्युक्त्वा स यदुं विप्रस्तमामन्त्र्य गभीरधीः ॥ वन्दितोऽभ्यर्थितो राज्ञा ययौ प्रीतो यथागतम् ॥ ३२ ॥ अवधूतवचः श्रुत्वा पूर्वेषां नः स पूर्वजः ॥ सर्वसङ्गविनिर्मुक्तः समचित्तो बभूव ह ॥ ३३ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे नवमोऽध्यायः ॥ ९ ॥

श्रीभगवानुवाच ॥ मयोदितेष्ववहितः स्वधर्मेषु मदाश्रयः ॥ वर्णाश्रमकुलाचारमकामात्मा समाचरेत् ॥ १ ॥ अन्वीक्षेत विशुद्धात्मा देहिनां विषयात्मनाम् ॥ गुणेषु तत्वध्यानेन सर्वारम्भविपर्ययम् ॥ २ ॥ सुप्तस्य विषयालोके ध्यायतो वा मनोरथः ॥ नानात्मकत्वाद्विफलस्तथा भेदात्मधीर्गुणैः

भए ॥ ३३ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे नेपाली भाषाटीकायां नवमोऽध्यायः ॥ ९ ॥

(संसारको मिथ्यात्वप्रतिपादन)— भगवान् भन्नुहुन्छ—हे उद्धव ! मैले भनेका आफाफ्ना धर्ममा सावधान रही मेरै आश्रित भएर आफ्नू वर्ण, आश्रम र कुलाचारको निष्काम बुद्धिले आचरण गर्दैरहोस् ॥ १ ॥ आफ्नू धर्मानुष्ठानले शुद्धचित्त भएर यो हेरोस्—विषय-लोलुप व्यक्ति जुन त्रिगुणमय कर्म सत्य मानेर चल्दछन् ती सबैको परिणाम विपरीत

---

* दृष्टान्त (शंका समाधान)—एक दिन दुइजना साधु यौटा महात्मालाई भेट्न गए। जुनबेला ती उनको कुटीमा पुगे तब थाहा पाए कि महात्मा दरबारमा गएका छन्। महात्माको राजदरबार जाने कुरा सुनेर ती दुवैजना विचार गर्नलागे—'निःस्वार्थी महात्माले राजाको दरबारमा जाने के आवश्यकता ! यी महात्मा पनि पूरा महात्मा नै छन् जस्तो लाग्दो !' यसरी विचार विमर्श भएपछि महात्मा प्रति तिनका हृदयमा केही अश्रद्धा जस्तो उत्पन्न भयो। एक दिन पर्सेर तिनले पत्ता लगाए—ती कुन बेला उहाँबाट फर्कन्छन्। अनि थाहा भयो—उनी आउनमा अझ तीन घण्टा जति विलम्ब लाग्दछ। अब ती दुवैले विचार गरे—'हिंड, एक दिन कतै डुलेर आऊँ। व्यर्थ यहाँ पर्सेर के गर्ने ! ती दुवै मध्ये यौटाको जुत्ता फाटेको थियो। अतः ती सुकीकारको पसलमा त्यो सिलाउन पुगे। एक दिन संस्तावस्तै सुकीकारको यौटा औंठी रहेछ। त्यसले तिनै दुइजनालाई औंठी चोर ठहऱ्यायो। तत्काल पुलिस आइपुगे र ती दुवै साधुलाई पाता कसेर राजाकहाँ पुऱ्याए। राजाले सबै कुरा जाँच-बूझ गर्दा तिनै चोर ठहरिए र उनले तत्काल दुवै हात काटिदिने आज्ञा दिए। त्यसै बेला ती महात्मा पनि आइपुगे। उनले राजालाई यो कुरा बुझाए—हजुर ! यो सुकीकार र दुवै जना भ्रममा पर्नु भयो। यी साधु निर्दोष छन्। महात्माले भनेपछि राजाले तिनलाई छाडिदिए। त्यसपछि महात्माले ती दुवैलाई सम्मानपूर्वक आफ्नू आश्रममा ल्याएर उनको सत्कार गरे। एकदिनपछि महात्माले भने—'म दरबारमा किन जान्छु भन्ने कुराको सन्देह तपाईंहरूको मनमा उठेको कुरा मैले जानेको हुँ र तपाईंले यस्तो विचार गर्नु के उचित थियो—यौटा त्यागी तपस्वीको राजदरबारमित के काम ! तर तपाईंहरू जस्ता व्यक्तिप्रति हुने अन्याय हुन नपाओस् भनेर नै म त्यहाँ जाने गर्दछु, मलाई धन पाउने आशा र लोभ छैन।

12 ?/6

नै हुन्छ ॥ २ ॥ सुतेको पुरुषलाई सपनामा देखिने पदार्थ र चिन्तन गर्ने व्यक्तिको मनोरथ जस्तै नानारूप हुनाले मिथ्या हुन्छन्, त्यस्तै नै त्रिगुणात्मिका भेद-बुद्धि पनि मिथ्या नै हुन्छ ॥३॥ मेरो भक्त पुरुष निवृत्तिको निम्ति केवल नित्य नैमित्तिक कर्म गरून्, प्रवृत्ति जनक काम्यकर्मबाट पृथक् रहनु र जब आत्म-जिज्ञासा अर्थात् ब्रह्मविचारमा प्रवृत्त हुन्छ, तब कर्मविधिको चिन्ता नगरोस् ॥ ४ ॥ मेरा भक्त सत्य-अहिंसादि यम र शौच-सन्तोषादि नियमको पनि पालन गरून् । मेरो स्वरूपका ज्ञाता, शान्त र साक्षात् मेरै स्वरूप गुरुको प्रेम तथा श्रद्धा-भक्तिले आराधना गरोस् ॥ ५ ॥ त्यो मान-मत्सरहित, कार्यकुशल, ममताशून्य, दृढप्रेमी, गम्भीर तथा आत्मतत्त्वको जिज्ञासु भएर परनिन्दा र व्यर्थ कुरा नबोलोस् ॥ ६ ॥ मुख्य धनस्वरूप आफ्नु आत्मालाई सर्वत्र देख्दै समदर्शी भएर स्त्री, पुत्र, घर, भूमि, स्वजन र धन-मानादिमा अनासक्त रहोस् ॥७॥ जस्तै—बल्ने काठबाट उसको दाहक र प्रकाशक अग्नि पृथक् रहन्छ, त्यस्तै—स्थूल र सूक्ष्म देहले उसको साक्षीस्वरूप स्वयं प्रकाश आत्मा पनि भिन्न रहन्छ ॥ ८ ॥ काठमा प्रविष्ट अग्नि जसरी ध्वंस,

॥ ३ ॥ निवृत्तं कर्म सेवेत प्रवृत्तं मत्परस्त्यजेत् ॥ जिज्ञासायां संप्रवृत्तो नाद्रियेत्कर्मचोदनाम् ॥ ४ ॥ यमानभक्षणं सेवेत नियमान्मत्परः क्वचित् ॥ मदभिज्ञं गुरुं शांतमुपासीत मदात्मकम् ॥ ५ ॥ अमान्यमत्सरो दक्षो निर्ममो दृढसौहृदः ॥ असत्वरोऽर्थजिज्ञासुरनसूयुरमोघवाक् ॥ ६ ॥ जायापत्यगृहक्षेत्रस्वजनद्रविणादिषु ॥ उदासीनः समं पश्यन्सर्वेष्वर्थमिवात्मनः ॥ ७ ॥ विलक्षणः स्थूलसूक्ष्माद्देहादात्मेक्षिता स्वदृक् ॥ यथाऽग्निर्दारुणो दाह्याद्दाहकोऽन्यः प्रकाशकः ॥ ८ ॥ निरोधोत्पत्त्यणुबृहन्नानात्वं तत्कृतान्गुणान् ॥ अन्तः प्रविष्ट आधत्त एवं देहगुणान्परः ॥ ९ ॥ योऽसौ गुणैर्विरचितो देहोऽयं पुरुषस्य हि ॥ संसारस्तन्निबन्धोऽयं पुंसो विद्याच्छिदात्मनः ॥ १० ॥ तस्माज्जिज्ञासयात्मानमात्मस्थं केवलं परम् ॥ सङ्गम्य निरसेदेतद्वस्तुबुद्धिं यथाक्रमम् ॥ ११ ॥ आचार्योऽरणिराद्यः स्यादन्तेवास्युत्तरारणिः ॥ तत्सन्धानं प्रवचनं विद्यासन्धिः सुखावहः ॥ १२ ॥ वैशारदी साऽतिविशुद्धबुद्धिर्धुनोति मायां गुणसम्प्रसूताम् ॥ गुणाँश्च सन्दह्य यदात्ममेतत्स्वयं च शाम्यत्यसमिद्यथाऽग्निः ॥१३॥ अथैषां कर्मकर्तॄणां भोक्तॄणां सुखदुःखयोः ॥ नानात्वमथ नित्यत्वं लोककालागमात्मनाम् ॥ १४ ॥ मन्यसे सर्वभावानां संस्था ह्यौत्पत्तिकी यथा ॥ तत्तदाकृतिभेदेन जायते भिद्यते च धीः ॥ १५ ॥ एवमप्यङ्ग सर्वेषां देहिनां देहयोगतः ॥ कालावयवतः सन्ति भावा जन्मादयोऽसकृत् ॥ १६ ॥ तत्रापि कर्मणां कर्तुरस्वा-

उत्पत्ति, सूक्ष्मता, महत्ता आदि काठका गुणहरू ग्रहण गर्दछ, उसै गरी आत्मा जन्म-मरणादि देहका धर्म ग्रहण गर्दछ । वास्तवमा ती धर्म उसका हुँदैनन् ॥ ९ ॥ चेतनस्वरूप पुरुषका सत्वादि गुणहरूले बनेको देह जन्म-मरणरूपी संसारको निम्ति जायमान ठानोस् ॥ १० ॥ अतः जिज्ञासापूर्वक आफ्नू अन्तःकरणमा स्थित ती अद्वितीय ईश्वरलाई जानेर अन्य पदार्थमा भएको सत्यत्व बुद्धि त्यागोस् ॥ ११ ॥ आचार्य तलका अरणि हुन र शिष्य माथिको । उपदेश माझको मन्थन-काष्ठ हो र सुखद ब्रह्मविद्या तिनको सन्धि ॥ १२ ॥ निपुण र विशुद्ध गुणबाट उत्पन्न मायालाई ध्वस्त पारिदिन्छ र संसारका कारणरूप गुणहरू नष्ट पारेर दाउरा रहित अग्नि झैं स्वयं पनि शान्त हुन्छ ॥ १३ ॥ हे उद्धव ! यदि तिमी कर्मका कर्ता र सुख-दुःखस्वरूप फलका भोक्ता यी जीवका अनेकत्व र स्वर्गादि लोक, काल-कर्म प्रतिपादित शास्त्र, आत्मा अर्थात् जीवका नित्यता मान्दछौ र समस्त

पदार्थको स्थिति प्रवाहरूपले नित्य र यथार्थ स्वीकार गर्दछौ अथवा यो ठान्दछौ कि घट-पटादि बाह्य आकृतिहरूका भेदले उसकै अनुसार बुद्धि उत्पन्न भएर सार्टिदै रहन्छ, तापनि हे प्रिय ! यो शरीर र संवत्सरादि कालको सम्बन्धले सबै देहधारीहरूको जन्म-मरणादि भाव सदैव भइरहने छ, यो सिद्ध हुन्छन् । कर्मका फल कर्ता र सुख दुःखका भोक्ता जीवको पराधीनता यहाँ पनि स्पष्ट देखिन्छ, अनि त्यस्तो *संशय-परवश जीवलाई के लाभ हुन्छ ? ॥ १४-१७ ॥ यदि यस्तो भनौं कि जो व्यक्ति कार्यकुशल छैनन्, तिनलाई नै कष्ट हुन्छ—यो पनि कुनै नियम छैन, किनकि कर्मठ विद्वान्लाई पनि सुखमात्र हुने र मूर्खलाई कष्ट हुँदै हुन्छ वा दुःख भोग्न पर्दैन । हामी कर्मकुशल हुनाले सुखी छौं—यो अहङ्कार पनि व्यर्थ छ । यद्यपि केही व्यक्ति सुखको प्राप्ति र दुःखको निवृत्तिको उपाय जान्दछन्, तापनि ती त्यो उपाय कदापि जान्दैनन्—जसले कहिल्यै मर्नु

तन्त्र्यं च लक्ष्यते ॥ भोक्तुश्च दुःखसुखयोः को न्वर्थो विवशं भजेत् ॥ १७ ॥ न देहिनां सुखं किञ्चिद्विद्यते विदुषामपि ॥ तथा च दुःखं मूढानां वृथाऽहङ्करणं परम् ॥ १८ ॥ यदि प्राप्तं विघातं च जानन्ति सुखदुःखयोः ॥ तेऽप्यद्धा न विदुर्योगं मृत्युर्न प्रभवेद्यथा ॥ १९ ॥ को न्वर्थः सुखय- त्येनं कामो वा मृत्युरन्तिके ॥ आघातं नीयमानस्य वध्यस्येव न तुष्टिदः ॥ २० ॥ श्रुतं च दृष्टवद् दुष्टं स्पर्धासूयाऽत्ययव्ययैः ॥ बह्वन्तरायकामत्वा- त्कृषिवच्चाऽपि निष्फलम् ॥ २१ ॥ अन्तरायैरविहतो यदि धर्मः स्वनुष्ठितः ॥ तेनापि निर्जितं स्थानं यथा गच्छति तच्छृणु ॥ २२ ॥ इष्ट्वेह देवता यज्ञैः स्वर्लोकं याति याज्ञिकः ॥ भुञ्जीत देववत्तत्र भोगान्दिव्यान्निजार्जितान् ॥ २३ ॥ स्वपुण्योपचिते शुभ्रे विमान उपगीयते ॥ गन्धर्वैर्विहर-

नपरोस् ॥१८॥१९॥ जस्तै वधस्थान( काट्ने ठाउँ ) जाँदा काटिने व्यक्तिलाई मिठाई, माला, चन्दनादि कुनै पनि भोग्य पदार्थ सुखी पार्न सक्तैनन्, त्यस्तै जसको मृत्यु नगीचै रहन्छ, उसलाई कुनै सुख-सामग्री र काम्य वस्तु कसरी प्रसन्न पार्न सक्छ ॥२०॥ लौकिक सुख जस्तै श्रुत अर्थात् स्वर्गादिका सुख पनि परस्परको स्पर्धा, असूया, नाश र क्षय आदि कारण दोषयुक्त नै रहन्छ । अनेक विघ्नले युक्त कामनाले गर्दा त्यो निष्फल हुन्छ ॥ २१ ॥ यदि कोही विघ्नले प्रभावित नभएर यज्ञादि धार्मिक कृत्यले सम्पन्न हुन्छ भने त्यसद्वारा प्राप्त हुने स्वर्गादि लोकमा जीव जसरी जान्छ, त्यो पनि सुन— ॥ २२ ॥ विविध यज्ञद्वारा देवताको यजन गरेर यजमान स्वर्गलोक जान्छ र त्यहाँ आफ्ना पुण्यकर्मको संचित दिव्य भोगहरू देवता झैं भोग्दछ ॥२३॥ आफ्ना पुण्यद्वारा प्राप्त शुभ्र विमानमा बसेर त्यो व्यक्ति मनोहर वेषधारी भई अनेक सुर-सुन्दरीका साथ विहार गर्दै

* दृष्टान्त ( रामखुदैया )—चौटा हिन्दू र चौटा मुसलमान भजन गर्दै भइरहेका थिए । संयोगले पाटमा डुङ्गा थिएन । अब डुङ्गैबिना विचार गर्नु लाग्नै के गर्नै ? निकै बेरसम्म विचार्दा पनि केही निधो गर्न सकेनन् । एकै छिनपछि हिन्दूले भन्यो—'जय रामचन्द्रजी ! म त यताबाट पारी तर्दछु' र त्यो यस्तो भन्दो बाटोबाट गयो कि देख्दादेख्दै पारी पुग्यो । अब मुसलमान सांहेब विचार्न लागे—म कसरी भनौं—रामलाई सम्झौं कि खुदा- लाई !' बस रामखुदैयामा परेर तिनको ध्यान अलमलियो, त्यसले गर्दा ती नदीको जलमा गएर डुबी मरे । तात्पर्य हो—जो व्यक्ति 'यो गरौं कि त्यो ?' यस अलमलमा पर्दछन्, तिनको यही दशा हुन्छ ।

छ र गन्धर्व उसको गुण गाउँछन् ॥ २४ ॥ उक्त बेला किङ्किणी समूहले सुशोभित र इच्छानुसार गमन गर्ने विमानमा बसेर त्यो प्राणी देवगणको विहारस्थल नन्दनादि उपवनमा अप्सराहरूसित विहार गर्दै एक दिन आफ्नू अवश्यम्भावी पतनलाई जान्दैन ॥ २५ ॥ जबसम्म त्यसको पुण्य शेष रहिरहन्छ, तबसम्म त्यो स्वर्गको सुखहरू भोग्दछ । तर पुण्य क्षीण हुनासाथ इच्छा नभए पनि त्यो कालको प्रेरणाले तुरुन्त तल झर्दछ ॥ २६ ॥ यदि कोई व्यक्ति कुनै अधम पुरुषको संगममा लागेर अधर्मरत, अजितेन्द्रिय, स्वेच्छाचारी, कृपण, लोभी, स्त्रैण र प्राणीहिंसक भएर विना विधिले पशु-वध गरेर भूत-प्रेतादिलाई बलि दिन्छ भने त्यो पाप अवश्य नरकमा पर्दछ र अन्त्यमा घोर अज्ञानान्धकारमा गएर गाडिन्छ ॥ २७ ॥ २८ ॥ दुःख नै जसका फल छ, त्यो मानव शरीरले, यस्ता कर्महरू गर्दै प्राणी तिनै कर्मद्वारा पुनः देह धारण गर्दछ । अतएव यसले मरणधर्मा जीवलाई के सुख वा शान्ति प्राप्त हुन सक्दछ ? ॥ २९ ॥ मनुष्य मात्रलाई होइन, लोक र कल्पजीवी लोकपालहरूलाई पनि मसित भय बनिरहन्छ । जसको आयुष्य दुइ परार्ध भन्दा पनि बढीको छ,

न्मध्ये देवीनां हृद्यवेषधृक् ॥ २४ ॥ स्त्रीभिः कामगयानेन किङ्किणीजालमालिना ॥ क्रीडन्न वेदात्मपातं सुराक्रीडेषु निर्वृतः ॥ २५ ॥ तावत्प्रमोदते स्वर्गे यावत्पुण्यं समाप्यते ॥ क्षीणपुण्यः पतत्यर्वागनिच्छन्कालचालितः ॥ २६ ॥ यद्यधर्मरतः सङ्गादसतां वाऽजितेन्द्रियः ॥ कामात्मा कृपणो लुब्धः स्त्रैणो भूतविहिंसकः ॥ २७ ॥ पशूनविधिनाऽऽलभ्य प्रेतभूतगणान्यजन् ॥ नरकानवशो जन्तुर्गत्वा यात्युल्बणं तमः ॥२८॥ कर्माणि दुःखोदर्काणि कुर्वन्देहेन तैः पुनः ॥ देहमाभजते तत्र किं सुखं मर्त्यधर्मिणः ॥ २९ ॥ लोकानां लोकपालानां मद्भयं कल्पजीविनाम् ॥ ब्रह्मणोऽपि भयं मत्तो द्विपरार्धपरायुषः ॥ ३० ॥ गुणाः सृजन्ति कर्माणि गुणोऽनुसृजते गुणान् ॥ जीवस्तु गुणसंयुक्तो भुङ्क्ते कर्मफलान्यसौ ॥ ३१ ॥ यावत्स्याद्गुणवैषम्यं तावन्नानात्वमात्मनः ॥ नानात्वमात्मनो यावत्पारतन्त्र्यं तदैव हि ॥ ३२ ॥ यावदस्यास्वतन्त्रत्वं तावदीश्वरतो भयम् ॥ य एतत्समुपासीरंस्ते मुह्यन्ति शुचार्पिताः ॥ ३३ ॥ काल आत्मागमो लोकः स्वभावो धर्म एव च ॥ इति मां बहुधा प्राहुर्गुणव्यतिकरे सति ॥ ३४ ॥ उद्धव उवाच ॥ गुणेषु वर्तमानोऽपि देहजेष्वनपावृतः ॥ गुणैर्न बध्यते देहि बध्यते वा कथं विभो ॥ ३५॥ कथं वर्तेत विहरेत्कैर्वा ज्ञायेत लक्षणैः ॥

ती ब्रह्मालाई पनि कालरूप मेरो भय बनिरहन्छ ॥ ३० ॥ गुण नै सबै कर्म गर्दछन् र सत्वादि गुण नै इन्द्रियहरूलाई कर्ममा प्रवृत्त पार्दछन् । प्राणी अज्ञानवश इन्द्रियहरूले युक्त अर्थात् तिनमा अहं बुद्धि गरेर उनले गरेका कर्मका फल भोग्दछ ॥ ३१ ॥ यसरी जब अहङ्कारादि रूपले विषमावस्था बनिरहन्छ, तबसम्म आत्माको नानात्व रहिरहन्छ तथा जबसम्म आत्माको अनेकता रहन्छ, तबसम्म पराधीनता रहिरहन्छ ॥ ३२ ॥ जबसम्म पराधीनता रहन्छ, तबसम्म ईश्वरसित भय रहिरहन्छ । अतः जो यस कर्मकलापका उपासक छन्, ती त्यसतै शोकाकुल हुँदै मोहमा प्राप्त हुन्छन् ॥ ३३ ॥ हे उद्धव ! गुणको वैषम्य भएपछि काल, जीव, वेद, लोक, स्वभाव र धर्म कर्म आदि अनेक नामद्वारा मेरो नै निरूपण गरिएको छ ॥ ३४ ॥ उद्धव भन्दछन्–हे विभो ! देहका कर्म र उसका फलादि गुणमा रहेर पनि यो देहधारी जीव कसरी उनको बन्धनमा नपर्ला ? यदि आकाश सदृश अनावृत हुनाले गर्दा गुणसित उसको कुनै सम्बन्ध रहन्न भने त्यसमा किन बाँधिन्छ ? ॥ ३५ ॥ यसरी गुणहरूले मुक्त पुरुष कसरी रहन सक्दछ, त्यो कसरी विहार गर्दछ, कुन लक्षणले

1299

चिनिन्छ ? त्यो के खान्छ र के त्याग्दछ ? कसरी सुत्ने-बस्ने र हिँड्ने गर्दछ ॥३६॥ हे अच्युत ! हे प्रश्नको यथार्थ उत्तर दिने श्रेष्ठ ! हजुर मेरा यो प्रश्नहरूको उत्तर दिनुस् यौटै आत्मा नित्यबद्ध तथा नित्यमुक्त कसरी रहन्छ ? मेरो यो शङ्का निवारण गरिदिनोस् ॥३७॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे नेपाली भाषाटीकायां दशमोऽध्यायः ॥१०॥

श्रीभगवान् भन्नुहुन्छ—ममा बद्ध र मुक्त नामको कथन सत्त्व-रजादि गुणको संसर्गले हुन्छ, यथार्थमा होइन। गुणको जड़ माया हो। अतः ममा मोक्ष अथवा बन्धन केही पनि छैन ॥ १ ॥ शोक-मोह, सुख-दुःख र शरीरको नाश यी मायाले हुन्छन्। जस्तै—स्वप्न बुद्धेको अवस्था हो, त्यसै गरी संसार पनि वास्तविक छैन ॥ २ ॥ हे उद्धव ! विद्या र अविद्या मेरा शक्ति जान। यिनै दुइ जीवको मोक्ष र बन्धन पार्ने हुन्। यी दुवै अनादि छन् र मेरी मायाद्वारा रचित छन् ॥ ३ ॥ हे महाबुद्धिमान उद्धव ! म यौटा नै छु। र जीव मेरो प्रतिबिम्बरूप अंश हो। आविद्याजनित अनादि बन्धन तथा विद्या जनित मोक्ष जीवकै लागि हुन् ॥ ४ ॥ अब म तिमीलाई बद्ध र मोक्षको विशेषता भन्दछु। सुन–

किं भुञ्जीतोत विसृजेच्छयीतासीत याति वा ॥ ३६ ॥ एतदच्युत मे ब्रूहि प्रश्नं प्रश्नविदां वर ॥ नित्यबद्धो नित्यमुक्त एक एवेति मे भ्रमः ॥३७॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे भगवदुद्धवसंवादे दशमोऽध्यायः ॥ १० ॥

श्रीभगवानुवाच ॥ बद्धो मुक्त इति व्याख्या गुणतो मे न वस्तुतः ॥ गुणस्य मायामूलत्वान्न मे मोक्षो न बन्धनम्॥१॥शोकमोहौ सुखं दुःखंदेहोत्पत्तिश्च मायया ॥ स्वप्नो यथात्मनः ख्यातिःसंसृतिर्न तु वास्तवी ॥२॥ विद्याविद्ये मम तनू विद्ध्युद्धव शरीरिणाम् ॥ मोक्षबन्धकरी आद्ये मायया मे विनिर्मिते॥३॥ एकस्यैव ममांशस्य जीवस्यैव महामते ॥ बन्धोऽस्या विद्ययाऽनादिर्विद्यया च तथेतरः ॥४॥ अथबद्धस्य मुक्तस्य वैलक्षण्यं वदामिते ॥ विरुद्धधर्मिणोस्तात स्थितयोरेकधर्मिणि ॥५॥ सुपर्णावेतौ सदृशौ सखायौ यदृच्छयैतौ कृतनीडौ च वृक्षे ॥ एकस्तयोः खादति पिप्पलान्नमन्यो निरन्नोऽपि बलेन भूयान् ॥६॥ आत्मानमन्यं च स वेद विद्वानपिप्पलादो न तु पिप्पलादः ॥ योऽविद्यया युक् स तु नित्यबद्धो विद्यामयो यः स तु नित्यमुक्तः ॥७॥ देहस्थोऽपि न देहस्थो विद्वान्स्वप्नाद्यथोत्थितः ॥ अदेहस्थोऽपि देहस्थः कुमतिः स्वप्नदृग्यथा ॥ ८ ॥ इंद्रियैरिन्द्रियार्थेषु गुणैरपि गुणेषु च गृह्यमाणेष्वहं कुर्यान्नविद्वान्यस्त्ववि

यद्यपि बद्ध ( जीव ) र मुक्त ( ईश्वर ) दुवै समानरूपले शरीरमा नियन्तारूपमा छन्, तर इनको दशा परस्पर भिन्न छ ॥ ५ ॥ यी दुवै वृक्षबाट पत्र झैं शरीरबाट पृथक् छन् र चेतनरूप हुनाले समान र वियोग नहुनाले मित्ररूप छन्। यी दुवैले अनिर्वचनीय मायाले गर्दा वृक्षरूपी देहमा निवासस्थान तुल्याएका छन्, तर उसमा भेद यो छ कि इनमा यौटा अर्थात् ( बद्ध ) विषयहरू माग्दछ र अर्को अर्थात् ( मुक्त ) विषय भोगबाट रहित रहेर ज्ञान शक्ति द्वारा बरों बलवान् छ ॥ ६ ॥ विषय भोग त्यागी आफूलाई र अर्को ( विषय भोगी ) लाई पनि जान्दछ र विषय भोगी न आफूलाई न अर्कोलाई ( विषय-भोग त्यागी ) लाई नै जान्दछ। अतः यिनमा जो अविद्यायुक्त छ, त्यो नित्य आबद्ध छ, अरु जो विद्यायुक्त छ, त्यो नित्य मुक्त छ ॥ ७ ॥ देहमा स्थित भएर पनि विद्वान् देहसम्बन्धी भोग त्याग्नाले देहमा उसै गरी रहन्नन्, जसरी स्वप्नबाट उठेको व्यक्ति स्वप्नसम्बन्धी देहमा स्थित रहन्न र देहमा स्थित नरहे पनि अज्ञानी स्वप्न देख्ने झैं स्थित रहन्छ ॥ ८ ॥ जो निर्विकार अर्थात्विकार रहित विद्वान छ, त्यो इन्द्रियद्वारा

विषय-ग्रहण भए पनि आफूलाई ग्रहण गर्ने ठान्दैन, किनकि उसलाई यो ज्ञात छ कि इन्द्रियसम्बन्धी गुणद्वारा विषयसम्बन्धी गुणको ग्रहण भइरहेछ ॥९॥ यो देह दैवाधीन छ केवल कर्मेन्द्रियद्वारा कर्म गरिन्छ, तर यस शरीरमा विद्यमान अज्ञानी जीव आफूलाई कर्ता मानेर बाँधिन्छ ॥१०॥ यसरी सुत्नु, बस्नू हिँड्नू, स्नान गर्नु, देख्नु, छुनु, सुँघ्नू, भोजन गर्नु र सुन्नू इत्यादि कर्मबाट विरक्त विद्वान् अज्ञानी झैं बन्धनमा बाँधिँदैन, किनकि त्यो त विषयहरूको भोक्ता इन्द्रियलाई मान्दछ । त्यो त सर्वव्यापी आकाश, सर्वत्र चल्ने वायु र अनेक स्थानमा प्रतिबिम्बित हुने सूर्य झैं शरीरमा स्थित रहेर पनि त्यसका कार्यहरूमा आसक्त हुँदैन ॥११॥१२॥ जब ज्ञानदृष्टि वैराग्यले दीप्त हुन्छ र त्यसै द्वारा सबै संशय निवारण हुन्छ तब स्वप्नबाट जागेको समान द्वैत-भ्रम हराउँछ ॥१३॥ जसका प्राण, इन्द्रिय, मन र बुद्धिका वृत्तिहरू संकल्परहित हुन्छन्, त्यो प्राणी शरीरमा स्थित भएर पनि गुणहरूले मुक्त रहन्छ ॥१४॥ संयोगवश त्यसको देहलाई कुनै दुष्ट क्लेश पुऱ्याओस् या कोही सज्जन पूजा गरोस् ज्ञानी दुवै अवस्थामा एकनास रहन्छ ॥१५॥ जो भलो गर्नेको प्रशंसा गर्दैन र दुःख दिनेको निन्दा

क्रियः ॥९॥ दैवाधीने शरीरेऽस्मिन्गुणभाव्येन कर्मणा ॥ वर्तमानोऽबुधस्तत्र कर्ताऽस्मीति निबद्ध्यते ॥१०॥ एवं विरक्तः शयन आसनाटनमज्जने ॥ दर्शनस्पर्शनघ्राणभोजनश्रवणादिषु ॥ ११ ॥ न तथा बद्ध्यते विद्वाँस्तत्र तत्रादयन्गुणान् ॥ प्रकृतिस्थोऽप्यसंसक्तो यथा खं सविताऽनिल ॥ १२ ॥ वैशारद्येक्षयाऽसङ्गशितया छिन्नसंशयः ॥ प्रतिबुद्ध इव स्वप्नान्नानात्वाद्विनिवर्तते ॥ १३ ॥ यस्य स्युर्वीतसंकल्पाः प्राणेन्द्रियमनोधियाम् ॥ वृत्तयः स विनिर्मुक्तो देहस्थोऽपि हि तद्गुणैः ॥१४॥ यस्यात्मा हिंस्यते हिंस्रैर्येन किञ्चिद्यदृच्छया ॥ अर्च्यते वा क्वचित्तत्र न व्यतिक्रियते बुधः ॥ १५ ॥ न स्तुवीत न निन्देत कुर्वतः साध्वसाधु वा ॥ वदतो गुणदोषाभ्यां वर्जितः समदृङ्मुनिः ॥ १६ ॥ न कुर्यान्न वदेत्किंचिन्न ध्यायेत्साध्वसाधु वा ॥ आत्मारामोऽनया वृत्त्या विचरेज्जडवन्मुनिः ॥ १७ ॥ शब्दब्रह्मणि निष्णातो न निष्णायात्परे यदि ॥ श्रमस्तस्य श्रमफलो ह्यधेनुमिव रक्षतः ॥ १८ ॥ गां दुग्धदोहामसतीं च भार्यां देहं पराधीनमसत्प्रजां च ॥ वित्तं त्वतीर्थीकृतमङ्ग वाचं हीनां मया रक्षति दुःखदुःखी ॥१९॥ यस्यां न मे पावनमंग कर्म स्थित्युद्भवप्राणनिरोधमस्य ॥ लीलावतारेप्सितजन्म वा स्याद्वन्ध्यां गिरं तां बिभृयान्न धीरः ॥ २० ॥ एवं जिज्ञासयाऽपोह्य नानात्वभ्रममात्मनि ॥

गर्दैन, जसमा उदारता इत्यादि गुण र कृपणता आदि अवगुण हुँदैनन्, त्यही समदर्शी ज्ञानी कहिन्छ ॥१६॥ ज्ञानी न केही गरोस् न केही बोलोस्, न राम्रोको खुसी, न नजातिको चिन्ता ! यसरी आत्मानुभवमा मग्न रहेर जड झैं डुलोस् ॥१७॥ जसले शास्त्र पढेर ब्रह्मलाई साक्षात्कार गर्ने बाटो राम्ररी जानिसकेको छ, तर त्यस बाटोद्वारा ब्रह्मको साक्षात्कार गरेको छैन, त्यसले पढेको श्रम, उसै गरी निष्फल छ, वन्ध्यपणी ( बाँझी ) गाईको सेवा गर्ने श्रम ॥ १८ ॥ हे उद्धव ! जसको दुध दिने समय बितिसकेको छ, त्यस गाईको, कुलटा पत्नीको पराधीन देहको, दुष्ट सन्तानको, उचित दानरहित धनको र मेरा गुणानुवादहीन वाणीको जो रक्षा गर्दछ, उसलाई दुःखमाथि दुःख थपिँदै रहन्छ ॥ १९ ॥ हे उद्धव ! वाणीमा संसारको पालन र संहारमा कथायुक्त तथा सबैलाई पवित्र पार्ने मेरा कर्म वा अवतार । जन्मको वर्णन नहोस्, त्यो वाणी निरर्थक छ । यस्तो वाणी विद्वान्ले बोल्नु

१३०२

हुँदैन ॥ २० ॥ यसरी विचारपूर्वक आत्मामा द्वैतभावरूपी भ्रम छाडेर म सर्वव्यापीमा आफ्नु निर्मल मन लगाई कर्म छाडिदिनु ॥ २१ ॥ यदि मनलाई स्थिर पारेर ब्रह्मलाई धारण गर्नमा समर्थ नभए फलाभिलाषा छाडी सबै कर्म मलाई अर्पण गर्दै रहू ॥ २२ ॥ मेरा कथाहरू कल्याणप्रद र सर्दैव संसारलाई पवित्र पार्ने छन्। श्रद्धापूर्वक तिनलाई सुन्दै, गाउँदै, स्मरण गर्दै र उसैको अनुकूल बार-बार लीला गर्दै निरपेक्ष बनिरहू ॥ २३ ॥ हे उद्धव ! मेरो निमित्त धर्म, काम र अर्थसाधक कर्म गर्नेलाई मेरो आश्रयस्वरूप म सनातन परमेश्वरको निश्चयात्मिका भक्ति प्राप्त हुन्छ ॥ २४ ॥ जब सत्संगले मेरो त्यो भक्ति मिल्दछ, तब प्राणी मेरो उपासना बराबर गर्दछ र साधुद्वारा निश्चित मेरो स्वरूपलाई

उपारमेत विरजं मनो मय्यर्प्य सर्वगे ॥ २१ ॥ यद्यनीशो धारयितुं मनो ब्रह्मणि निश्चलम् ॥ मयि सर्वाणि कर्माणि निरपेक्षः समाचर ॥ २२ ॥ श्रद्धालुर्मे कथाः शृण्वन्सुभद्रा लोकपावनीः ॥ गायन्ननुस्मरन्कर्म जन्म चाभिनयन्मुहुः ॥ २३ ॥ मदर्थे धर्मकामार्थानाचरन्मदपाश्रयः ॥ लभते निश्चलां भक्तिं मय्युद्धव सनातने ॥ २४ ॥ सत्सङ्गलब्धया भक्त्या मयि मां स उपासिता ॥ स वै मे दर्शितं सद्भिरञ्जसा विन्दते पदम् ॥ २५ ॥ उद्धव उवाच ॥ साधुस्तवोत्तमश्लोक मतः कीदृग्विधः प्रभो ॥ भक्तिस्त्वय्युपयुज्येत कीदृशी सद्भिरादृता ॥ २६ ॥ एतन्मे पुरुषाध्यक्ष लोकाध्यक्ष जगत्प्रभो ॥ प्रणतायानुरक्ताय प्रपन्नाय च कथ्यताम् ॥ २७ ॥ त्वं ब्रह्म परमं व्योम पुरुषः प्रकृतेः परः ॥ अवतीर्णोऽसि भगवन्स्वेच्छोपात्तपृथ[illegible][illegible] ॥ २८ ॥ श्रीभगवानुवाच ॥ कृपालुरकृतद्रोहस्तितिक्षुः सर्वदेहिनाम् ॥ सत्यसारोऽनवद्यात्मा समः सर्वोपकारकः ॥ २९ ॥ कामैरहतधीर्दान्तो

सहजै प्राप्त गर्दछ ॥ २५ ॥ उद्धवले सोधे–हे उत्तमश्लोक ! हे स्वामिन् ! हजुर कस्ता साधुलाई आदरको दृष्टिले हेर्नुहुन्छ ? त्यो कस्तो भक्ति हो जो हजुरलाई पाउन उपयोगी हुन्छ र जसलाई साधुजन राम्रो मान्दछन् ॥२६॥ हे पुरुषाध्यक्ष ! हे लोकाध्यक्ष ! हे जगत्पते ! म प्रणामपूर्वक हजुरको शरणमा छु, मलाई उपर्युक्त कुरा राम्ररी बुझाउनोस् ॥ २७ ॥ यी कुराहरू बुझाउने योग्यता हजुरमै छ, किनकि हजुर आकाश झैं संगरहित र प्रकृतिभन्दा भिन्न परब्रह्म परमात्मा हुनुहुन्छ। हे भगवन् ! हजुरले आफ्नु इच्छाले पृथक् देह ग्रहण गर्नु भएको छ ॥२८॥ भगवान् भन्नुहुन्छ–जो व्यक्ति कृपालु, द्रोह नगर्ने, सत्ययुक्त, ईर्ष्यादि दोषरहित, समदर्शी, सबैको उपकार गर्ने, कामविकाररहित र *सहनशील, बाहिरी इन्द्रिय-

---

* दृष्टान्त ( सहनशीलता )–बुद्ध भगवान्‌को पूर्वजन्मको कुरा हो। उनलाई यौटा जंगली राँगोको शरीर प्राप्त भएको थियो। त्यस बेला पनि उनमा अनेक अलौकिक गुण थिए। एकपल्ट ती जङ्गलमा चरिरहेका थिए। उनको सोझोपनको लाभ उठाएर यौटा बानर सधैँ उनको पिठिउँमा चढ्ने गर्दथ्यो। कहिले त्यो सीङमा चढेर उनको आँखामा औंला कोच्याउँथ्यो र अनेक दुःख दिन्थ्यो। तर भगवान् बुद्ध चरिरहन्थे। त्यसै बेला देवताहरू आएर क्रोधित भने–'हे शान्ति-मूर्ति ! यस बानरलाई उचित दण्ड दिनुपर्दछ। के यो बानरले तिमीलाई चिनिसकेको छ ? कि लोभित हराईको ? तिमीले एक सीङ हिर्काए दिए भने यसको सातो जान्छ, तैपनि अपमान सहिरहेका छौ। यसको कारण के हो ? क्षमा र शान्ति द्वारा कुनै दुष्ट व्यक्ति सफल देखेका छौ ?' यति सुनेर आफ्नु निश्चयमा दृढ रही बुद्ध भगवान्‌ले भने–'हे देवता हो ! म यस बानरको सबै दोष जान्दछु र क्षमा यसलाई समाप्त पार्ने शक्ति पनि छ, तापनि म यसको अन्याय सहिरहेको छु। आफूभन्दा बलियो व्यक्तिको अपराध सहनु स्वाभाविक हो, तर निर्बलको अपराध सहनु नै उत्तम सहनशीलता हो। परमात्माले तपाईंलाई शक्ति दिएको छ भन्दैमा त्यो शक्तिले अरूलाई त्रास दिनुहुन्छ ? यौटा आफ्नै बानर भक्ति शान्तिको शिक्षा पाउने छ।' तिनका कुरा सुनेर श्वक भई देवता आशीर्वाद गरिए।

लाई संयममा राख्ने, कोमलचित्त, सदाचारी, परिग्रहहीन, उद्योगहीन, प्राप्त अन्नले तृप्त, शान्तचित्त, आफ्नू धर्ममा अचल, उत्तम विचारशील, सदैव सावधान, निर्विकार, दीनताशून्य तथा भोक, प्यास, शोक, मोह, वृद्धता र मृत्युलाई केही जस्तो नठान्ने, प्रतिष्ठाको अनभिलाषी, अरुलाई उचित कुरा बुझाउन समर्थ, धूर्ततारहित, करुणाशील, सत्यज्ञानी र वेदरूपिणी मेरो आज्ञाले सूचित आफ्नू धर्म गर्नमा गुण र नगर्नमा लाग्ने दोष जान्दछ, तर मेरो ध्यानको प्रति बन्धक हुनाले तथा यस विचारले कि मेरो भक्तिले नै समस्त कार्य पूर्ण हुन्छन्, ती सबैलाई छाडेर मेरो भक्ति गर्दछ, त्यो श्रेष्ठ साधु हुन्छ ॥ २९ ॥ ३२ ॥ मेरो जति र जस्तो रूप छ, जो म हुँ, त्यो ज्ञात होस् वा नहोस्, किन्तु अर्कोतिर चित्त नलागेर जो मेरो भक्ति गर्दछन्, तिनलाई म आफ्नू श्रेष्ठ भक्त मान्दछु ॥ ३३ ॥ हे उद्धव ! मेरो मूर्ति र मेरा भक्तजनको दर्शन, स्पर्श, पूजन, सेवन, स्तवन, प्रणाम, गुण-कर्मको कीर्तन, मेरो कथा सुन्नमा श्रद्धा, मेरो ध्यान, जे जति पाइन्छ त्यो मेरै निम्ति अर्पण गर्दै आफूलाई दासरूपले ममा अर्पण गर्नु ॥३४॥३५॥

मृदुः शुचिरकिञ्चनः ॥ अनीहो मितभुक् शान्तः स्थिरो मच्छरणो मुनिः ॥ ३० ॥ अप्रमत्तो गभीरात्मा धृतिमाञ्जितषड्गुणः ॥ अमानी मानदः कल्पो मैत्रः कारुणिकः कविः ॥ ३१ ॥ आज्ञायैवं गुणान्दोषान्मयाऽऽदिष्टानपि स्वकान् ॥ धर्मान्सन्त्यज्य यः सर्वान्मां भजेत स सत्तमः ॥ ३२ ॥ ज्ञात्वाऽज्ञात्वाऽथ ये वै मां यावान्यश्चास्मि यादृशः ॥ भजन्त्यनन्यभावेन ते मे भक्ततमा मताः ॥ ३३ ॥ मल्लिङ्गमद्भक्तजनदर्शनस्पर्शनार्चनम् ॥ परिचर्या स्तुतिः प्रह्वगुणकर्मानुकीर्तनम् ॥ ३४ ॥ मत्कथाश्रवणे श्रद्धा मदनुध्यानमुद्धव ॥ सर्वलाभोपहरणं दास्येनात्मनिवेदनम् ॥ ३५ ॥ मज्जन्मकर्मकथनं मम पर्वानुमोदनम् ॥ गीतताण्डववादित्रगोष्ठीभिर्मद्गृहोत्सवः ॥ ३६ ॥ यात्राबलिविधानं च सर्ववार्षिकपर्वसु ॥ वैदिकी तान्त्रिकी दीक्षा मदीयव्रतधारणम् ॥ ३७ ॥ ममार्चास्थापने श्रद्धा स्वतः संहत्य चोद्यमः ॥ उद्यानोपवनाक्रीडपुरमन्दिरकर्मणि ॥ ३८ ॥ संमार्जनोपलेपाभ्यां सेकमण्डलवर्तनैः ॥ गृहशुश्रूषणं मह्यं दासवद्यदमायया ॥ ३९ ॥ अमानित्वमदम्भित्वं कृतस्य परिकीर्तनम् ॥ अपि दीपावलोकं मे नोपयुञ्ज्यान्निवेदितम् ॥ ४० ॥ यद्यदिष्टतमं लोके यच्चातिप्रियमात्मनः ॥ तत्तन्निवेदयेन्मह्यं तदानन्त्याय कल्पते ॥ ४१ ॥ सूर्योऽग्निर्ब्राह्मणो गावो वैष्णवः खं मरुज्जलम् ॥ भूरात्मा सर्वभूतानि भद्र पूजापदानि मे ॥ ४२ ॥ सूर्ये तु विद्यया त्रय्या हविषाऽग्नौ यजेत माम् ॥ आतिथ्येन तु विप्राग्र्ये गोष्वङ्ग

मेरो जन्म–कर्मको वर्णन, मेरा पर्वहरूको समर्थन गर्नु, मेरो मन्दिरमा नृत्य, गान र समाज द्वारा उत्सव ॥ ३६ ॥ वर्ष दिनका सबै पर्वमा मेरो स्थानमा जानु, पूजा गर्नु, वैदिकी तथा तान्त्रिकी दीक्षा लिनु, मेरा व्रतको पालन गर्नु ॥ ३७ ॥ मेरा मूर्ति स्थापनमा श्रद्धा तथा शक्ति भए एक्लै अथवा मिलेर मेरो निम्ति पुष्पवाटिका, फलको बगैंचा, क्रीडास्थान, नगर र मन्दिर बनाउने उद्योग ॥ ३८ ॥ निष्कपट भावले मेरो मन्दिरमा कुचो लाउनु, लिप्नु, जल छर्कनु र सर्वतोभद्र आदि मण्डल बनाएर दास झैं सबै मेरो चाकरी गर्नु ॥ ३९ ॥ गर्वहीनता, दम्भत्याग, गरिएका सत्कर्म नभन्नु र मेरो निम्ति अर्पित वत्तीको प्रकाशले आफ्नू काम नगर्नु ॥४०॥ संसारमा जे जे वस्तु आफूलाई वडो इष्ट र प्रिय छ, त्यो मेरै निम्ति अर्पण गरोस् । यस्तो गर्नाले त्यो अनन्त गुना भएर उसलाई प्राप्त हुन्छ ॥ ४१ ॥ हे उद्धव ! अग्नि, ब्राह्मण, गाई, विष्णुभक्त, आकाश, जल, वायु, पृथिवी, आत्मा,

1303

र प्राणी मेरो पूजाका स्थान हुन् ॥४२॥ हे उद्धव ! वैदिक मन्त्रले स्तुति गरेर सूर्यमा, हव्यद्वारा अग्निमा, आतिथ्यले श्रेष्ठ ब्राह्मणमा, हरियो घाँस आदिले गाईमा, भाई झैं स्वागत गरेर विष्णु भक्तमा, ध्यानमा मग्न भएर हृदयरूपी आकाशमा, जल प्रधान कुरा इत्यादि बनाएर जलमा, रहस्य-मन्त्रले न्यास गरेर भूमिमा, योगद्वारा आफ्नू देहस्थित आत्मामा र समदर्शी भएर मेरो अन्तर्यामी रूपको सबै प्राणीमा पूजा गरोस् ॥ ४३ ॥ ४५ ॥ यी सबै ध्यानमा सावधानीले शङ्ख, चक्र, गदा र पद्म ( कमल ) ले शोभित मेरो चतुर्भुजरूपको ध्यान गर्दै पूजा गरोस् ॥ ४६ ॥ यसरी जुन यज्ञ र कूपनिर्माण आदि द्वारा सावधानीले मेरो पूजा गर्दछ, त्यो मेरो उत्तम भक्ति पाउँछ । साधुको सेवा यस्तो भक्ति प्राप्त गर्ने योटा

यवसादिना॥४३॥ वैष्णवे बन्धुसत्कृत्या हृदि खे ध्यानिष्ठया ॥ वायौ मुख्यधिया तोये द्रव्यैस्तोयपुरस्कृतैः ॥४४॥ स्थण्डिले मन्त्रहृदयैर्भोगैरात्मानमात्मनि॥क्षेत्रज्ञं सर्वभूतेषु समत्वेन यजेत माम् ॥४५॥धिष्ण्येष्वेष्विति मद्रूपं शङ्खचक्रगदाम्बुजैः ॥ युक्तं चतुर्भुजं शान्तं ध्यायन्नर्चेत्समाहितः॥४६॥ इष्टापूर्तेन मामेवं यो यजेत समाहितः ॥ लभते मयि सद्भक्तिं मत्स्मृतिः साधुसेवया॥४७॥प्रायेण भक्तियोगेन सत्संगेन विनोद्धव ॥ नोपायो विद्यते सध्र्यक् प्रायणं हि सतामहम् ॥४८॥ अथैतत्परमं गुह्यं शृण्वतो यदुनन्दन ॥ सुगोप्यमपि वक्ष्यामि त्वं मे भृत्यः सुहृत् सखा ॥४९॥ इत्येकादशोऽध्यायः ॥११॥

श्रीभगवानुवाच ॥ न रोधयति मां योगो न सांख्यं धर्म एव च ॥ न स्वाध्यायस्तपस्त्यागो नेष्टापूर्तं न दक्षिणा ॥ १ ॥ व्रतानि यज्ञश्छन्दांसि तीर्थानि नियमा यमः ॥ यथाऽवरुन्धे सत्सङ्गः सर्वसङ्गापहो हि माम् ॥ २ ॥ सत्संगेन हि दैतेया यातुधाना मृगाः

निष्कपट बाटो हो ॥ ४७ ॥ हे उद्धव ! सत्संगले प्राप्त भक्तियोग बाहेक मलाई पाउने अन्य कुनै सजिलो उपाय छैन, किनकि त्यो विचित्र दृष्टि* हुने साधुहरूको मुख्य आश्रय म नै हुँ ॥ ४८ ॥ अथवा हे यदुनन्दन ( उद्धव ) ! तिमी मेरा सेवक, प्रेमी र सखा हौ तथा मेरो कुरा ध्यानले सुनिरहेका छौ, यसैले म अत्यन्त गोपनीय मार्ग पनि तिमीसित भन्दछु । त्यो मार्ग अत्यन्त गुप्त छ ॥ ४९ ॥ इति श्रीमद्भागवते महापुराणे पं० गौरीशङ्करकृत 'वासिष्ठी' भाषाटीकायामेकादशोऽध्यायः ॥ ११ ॥

भगवान् भन्नुहुन्छ—सबै थरिका आसक्ति छुटाउने सत्सङ्ग जसरी मलाई वशमा पार्दछ, त्यसै गरी योग, सांख्य, धर्म, स्वाध्याय, तप, दान, यज्ञ, कूपादि निर्माण, दक्षिणा,

---

* दृष्टान्त (विचित्र दृष्टि)—भारतवर्षमा मानिस पन्ध्रवर्ष अध्ययन गरेपछि ग्रेजुएट हुन्छन्, इङ्गलैण्डमा पाँच वर्ष नै अध्ययन गरेर यो उपाधि प्राप्त हुन्छ । इङ्गलैण्डका सुप्रसिद्ध दार्शनिक विद्वानलाई बाइरन जुन बेला किशोर वयका थिए र आफ्नू अध्ययन समाप्त गरेर ग्रेजुएट हुने कोशिसमा थिए, त्यसै बेला उनको र उनका सहपाठीहरूको साधारण परीक्षा लिइयो । परीक्षकले दीक्षित र तिनका समकक्ष छात्रहरूसित यो प्रश्न गरे—'ईसामसीहले पानीलाई रातो रक्सी कसरी बनाइदिए ?' यो र तिनका समकक्ष समस्त विद्यार्थी एक घण्टामा लिखित उत्तर प्रदान सक्न् भन्ने व्यवस्था दिइयो । लार्ड बाइरनका सबै सहपाठी एकाग्र मनले उत्तर लेख्न थाले र छिटो-छिटो कागजको पृष्ठ भर्नलागे । तर लार्ड बाइरन आफ्नू कापी सरहन्ने गर्दैर मौन बसिरहे । तिनको यो निश्चेष्टता देखेर तिनका मित्रले उनीसित उत्तर लेख्ने अनुरोध गरे, तर तिनले मित्रका कुराको वास्तै गरेनन् । अन्त्यमा निर्धारित समय समाप्त हुने घडी बज्नलाग्यो । त्यतीको पहिलो चोट पर्दासाथ बाइरनले कलम उठाए र कापीमा केवल यति लेखिदिए—The water saw her master and she blushed —अर्थात पानी आफ्ना रचयितालाई देखेर लाजले रातो रक्सी भयो ।' समय पूर्ण भएपछि उत्तर संग्रह गर्ने पदाधिकारीले सबैभन्दा पहिले लार्ड बाइरनकै कापी उठाए । सबलाई विचार थियो—यो निश्चेष्ट बसिरहनाले केही पनि लेख्न सकेका होइनन्, तर कापी उठाएपछि उसले जब लार्ड बाइरन महोदयको पूर्णोक्त प्रतिका पूर्ण उत्तर देखेर बालक दार्शनिकको भविष्य उज्ज्वल ठानेर तो दङ्ग भरे ।

व्रत, वेद, मन्त्र, तीर्थ, यम-नियमादि वशमा पार्न सक्तिनन् ॥ १ ॥ २ ॥ हे निष्पाप ! रजःप्रधान प्रकृतिका दैत्य, राक्षस, पक्षी, मृग, गन्धर्व, अप्सरा, नाग, सिद्ध, चारण, गुह्यक, विद्याधर तथा मनुष्यमा वैश्य, शूद्र, नारी र चाण्डाल ती युगमा मसा प्राप्त भइसकेका छन् । वृत्रासुर, प्रह्लाद, वृषपर्वा, बलि, बाणासुर, मय, विभीषण, सुग्रीव, हनुमान, जाम्बवान, गजेन्द्र, जटायु, तुलाधर वैश्य, धर्मव्याध, कुब्जा, व्रजका गोपिनी, यज्ञ गर्ने मुनिहरूका पत्नी इत्यादि र अनेक अरु पनि उनैमा गनिन सक्छन् ॥३-६॥ ती सबैले न वेद पढेका थिए, न महात्माहरूको उपासना गरेका थिए, न कुनै तपस्या गरेका थिए, तर सत्सङ्गले नै ममा प्राप्त भएका थिए ॥७॥ गोपिनी, गाई, वृक्ष अर्थात् यमलार्जुन, मृग र अरु पनि मूढ कालिय नागादि अनेक जीव केवल प्रेमले कृतार्थ भएर मलाई सहजै प्राप्त गरिसकेका छन् ॥८॥ मलाई पाउनु अन्य युक्तिले उति सजिलो छैन, किनकि मेरो स्वरूपलाई योग, सांख्य, दान, व्रत, तप, यज्ञ, व्याख्यान, वेदपाठ र संन्यासद्वारा यत्न गरेर पनि प्राप्त गर्न सक्तैन ॥ ९ ॥ जब आफूले मलाई र बलरामलाई मथुरा लगे, तब ममा अनुरक्त गोपिनीलाई मेरो

खगाः ॥ गन्धर्वाप्सरसो नागाः सिद्धाश्चारणगुह्यकाः ॥ ३ ॥ विद्याधरा मनुष्येषु वैश्याः शूद्राः स्त्रियोऽन्त्यजाः ॥ रजस्तमः प्रकृतयस्तस्मिंस्तस्मिन्युगेऽनघ ॥ ४ ॥ बहवो मत्पदं प्राप्तास्त्वाष्ट्रकायाधवादयः ॥ वृषपर्वा बलिर्बाणो मयश्चाथ विभीषणः ॥ ५ ॥ सुग्रीवो हनुमानृक्षो गजो गृध्रो वणिक्पथः ॥ व्याधः कुब्जा व्रजे गोप्यो यज्ञपत्न्यस्तथापरे ॥ ६ ॥ ते नाधीतश्रुतिगणा नोपासितमहत्तमाः ॥ अव्रतातप्ततपसः सत्सङ्गान्मामुपागताः ॥ ७ ॥ केवलेन हि भावेन गोप्यो गावो नगा मृगाः ॥ येऽन्ये मूढधियो नागाः सिद्धा मामीयुरञ्जसा ॥ ८ ॥ यं न योगेन सांख्येन दानव्रततपोऽध्वरैः ॥ व्याख्यास्वाध्यायसंन्यासैः प्राप्नुयाद्यत्नवानपि ॥ ९ ॥ रामेण सार्धं मथुरां प्रणीते श्वाफल्किना मय्यनुरक्तचित्ताः ॥ विगाढभावेन न मे वियोगतीव्राधयोऽन्यं ददृशुः सुखाय ॥ १० ॥ तास्ताः क्षपाः प्रेष्ठतमेन नीता मयैव वृन्दावनगोचरेण ॥ क्षणार्धवत्ताः पुनरङ्ग तासां हीना मया कल्पसमा बभूवुः ॥ ११ ॥ ता नाविदन्मय्यनुषङ्गबद्धधियः स्वमात्मानमदस्तथेदम् ॥ यथा समाधौ मुनयोऽब्धितोये नद्यः प्रविष्टा इव नामरूपे ॥ १२ ॥ मत्कामा रमणं जारमस्वरूपविदोऽबलाः ॥ ब्रह्म मां परमं प्रापुः सङ्गाच्छतसहस्रशः ॥ १३ ॥ तस्मात्त्वमुद्धवोत्सृज्य चोदनां प्रतिचोदनाम् ॥ प्रवृत्तं च निवृत्तं च श्रोतव्यं श्रुतमेव च ॥ १४ ॥ मामेकमेव शरणमात्मानं सर्वदेहिनाम् ॥ याहि सर्वात्मभावेन मया स्या ह्यकु-

विरहले कति तीखो मानसिक व्यथा भएको थियो, तापनि उनले सुखको निम्ति अर्कोतिर दृष्टि दिएनन् ॥१०॥ हे उद्धव ! वृन्दावनमा बस्दा म अत्यन्त प्रेमास्पद जसका रात्रिहरू आधा क्षण झैं बितेका थिए, मेरो विरहमा तिनै रात्रि गोपिनीहरूलाई कल्पको समान भयो ॥११॥ ममा आसक्तिले तिनको बुद्धि यस्तो बाँधिएको थियो–तिनलाई आफ्नु यो देह, पर वा निकटको वस्तुको ज्ञान रहेन, जस्तो कि मुनिहरूलाई समाधिमा नाम तथा रूपको ज्ञान रहन्न । अतः ती समुद्रमा नदीहरू झैं ममा लीन भएका थिए ॥ १२ ॥ सयकडौं र सहस्रौं गोपिनी जो मेरो यथार्थ रूपलाई जान्दैनथे र परस्त्रीसित रमण गर्ने लठुवा ठानेर परब्रह्मस्वरूप ममित प्रेम गर्दथे, ती पनि सत्सङ्गको प्रभावले म परब्रह्ममा प्राप्त भए ॥ १३ ॥ हे उद्धव ! अब तिमी वेद र स्मृतिका विधि, प्रवृत्ति र निवृत्तिका कर्म तथा पठनीय र पठित शास्त्रका झमेलाहरू छाडेर पूर्णरूपले म सबै शरीरधारीका अन्तर्यामीको

नै शरणमा जाऊ। यसरी म द्वारा तिमी भयरहित हुनेछौ ॥ १४ ॥ १५ ॥ उद्धव भन्दछन्—हे योगेश्वर! हजुरका कुरा सुनेर मेरा चित्तको संशय निवृत्त हुन सकेन, बरु अनु मेरो मन भ्रममा परेको छ ॥ १६ ॥ भगवान् भन्नुहुन्छ—इन्द्रियले नजान्ने योग्य तथा सबैलाई जीवित राख्ने त्यो परमात्मा आधारचक्र ( जुन चक्र नाभिको मास्तिर स्थित छ र शब्दको अभिव्यक्त हुने क्रम बताएर त्यही शब्दलाई परमात्माको स्वरूप बताइएको छ ) इत्यादिमा अभिव्यक्त हुन्छ। त्यसको क्रम यस प्रकार छ—त्यो परानामक नादयुक्त वाक्य प्राणसहित आधारचक्रमा प्रविष्ट रहन्छ। त्यो क्रमशः मनोमय, नादात्मक, सूक्ष्मरूप, पश्यन्ती तथा मध्यमा नाममा प्राप्त हुन्छ। यो रूप क्रमशः मणिपूरक चक्र र विशुद्ध चक्रमा प्राप्त हुन्छ। त्यसपछि मुखमा ह्रस्व इत्यादि रूप, उदात्त-अनुदात्तादि स्वरको स्वरूप तथा स्वर र व्यञ्जनको भेदमा प्राप्त भएर विस्तारले वेदादिको रूपमा परिणत हुन्छ ॥१७॥ जस्तै—अग्नि आकाशमा उष्मारूपले रहेर पनि अप्रकट रहन्छ। त्यो काठमा बलपूर्वक मन्थन गर्नाले वायुको सहायता पाएर सूक्ष्म अर्थात् झिल्कारूपमा प्रकट हुन्छ। अनि त्यही हव्य पाएर एवं बढी स्थूलतारूपले बढ्न थाल्दछ। त्यस्तै वैखरीरूपिणी वाणी मेरो स्थूल अभिव्यक्ति हो ॥१८॥ यसरी बोल्नु, काम गर्नु, हिंड्नु, मल-मूत्र त्याग, सुँघ्न, स्वाद

तोभयः ॥ १५ ॥ उद्धव उवाच ॥ संशयः शृण्वतो वाचं तव योगेश्वरेश्वर ॥ न निवर्तत आत्मस्थो येन भ्राम्यति मे मनः ॥१६॥ श्रीभगवानुवाच ॥ स एष जीवो विवरप्रसूतिः प्राणेन घोषेण गुहां प्रविष्टः ॥ मनोमयं सूक्ष्ममुपेत्य रूपं मात्रा स्वरो वर्ण इति स्थविष्ठः ॥ १७ ॥ यथाऽनलः खेऽनिलबन्धुरूष्मा बलेन दारुण्यधिमथ्यमानः ॥ अणुः प्रजातो हविषा समिध्यते तथैव मे व्यक्तिरियं हि वाणी ॥ १८ ॥ एवं गदिः कर्म गतिर्विसर्गो घ्राणो रसो दृक्स्पर्शः श्रुतिश्च ॥ सङ्कल्पविज्ञानमथाभिमानः सूत्रं रजः सत्त्वतमोविकारः ॥ १९ ॥ अहं हि जीवस्त्रिवृदब्जयोनिरव्यक्त एको वयसा स आद्यः ॥ विश्लिष्टशक्तिर्बहुधेव भाति बीजानि योनिं प्रतिपद्य यद्वत् ॥ २० ॥ यस्मिन्निदं प्रोतमशेषमोतं पटो यथा तन्तुवितानसंस्थः ॥ य एष संसारतरुः पुराणः कर्मात्मकः पुष्पफले प्रसूते ॥ २१ ॥ द्वे अस्य बीजे शतमूलस्त्रिनालः पञ्चस्कन्धः पञ्चरसप्रसूतिः ॥ दशैकशाखो द्विसुपर्णनीडः त्रिवल्कलो द्विफलोऽर्कं प्रविष्टः ॥ २२ ॥ अदन्ति चैकं फलमस्य गृध्रा ग्रामेचरा एकमरण्यवासाः ॥ हंसा य एकं बहुरूपमिज्यैर्मायामयं वेद स वेद

लिनु, हेर्नु, छुनु, सुन्नु, सङ्कल्प, विज्ञान, सूत्र र आधिदैविक आदि सृष्टि मेरो नै अभिव्यक्ति हो ॥ १९ ॥ ईश्वर तीन गुणका आश्रय, संसाररूपी कमलको उत्पत्ति हुने स्थान, अव्यक्त, एक र अनादि छ। यसका अंग जब कालद्वारा विभाजित हुन्छन्, अनि यो अनेक झैं देखिन थाल्दछ। जस्तै—यौटै बीज खेतमा परेर अनेक रूपले प्रकट हुन्छन् ॥ २० ॥ यो संसार तिनमा उस्तै भिजेको छ, जस्तो कि वस्त्रका ताना-बानामा वस्त्र स्थित रहन्छ। ईश्वर कर्म-स्वभाव संसारको वृक्ष हो र भोग तथा मोक्षरूप फूल र फललाई उत्पन्न गर्दछ ॥ २१ ॥ पाप-पुण्य यसका दुइ बीज छन्, अनन्त वासनाहरू यसका जरा छन्, तीन गुण यसका तीन लहरा हुन्, पञ्चमहाभूत यसका हाँगा, शब्दादि पाँच विषयको रस यसबाट उत्पन्न हुन्छ, यस दश इन्द्रिय र मन एघार यसका शाखाहरू हुन्। यसमा जीवात्मा र परमात्मा यी दुइ पक्षीका गुँड छन् र वात, पित्त, कफ तीन बोक्रा छन्। सुख-दुःखदुवै यसका फल हुन् र यो सूर्य-मण्डलमा झाँगिएको छ ॥२२॥ गिद्ध जस्तै विषयलोलुप गृहस्थ यसको दुःखरूप फललाई र हंसको झैं वनमा बस्ने ज्ञानी जन सुखरूप फललाई

भोग्दछन् । जो पूज्य गुरुको सेवा गरेर मायाले अनेक रूपधारी ती अद्वितीय परमात्मालाई जानिलिन्छन्, तिनै तत्त्वार्थका ज्ञाता हुन ॥२३॥ हे उद्धव ! तिमी पनि धैर्य धारण गरेर सावधान रही गुरुको उपासना गरी अनन्य भक्तिद्वारा आफ्नू विद्यारूपी बञ्चरो उध्याइराख । त्यसैले सावधानीपूर्वक जीवाशयलाई काटेर अर्थात् देहाभिमान त्यागेर परमात्मामा प्राप्त होऊ र अन्य सबै उपायरूपी अस्त्रलाई त्यागिदेउ ॥२४॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे 'वासिष्ठी' भाषाटीकायां द्वादशोऽध्यायः ॥ १२ ॥

(सत्वगुणको वृद्धिले विवेोदयको क्रम)—भगवान् आज्ञा हुन्छ—हे उद्धव ! सत्व, रज र तम यी गुण बुद्धिका हुन, आत्माका होइनन् । इनमा रज र तमलाई सत्त्वगुणले नष्ट गर र सत्त्व अर्थात् सत्य-दयादिलाई पनि सत्य अर्थात् चित्तले नष्ट पार ॥१॥ सत्त्व बढ्नाले पुरुषमा मेरो भक्तिको चिह्नयुक्त धर्म प्राप्त हुन्छ । सत्त्वगुणी वस्तुको उपासनाले सत्त्वगुण बढ्दछ र धर्ममा प्रवृत्ति हुन्छ ॥ २ ॥ धर्मले रजोगुण नष्ट हुन्छ, फेरि सत्त्वगुण बढ्नु नै श्रेष्ठ छ । अतः रजोगुण र तमोगुण भएपछि तिनैबाट उत्पन्न हुने अधर्म पनि शीघ्र नष्ट भएर जान्छ

वेदम् ॥ २३ ॥ एवं गुरूपासनयैकभक्त्या विद्याकुठारेण शितेन धीरः ॥ विवृश्च्य जीवाशयमप्रमत्तः सम्पद्य चात्मानमथ त्यजास्त्रम् ॥ २४ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे द्वादशोऽध्यायः ॥ १२ ॥

श्रीभगवानुवाच ॥ सत्त्वं रजस्तम इति गुणा बुद्धेर्न चात्मनः ॥ सत्त्वेनान्यतमौ हन्यात्सत्त्वंसत्त्वेन चैवहि ॥१॥ सत्त्वाद्धर्मो भवेद्वृद्धात्पुंसो मद्भक्तिलक्षणः ॥ सात्त्विकोपासया सत्त्वं ततो धर्मः प्रवर्तते ॥२॥ धर्मो रजस्तमो हन्यात्सत्त्ववृद्धिरनुत्तमः ॥ आशु नश्यति तन्मूलो ह्यधर्म उभये हते ॥ ३ ॥ आगमोऽपः प्रजा देशः कालः कर्म च जन्म च ॥ ध्यानं मन्त्रोऽथ संस्कारो दशैते गुणहेतवः॥४॥ तत्तत्सात्त्विकमेवैषां यद्यद्वृद्धाः प्रचक्षते ॥ निन्दन्ति तामसं यत्तद्राजसं तदुपेक्षितम् ॥५॥ सात्त्विकान्येव सेवेत पुमान्सत्वविवृद्धये ॥ ततो धर्मस्ततो ज्ञानं यावत्स्मृतिरपोहनम् ॥६॥ वेणुसंघर्षजो वह्निर्दग्ध्वा शाम्यति तद्वनम् ॥ एवं गुणव्यत्ययजो देहः शाम्यति तत्क्रियः॥७॥ उद्धव उवाच ॥ वदन्ति मर्त्याः प्रायेण विषयान्पदमापदाम्॥तथापि भुंजते कृष्ण तत्कथं श्वखराजवत्॥८॥ श्रीभगवानुवाच ॥ अहमित्यन्यथा बुद्धिः प्रमत्तस्य यथा हृदि ॥ उत्सर्पति रजो घोरं ततो वैकारिकं मनः ॥९॥ रजोयुक्तस्य मनसः

॥ ३ ॥ शास्त्र, जल, मनुष्य, स्थान, समय, कर्म, जन्म, ध्यान, मन्त्र र संस्कार यी दश वस्तु गुणका हुन् । यी मध्ये प्रत्येक वस्तु सत्त्वादि भेदले तीन-तीन प्रकार हुन्छन् । जस्तै-कुनै शास्त्र सत्त्वगुणलाई कुनै रजोगुण र कुनै तमोगुणलाई उत्पन्न गर्दछन्, त्यस्तै जल इत्यादिको विषयमा बुझ्नु पर्दछ ॥ ४ ॥ यी मध्ये जुन-जुन शास्त्र आदिको ठूला जान्ने व्यक्तिहरूले प्रशंसा गरेका छन्, त्यसलाई सत्त्वगुणको उत्पादक बुझ्नु पर्दछ । जसको निन्दा गरिएको छ, त्यो तमोगुणको उत्पादक जान्नु । रजोगुण उत्पन्न गर्ने वस्तुहरूमा उनले ध्यान दिएका छैनन् ॥ ५ ॥ सत्त्वगुण बढाउने पुरुष सात्त्विक वस्तुको नै सेवन गरून् । सत्त्वको वृद्धिले धर्म र अधर्मले उच्च ज्ञान प्राप्त हुन्छ जसले शरीराभिमान पनि छुटेर जान्छ र मेरो स्वरूपको साक्षात्कार हुन्छ ॥ ६ ॥ जस्तै—बाँसहरूको संघर्षले उत्पन्न अग्नि त्यसलाई पोलेर नै शान्त हुन्छ, त्यस्तै गुणका क्षोभले उत्पन्न देह अग्नि झैं गुणहरूलाई पोलेर नै शान्त हुन्छ—अन्यथा हुँदैन ॥ ७ ॥ उद्धवले भने—हे कृष्ण ! प्रायः विषयलाई व्यक्ति विपत्तिहरूको स्थान भन्ने गर्दछन् तापनि ती कुकुर, गधा र खपी झैं विषयहरूलाई किन

भोग्दछन् ? ॥ ८ ॥ भगवान् भन्नुहुन्छ—अज्ञानी व्यक्तिको हृदयमा जसै 'म' यो मिथ्या बुद्धि उत्पन्न हुन्छ, तत्काल सत्व-प्रधान मन पनि दुःखप्रद रजोगुणले भरिन्छ ॥९॥ रजोगुणयुक्त मनमा अनेक थरिका संकल्पको उदय हुन्छ । त्यसले विषयाभिलाषा बढ्दछ र विषयका अनेक गुणको ध्यान गर्नाले दुर्बुद्धि व्यक्तिका निम्ति त्यो विषयाभिलाषा दुःसह हुन्छ ॥ १० ॥ त्यसको वशीभूत भएर अजितेन्द्रिय व्यक्ति कष्टपूर्ण कर्म गर्दछ । यद्यपि त्यो जान्दछ—यी कर्मका फल दुःखमयछन् तापनि रजोगुणको वेगद्वारा उत्पादित मोहले युक्त रहन्छ ॥ ११ ॥ जब कुनै विद्वान् रज तथा तमले विक्षिप्त-बुद्धि भइजान्छ तब त्यो सावधानीले मन ममा लगाइदिन्छ र विषयका दोषमा ध्यान दिई तिनमा आसक्त हुँदैन ॥ १२ ॥ अतएव वेला वेलामा श्वासलाई जितेर, आसन दृढ पारी सावधानी र निरलसतापूर्वक बिस्तार-बिस्तार मन ममा लगाई स्थिर पारोस् ॥ १३ ॥ मेरा शिष्य सनकादिहरूले यतिलाई नै योग भनेका छन्—जसले मन सबैतिरबाट बटुलेर ममा लगाइदिन सकियोस् ॥ १४ ॥ उद्धवले सोधे—हे केशव ! जिसीले जुन रूपमा सनक-सनन्दनादिलाई योगको

संकल्पः सविकल्पकः ॥ ततः कामो गुणध्यानाद्दुःसहः स्याद्धि दुर्मतेः ॥ १० ॥ करोति कामवशगः कर्माण्यविजितेन्द्रियः ॥ दुःखोदर्काणि संपश्यन्रजोवेगविमोहितः ॥ ११ ॥ रजस्तमोभ्यां यदपि विद्वान्विक्षिप्तधीः पुनः ॥ अतन्द्रितो मनो युञ्जन्दोषदृष्टिर्न सज्जते ॥ १२ ॥ अप्रमत्तोऽनुयुञ्जीत मनो मय्यर्पयञ्छनैः ॥ अनिर्विण्णो यथाकालं जितश्वासो जितासनः ॥ १३ ॥ एतावान्योग आदिष्टो मच्छिष्यैः सनकादिभिः ॥ सर्वतो मन आकृष्य मय्यद्धाऽऽवेश्यते यथा ॥ १४ ॥ उद्धव उवाच ॥ यदा त्वं सनकादिभ्यो येन रूपेण केशव ॥ योगमादिष्टवानेतद्रूपमिच्छामि वेदितुं ॥ १५ ॥ श्रीभगवानुवाच ॥ पुत्रा हिरण्यगर्भस्य मानसाः सनकादयः ॥ पप्रच्छुः पितरं सूक्ष्मां योगस्यैकान्तिकीं गतिम् ॥ १६ ॥ सनकादय ऊचुः ॥ गुणेष्वाविशते चेतो गुणाश्चेतसि च प्रभो ॥ कथमन्योन्यसंत्यागो मुमुक्षोरतितीर्षतः ॥ १७ ॥ श्रीभगवानुवाच ॥ एवं पृष्टो महादेवः स्वयंभूर्भूतभावनः ॥ ध्यायमानः प्रश्नबीजं नाभ्यपद्यत कर्मधीः ॥ १८ ॥ स मामचिन्तयद्देवः प्रश्नपारतितीर्षया ॥ तस्याहं हंसरूपेण सकाशमगमं तदा ॥ १९ ॥ दृष्ट्वा मां त उपव्रज्य कृत्वा पादाभिवन्दनम् ॥ ब्रह्माणमग्रतः कृत्वा पप्रच्छुः को भवानिति ॥ २० ॥ इत्यहं मुनिभिः पृष्टस्तत्त्वजिज्ञासुभिस्तदा ॥ यदवोचमहं तेभ्यस्तदुद्धव निबोध मे ॥२१॥ वस्तुनो यद्यनानात्वमात्मनः प्रश्न ईदृशः ॥ कथं घटेत वो विप्रा वक्तुर्वा मे क आश्र-

मार्ग बताएको होस्, त्यो रूप म जान्न चाहन्छु ॥ १५ ॥ भगवान् भन्नुहुन्छ—सनकादि ब्रह्माका मानसिक पुत्र थिए । तिनले योगका प्रधान तथा दुर्विज्ञेय बाटो आफ्ना पिता सित सोधेका थिए ॥ १६ ॥ सनकादिहरूले भने—हे प्रभो ! चित्त विषयमा लिप्त रहन्छ र विषय वासनारूपले चित्तमा वर्तमान रहन्छ । अनि जो व्यक्ति संसार सागरलाई नाघ्न खोज्दछ उसका इच्छा गर्दछ, त्यो विषय र चित्तको संसर्ग कसरी हटाउला ? ॥ १७ ॥ भगवान् भन्नुहुन्छ—त्यसरी सोधेपछि सबै प्राणीहरूलाई उत्पन्न गर्ने तथा स्वयं उत्पन्न हुने श्रेष्ठ देवता ब्रह्माले विचार गरे—तर तिनको बुद्धि कर्मले मोहित थियो, अतः यस प्रश्नको यथार्थ कारण जान्न सकेनन् ॥ १८ ॥ प्रश्नबाट पार पाउन उनले मेरा ध्यान गरे, अनि म हंसरूपले उनको नजीकै । दुवै तिनीहरूले मलाई देखे अनि ब्रह्मालाई अघि लगाई मेरा आएर प्रणाम गरेर सोधे—हजुर को हुनुहुन्छ ? ॥ १९ ॥ २० ॥

उद्धव ! तत्त्वजिज्ञासु मुनिगणले जब मसित यस्तो प्रश्न गरे, अनि मैले उनीसित जे भनें, त्यो सुन ॥ २१ ॥ हे विप्र हो ! यदि आत्माहरू वस्तु अनेक छैन भने तिम्रो यस्तो प्रश्न उचित छैन, किनकि तिमीहरूको र 'म' भन्नेको आत्मा यौटै छ ॥ २२ ॥ यदि तिमी पंचमहाभूतले बनेको शरीरको अपेक्षा गरेर यस्तो सोधिरहेका हौ भने यथार्थमा समान छ र यस दशामा 'हजुर को ?' भन्ने प्रश्न केवल वाणीद्वारा भनिएको हो ॥२३॥ मन, वाणी, दृष्टि तथा अन्य इन्द्रियहरूले जे जति जान्न सकिन्छ, त्यो मनै हुँ । मदेखि अरु होइन, यो निश्चित जान ॥२४॥ हे पुत्र हो ! चित्त सदा विषयमा लागिरहन्छ र विषय चित्तमा व्याप्त रहन्छ, तर विषय र चित्त दुवै नै मेरो स्वरूपका उपाधि मात्र हुन् ॥२५॥ सदैव विषयको सेवन गर्नाले चित्त तिनमा लाग्दछ र विषय वासनाद्वारा चित्तमा प्रकट हुन्छन् । यसै निमित्त जो आफूलाई परमात्मा-स्वरूप ठान्दछ, त्यो यी दुवैलाई त्यागोस् ॥२६॥ जाग्रत् स्वप्न

यः ॥ २२ ॥ पञ्चात्मकेषु भूतेषु समानेषु च वस्तुतः ॥ को भवानिति वा प्रश्नो वाचारम्भो ह्यनर्थकः ॥ २३ ॥ मनसा वचसा दृष्ट्या गृह्यतेऽन्यैरपीन्द्रियैः ॥ अहमेव न मत्तोऽन्यदिति बुध्यध्वमञ्जसा ॥ २४ ॥ गुणेष्वाविशते चेतो गुणाश्चेतसि च प्रजाः ॥ जीवस्य देह उभयं गुणाश्चेतो मदात्मनः ॥ २५ ॥ गुणेषु चाविशच्चित्तमभीक्ष्णं गुणसेवया ॥ गुणाश्च चित्तप्रभवा मद्रूप उभयं त्यजेत् ॥ २६ ॥ जाग्रत्स्वप्नः सुषुप्तं च गुणतो बुद्धिवृत्तयः ॥ तासां विलक्षणो जीवः साक्षित्वेन विनिश्चितः ॥ २७ ॥ यर्हि संसृतिबन्धोऽयमात्मनो गुणवृत्तिदः ॥ मयि तुर्ये स्थितो जह्यात्त्यागस्तद्गुणचेतसाम् ॥ २८ ॥ अहङ्कारकृतं बन्धमात्मनोऽर्थविपर्ययम् ॥ विद्वान्निर्विद्य संसारचिन्तां तुर्ये स्थितस्त्यजेत् ॥ २९ ॥ यावन्नानार्थधीः पुंसो न निवर्तेत युक्तिभिः ॥ जागर्त्यपि स्वपन्नज्ञः स्वप्ने जागरणं यथा ॥ ३० ॥ असत्त्वादात्मनोऽन्येषां भावानां तत्कृता भिदा ॥ गतयो हेतवश्चास्य मृषा स्वप्नदृशो यथा ॥३१॥ यो जागरे बहिरनुक्षणधर्मिणोऽर्थान् भुंक्ते समस्तकरणैर्हृदि तत्सदृक्षान् ॥ स्वप्ने सुषुप्त उपसंहरते स एकः स्मृत्यन्वयात्त्रिगुणवृत्तिदृगिन्द्रियेशः ॥३२॥ एवं विमृश्य गुणतो मनसस्त्र्यवस्था मन्मायया मयि कृता इति निश्चितार्थाः ॥ संछिद्य हार्दमनुमानसदुक्तितीक्ष्ण·

सुषुप्ति यी गुणका अवस्थाहरू वस्तुतः बुद्धिका नै हुन्छन् । जीव ती अवस्थादेखि पृथक् रहन्छ र उसको अस्तित्व साक्षीरूपले निश्चित गरिएको छ ॥२७॥ जब जीवलाई गुणका वृत्तिहरू दिने बुद्धिकृत बन्धनलाई प्राणी म परमात्मास्वरूपमा मग्न भएर त्यागिदिए विषय र चित्त स्वयं भिन्न-भिन्न हुन्छन् ॥२८॥अहङ्कारकृत बन्धन रह्यो भने जीव अन्त्यमा प्राप्त हुन्छ । अतः विद्वान् वैराग्य धारण गरेर आत्माको यथार्थ रूपमा मग्न रहोस् र त्यो बन्धन तथा संसारको चिन्ता त्यागोस् ॥२९॥ जबसम्म युक्तिद्वारा पुरुषको द्वैतबुद्धि जाँदैन, तब सम्म त्यो अज्ञानी जागै रहेर पनि निदाउँछ । त्यसको जागरण स्वप्नमा जागै रहनु झैं छ ॥३०॥यस आत्माका देव-मनुष्यादिभाव छैनन् र उनले बनाएका वर्णाश्रमादि भेद पनि हुँदैन । आत्माको स्वर्ग प्राप्ति आदि गतिहरू र तिनलाई प्राप्त गराउने सबै कर्म त्यसै गरी मिथ्या रहन्छ, जसरी स्वप्न देख्ने व्यक्तिको देखेका पदार्थ मिथ्या हुन्छन्, देव-मनुष्यादिभाव देहका हुन्छन्, आत्माको होइन ॥३१॥ जो जाग्रत् अवस्थामा इन्द्रियद्वारा बाहिरी क्षणिक पदार्थहरू भोग्छ, स्वप्नमा उनकै झैं कल्पित पदार्थ भोग्दै सुषुप्तिमा भोगरहित रहन्छ त्यो बुद्धिको तीनै अवस्थालाई

देख्ने र इन्द्रियहरूको स्वामी आत्मा यौटै छ, किनकि उसलाई सर्वदा यो सम्बन्ध रहिरहन्छ—मैले ग्राह्य-विषयको भोग गरेको छु । मैले नै स्वप्न देखें र म नै आनन्दले सुतेको छु ॥ ३२ ॥ यस्तो विचार गरेर तिमी यस कुराको निश्चय गर कि यी तीनै गुण हेतुक अवस्थाहरू मनका हुन् र मेरी मायाले ममा भासित हुन्छन्, तर वास्तवमा यी अवस्थाहरू आत्माका होइनन् । अतः अनुमान र सद्वाक्यले उत्तेजित ज्ञानरूपी खड्गद्वारा संशयको आधार अहङ्कारलाई काटेर हृदयमा स्थित भजाईं भज ॥ ३३ ॥ समस्त संसारलाई भ्रमरूप मानसिक कल्पना मात्र जान, किनकि बल्दो मशाल घुमाउँदा बनेको अग्निको घेरा झैं यो देखिन्छ र पुनः नष्ट हुन्छ, किनकि यो अत्यन्त चञ्चल छ । यौटा ज्ञान नै अनेक प्रकारले भासित हुन्छ । तीन प्रकारका गुणमयी सृष्टिको धारण भासित हुने अनेकत्व मायाले कल्पित र स्वप्नवत् छ ॥ ३४ ॥ अतः प्राणीको कर्तव्य हो—त्यस मिथ्या संसार तिरबाट दृष्टि फर्काएर तृष्णा रहित भई-चुपचाप आत्मसुखको अनुभव गर्दै सबै कर्म त्यागोस् । छेहोत्पादक कर्मवश यदि कहिले कर्म देखिए पनि जो तुच्छ

ज्ञानासिना भजत माऽखिलसंशयाधिम् ॥३३॥ ईक्षेत विभ्रममिदं मनसो विलासं दृष्टं विनष्टमतिलोलमलातचक्रम् ॥ विज्ञानमेकमुरुधेव विभाति माया स्वप्नस्त्रिधा गुणविसर्गकृतो विकल्पः ॥३४॥ दृष्टिं ततः प्रतिनिवृत्तनिवृत्ततृष्णस्तूष्णीं भवेन्निजसुखानुभवोनिरीहः ॥सन्दृश्यते क्व च यदीदमवस्तुबुद्ध्या त्यक्तं भ्रमाय न भवेत्स्मृतिरानिपातात् ॥३५॥ देहं च नश्वरमवस्थितमुत्थितं वा सिद्धो न पश्यति यतोऽध्यगमत्स्वरूपम् ॥ दैवादपेतमुत दैववशादुपेतं वासो यथा परिकृतं मदिरामदान्धः ॥३६॥ देहोऽपि दैववशगः खलु कर्म यावत् स्वारम्भकं प्रतिसमीक्षत एव सासुः ॥ तं सप्रपञ्चमधिरूढसमाधियोगः स्वाप्नं पुनर्न भजते प्रतिबुद्धवस्तुः ॥३७॥ मयैतदुक्तं वो विप्रा गुह्यं यत्सांख्ययोगयोः ॥ जानीत माऽऽगतं युष्मद्धर्मविवक्षया ॥३८॥ अहं योगस्य सांख्यस्य सत्यस्यर्तस्य तेजसः ॥ परायणं द्विजश्रेष्ठाः श्रियः कीर्तेर्दमस्य च ॥३९॥ मां भजन्ति गुणाः सर्वे निर्गुणं निरपेक्षकम् ॥ सुहृदं प्रिय-

जानेर छाडिएको छ, त्यो भ्रम उत्पन्न गर्न सक्तैन, तर नमरुञ्जेल कर्म-संस्कार छुनें न छुनें रूपले सदैव हुँदै रहन्छन् ॥ ३५ ॥ आत्मानुभवरूपी सुखको साक्षात्कार गर्ने व्यक्ति नश्वर देहमा ध्यान दिंदैन । दैववश त्यो उठोस् वा बसोस् या जाओस्, आओस् किनकि त्यो आफ्नु यथार्थ रूपमा पुगिसकेको रहन्छ । जस्तै—रक्सीको लागूले अंध पुरुष लगाएका लुगाको पनि ख्याल राख्तैन, त्यस्तै—त्यो पुरुष देहमा पनि ध्यान दिंदैन ॥ ३६ ॥ दैवको वशीभूत जुन पूर्वकर्मको भोगका निम्ति रचिएको छ, त्यो नमरिए सम्म, त्यो प्राण र इन्द्रिय सहित तिनको भोगको निम्ति वर्तमान रहिरहन्छ, तर जो समाधियोगमा पुगिसक्यो र तत्वलाई जानिसक्यो, त्यो स्वप्नाकार देहको मिथ्या प्रपञ्चमा अल्झन्न ॥ ३७ ॥ हे विप्र हो ! जो कुरा सांख्य र योगको रहस्य स्वरूप छ, त्यो मैले भनिसकें । तिमी मलाई आफ्नु धर्मशिक्षक विष्णु जान ॥३८॥ हे द्विजश्रेष्ठ !

ः दृष्टान्त ( नैयायिकको मत )—यौटा नैयायिक पण्डितजी कुनै तेलीको पसलमा तेल लिन गए । त्यहाँ उनले कोल्हूको गोरुको घाँटीमा [illegible] । [illegible] सोधे— गोरुको घाँटीमा घण्ट किन बाँधेको ?' तेलीले उत्तर दियो—'म त कुनै अर्को काम गर्न जान्छु, तर घण्टीको ध्वनिले [illegible]—गोरु हिँडिरहेको छ कि छैन ?' नैयायिक [illegible] अडिएर घाँटी हल्लाएर घण्टी बजा- उन्यो भने कसरी जान्ने ?' तेलीले भन्यो—महाशय ! यही त कुरा छ कि मेरो गोरुले न्यायशास्त्र पढेको छैन ।' तात्पर्य के भने-पढे लेखेका मनुष्य [illegible] गर्न खोज्छन् । यो यही विचा- रमा रहन्छ कि परिश्रम गर्न नपरोस् र धनले उनको घर भरिदेओस् ।

म नै योग, सांख्य, धर्म, तेज, लक्ष्मी, कीर्ति र दमको मुख्य आश्रय हुँ । म सबैको सुहृद्, प्रिय आत्मा, निर्गुण र निरपेक्ष हुँ । समदर्शिता, असङ्गता आदि अरु पनि गुणहरूको सदृश भासित हुने गुण ममा विद्यमान रहन्छन् ॥३९॥४०॥ यसरी सदाग सनकादि मुनि सन्देह रहित भएर उनले निर्मल भक्तिले मेरो स्वागत गरेर विविध स्तोत्रहरूले स्तुति गरे ॥ ४१ ॥ म ती महर्षिहरू द्वारा राम्ररी पूजित र स्तूयमान भएर ब्रह्माले देख्दा-देख्दै आफ्नू धाममा फर्किएँ ॥४२॥ इति एकादशस्कन्धे भाषाटीकायां त्रयोदशोऽध्यायः ॥१३॥

उद्धव भन्नलागे–हे कृष्ण ! ब्रह्मवादी जन कल्याणका अनेक मार्ग भन्दछन्, हजुर भक्तिलाई श्रेष्ठ भन्नुहुन्छ–तिनको विकल्पले प्रधानता छ वा यी मध्ये कुनै एउटाको नै मुख्यता छ ? ॥१॥ हे स्वामिन् ! हजुरले भन्नुभएको छ–यस्तो भक्तियोगमा अन्य साधनको अपेक्षा रहन्न, जसले सबै आसक्ति छाडेर आत्मामा मन लगाओस् ॥२॥ भगवान् भन्नुहुन्छ–कालवश यो वेदवाणी प्रलयकालमा नष्ट भएको थियो, फेरि सृष्टिको प्रारम्भमा मैले त्यो ब्रह्मालाई बताएँ । यही वेदवाणी या धर्म कहिएको छ र त्यो धर्मको रूप म हुँ ॥३॥ ब्रह्माले

मात्मानं साम्यासङ्गादयो गुणाः ॥४०॥ इति मे छिन्नसन्देहा मुनयः सनकादयः ॥ सभाजयित्वा परया भक्त्याऽगृणत संस्तवैः ॥४१॥ तैरहं पूजितः सम्यक्संस्तुतः परमर्षिभिः ॥ प्रत्येयाय स्वकं धाम पश्यतः परमेष्ठिनः ॥४२॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे त्रयोदशोऽध्यायः ॥१३॥

उद्धव उवाच ॥ वदन्ति कृष्ण श्रेयांसि बहूनि ब्रह्मवादिनः ॥ तेषां विकल्पप्राधान्यमुताहो एकमुख्यता ॥ १ ॥ भवतोदाहृतः स्वामिन्भक्तियोगोऽनपेक्षितः ॥ निरस्य सर्वतः सङ्गं येन त्वय्याविशेन्मनः ॥ २ ॥ श्रीभगवानुवाच ॥ कालेन नष्टा प्रलये वाणीयं वेदसंज्ञिता ॥ मयाऽऽदौ ब्रह्मणे प्रोक्ता धर्मो यस्यां मदात्मकः ॥ ३ ॥ तेन प्रोक्ता च पुत्राय मनवे पूर्वजाय सा ॥ ततो भृग्वादयोऽगृह्णन्सप्त ब्रह्ममहर्षयः ॥ ४ ॥ तेभ्यः पितृभ्यस्तत्पुत्रा देवदानवगुह्यकाः ॥ मनुष्याः सिद्धगन्धर्वाः सविद्याधरचारणाः ॥ ५ ॥ किंदेवा किन्नरा नागा रक्षः किम्पुरुषादयः ॥ बह्व्यस्तेषां प्रकृतयो रजःसत्त्वतमोभुवः ॥ ६ ॥ याभिर्भूतानि भिद्यन्ते भूतानां मतयस्तथा ॥ यथाप्रकृति सर्वेषां चित्रा वाचः स्रवन्ति हि ॥ ७ ॥ एवं प्रकृतिवैचित्र्याद्भिद्यन्ते मतयो नृणाम् ॥ पारम्पर्येण केषाञ्चित्पाखण्डमतयोऽपरे ॥ ८ ॥ मन्मायामोहितधियः पुरुषाः पुरुषर्षभ ॥ श्रेयो वदन्त्यनेकान्तं यथाकर्म यथारुचि ॥ ९ ॥ धर्ममेके यशश्चान्ये कामं सत्यं दमं शमम् ॥ अन्ये वदन्ति स्वार्थं वा ऐश्वर्यं त्यागभोजनम्

त्यो आफ्ना प्रथम पुत्र मनुसित भने । मनुसित भृगु इत्यादि सात ब्रह्मर्षिले पढे ॥ ४ ॥ तिनै आफ्ना पिताहरूसित उनका पुत्र देव–दानव, मनुष्य, यक्ष, सिद्ध, गन्धर्व, विद्याधर, चारण किन्नर, नाग, राक्षस, किंपुरुष अर्थात् वानरादिले पढे । तिनका रज, तम र सत्त्वबाट उत्पन्न अनेक थरिका प्रकृतिहरू छन् ॥ ५ ॥ ६ ॥ तिनै प्रकृतिहरूको अनुसार प्राणी र तिनको बुद्धिहरू पनि अनेक थरिका हुन्छन् । प्रकृतिको अनुकूल नै सबैले वेदवाणीको भिन्न-भिन्न रूपमा अर्थ गरेका छन् ॥ ७ ॥ यस प्रकार प्रकृति-भेदको कारण केही मनुष्यका विचारमा पनि भेद पर्दछ र केही व्यक्तिहरू त वेद-विरुद्ध पाखण्ड-मतावलम्बी व्यक्तिहरूपनि हुने गर्दछन् ॥ ८ ॥ हे पुरुष श्रेष्ठ ! मेरो मायाले भ्रान्त बुद्धि हुने अनेक व्यक्ति आफ्आफ्ना कर्म र रुचि-अनुसार भिन्न-भिन्न प्रकारले कल्याणको मार्ग बताउँछन् ॥९॥ केही धर्मलाई, केही यशलाई, केही कामलाई, केही सत्यलाई,

केही शम-दमादिलाई, केही ऐश्वर्यलाई र केही दान र भोगलाई नै परमार्थ भन्दछन् ॥ १० ॥ केही व्यक्ति यज्ञ, तप, दान, व्रत र यम नियमादिलाई पुरुषार्थ मान्दछन् । तर यी कर्मले जुन लोक प्राप्त हुन्छन्, ती आदि-अन्त्ययुक्त, परिणाममा दुःखदायी, अन्त्यमा मोहजनक तुच्छ आनन्ददाता र शोकले परिपूर्ण छन् ।.११॥ हे सभ्य ! सबै प्रकारले निरपेक्ष भएर ममा नै मन लगाउने र ममा नै लीन रहने व्यक्तिलाई जुन सुख मिल्दछ, त्यो विषयलोलुप व्यक्ति कसरी भेट्टाउँछ ? ॥ १२ ॥ व्यक्ति अकिञ्चन जितेन्द्रिय, शान्त, समबुद्धि मेरो प्राप्तिले नै सन्तुष्ट रहन्छन्, तिनको निम्ति सबै दिशाहरू सुखमय हुन्छन् ॥ १३ ॥ जसले आफ्नू चित्त ममा लगाइदियो, त्यो न ब्रह्मपद, न इन्द्रपद, न सार्वभौम राज्य, न भूमण्डलको आधिपत्य, न योगका सिद्धिहरू, न मोक्ष नै खोज्दछ ॥ १४ ॥ हे उद्धव ! तिमी जस्ता भक्तगण मलाई जति प्रिय छन्, त्यति ब्रह्मा, शंकर र बलभद्र पनि छैनन्, न लक्ष्मी, न आफ्नू आत्मा नै प्रिय छ ॥ १५ ॥ निरपेक्ष, शान्त तथा समदर्शी मुनिको पछि-पछि यस इच्छाले हिँड्दछु कि म तिनको चरण-रजले पवित्र हुन पाऊँ

॥ १० ॥ केचिद्यज्ञतपोदानं व्रतानि नियमान् यमान् ॥ आद्यन्तवन्त एवैषां लोकाः कर्मविनिर्मिताः ॥ दुःखोदर्कास्तमोनिष्ठाः क्षुद्रानन्दाः शुचा-र्पिताः ॥ ११ ॥ मय्यर्पितात्मनः सभ्य निरपेक्षस्य सर्वतः ॥ मयात्मना सुखं यत्तत्कुतः स्याद्विषयात्मनाम् ॥ १२ ॥ अकिञ्चनस्य दान्तस्य शान्तस्य समचेतसः ॥ मया सन्तुष्टमनसः सर्वाः सुखमया दिशाः ॥ १३ ॥ न पारमेष्ठ्यं न महेन्द्रधिष्ण्यं न सार्वभौमं न रसाधिपत्यम् ॥ न योगसिद्धीरपुन-र्भवं वा मय्यर्पितात्मेच्छति मद्विनान्यत् ॥ १४ ॥ न तथा मे प्रियतम आत्मयोनिर्न शङ्करः ॥ न च सङ्कर्षणो न श्रीर्नैवात्मा च यथा भवान् ॥१५॥ निरपेक्षं मुनिं शान्तं निर्वैरं समदर्शनम् ॥ अनुव्रजाम्यहं नित्यं पूयेयेत्यङ्घ्रिरेणुभिः ॥ १६ ॥ निष्किञ्चना मय्यनुरक्तचेतसः शान्ता महान्तोऽखिल-जीववत्सलाः ॥ कामैरनालब्धधियो जुषन्ति यत् तन्नैरपेक्ष्यं न विदुः सुखं मम ॥ १७ ॥ बाध्यमानोऽपि मद्भक्तो विषयैरजितेन्द्रियः ॥ प्रायः प्रग-ल्भया भक्त्या विषयैर्नाभिभूयते ॥ १८ ॥ यथाग्निः सुसमृद्धार्चिः करोत्येधांसि भस्मसात् ॥ तथा मद्विषया भक्तिरुद्धवैनांसि कृत्स्नशः ॥ १९ ॥ न साधयति मां योगो न सांख्यं धर्म उद्धव ॥ न स्वाध्यायस्तपस्त्यागो यथा भक्तिर्ममोर्जिता ॥२०॥ भक्त्याऽहमेकया ग्राह्यः श्रद्धयात्मा प्रियः सताम् ॥ भक्तिः पुनाति मन्निष्ठा श्वपाकानपि सम्भवात् ॥ २१ ॥ धर्मः सत्यदयोपेतो विद्या वा तपसान्विता ॥ मद्भक्त्याऽपेतमात्मानं न सम्यक्प्रपुनाति

॥ १७ ॥ ममा अनुरक्त, अकिञ्चन, सर्वभूत हितकारी र कामना रहित चित्त हुने महात्मा जुन आनन्दको अनुभव गर्दछन्, केवल निरपेक्षताले प्राप्त हुने मेरो त्यो परमानन्दतिर अरू पाउन्नन् ॥ १८ ॥ यी बाहेक मेरा अजितेन्द्रिय भक्त विषयमा बाँधिएर पनि आफ्नू प्रौढ भक्तिका प्रभावले विषयको चक्रमा पर्डिन्नन् ॥ जस्तै बल्दो अग्नि काठलाई पोलिदिन्छ त्यस्तै मेरो भक्ति पनि सारा पापराशिलाई डढाइदिन्छ ॥१९॥ हे उद्धव ! मेरो दृढ भक्ति जसरी मलाई सजिलै प्राप्त गराउँछ, उसै गरी योग, सांख्य, धर्म, तप र दान पनि गराउन सक्तैन ॥२०॥ साधुजनको आत्मारूप म श्रद्धापूर्ण भक्तिले नै सुलभ हुन्छु । मेरो भक्ति चाण्डालादिलाई पनि पवित्र पारिदिन्छ ॥२१॥ मेरो भक्तिरहित पुरुषलाई सत्य र दया-युक्त धर्म र तपले युक्त धर्म र तपले युक्त विद्या पनि पूर्णरूपले पवित्र पार्न सक्तैन ॥२२॥ रोमाञ्च नभई, चित्त द्रवित नभई, आनन्दाश्रु नउर्लिई र भक्ति नभई अन्तःकरण कसरी शुद्ध

हुन सक्तछ ? ॥२३॥ उसको वाणी गद्गद हुन्छ र उसको चित्त द्रवीभूत हुन्छ, जो कहिले रुन्छ, कहिले हाँस्छ, कहिले चर्को स्वरले गाउन थाल्दछ र कहिले नाच्न लाग्दछ–मेरो यस्तो भक्त सम्पूर्ण त्रिलोकलाई पवित्र पारिदिन्छ ॥२४॥ जस्तै आगोमा पोलेपछि सुन मल त्यागेर आफ्नु स्वच्छ रूप पाउँछ, त्यस्तै मेरो भक्तियोगद्वारा आत्मा पनि कर्मवासना-बाट मुक्त भएर आफ्नु स्वरूप अर्थात् मलाई पाउँदछ ॥२५॥ जति मेरा कथा श्रवण र कीर्तनले भक्तको चित्त परिमार्जित हुन्छ, उति त्यो अंजनयुक्त नेत्र समान सूक्ष्म वस्तु अर्थात् तत्वको दर्शन गर्दछन्छ ॥ २६ ॥ जो पुरुष सदा विषय-चिन्तन गर्दछ, त्यसको चित्त विषयमै लीन हुन्छ ॥ २७ ॥ अतः अन्य साधन स्वप्नको मनोरथ जस्तै असच्चिन्तन मात्र हुन् । तिनलाई त्यागेर मेरो चिन्तनले शुद्ध चित्तलाई ममा लगाऔंस् ॥ २८ ॥ प्रत्येक व्यक्तिको कर्तव्य हो—त्यो धैर्य राखेर स्त्री र स्त्री-लम्पटको संगत परैबाट

हि ॥ २२ ॥ कथं विना रोमहर्षं द्रवता चेतसा विना ॥ विनानन्दाश्रुकलया शुद्ध्येद्भक्त्या विनाशयः ॥ २३ ॥ वाग्गद्गदा द्रवते यस्य चित्तं रुदत्य-भीक्ष्णं हसति क्वचिच्च ॥ विलज्ज उद्गायति नृत्यते च मद्भक्तियुक्तो भुवनं पुनाति ॥ २४ ॥॥यथाऽग्निना हेम मलं जहाति ध्मातं पुनः स्वं भजते स्वरूपम् ॥ आत्मा च कर्मानुशयं विधूय मद्भक्तियोगेन भजत्यथो माम् ॥ २५ ॥ यथा यथात्मा परिमृज्यतेऽसौ मत्पुण्यगाथाश्रवणाभिधानैः ॥ तथा तथा पश्यति वस्तु सूक्ष्मं चक्षुर्यथैवाञ्जनसम्प्रयुक्तम् ॥ २६ ॥ विषयान्ध्यायतश्चित्तं विषयेषु विषज्जते ॥ मामनुस्मरतश्चित्तं मय्येव प्रविलीयते ॥२७॥ तस्मादसदभिध्यानं यथा स्वप्नमनोरथम् ॥ हित्वा मयि समाधत्स्व मनो मद्भावभावितम् ॥ २८ ॥ स्त्रीणां स्त्रीसङ्गिनां सङ्गं त्यक्त्वा दूरत आत्मवान् ॥ क्षेमे विविक्त आसीनश्चिन्तयेन्मामतन्द्रितः ॥ २९ ॥ न तथाऽस्य भवेत्क्लेशो बन्धश्चान्यप्रसङ्गतः ॥ योषित्सङ्गात्तथा पुंसो यथा तत्स-ङ्गिसङ्गतः ॥३०॥ उद्धव उवाच ॥ यथा त्वामरविन्दाक्ष यादृशं वा यदात्मकम् ॥ ध्यायेन्मुमुक्षुरेतन्मे ध्यानं त्वं वक्तुमर्हसि ॥३१॥ श्रीभगवानुवाच ॥ सम आसन आसीनः समकायो यथासुखम् ॥ हस्तावुत्सङ्ग आधाय स्वनासाग्रकृतेक्षणः ॥ ३२ ॥ प्राणस्य शोधयेन्मार्गं पूरकुम्भकरेचकैः ॥ विप-र्ययेणापि शनैरभ्यसेन्निर्जितेन्द्रियः ॥ ३३ ॥ हृद्यविच्छिन्नमोङ्कारं घण्टानादं बिसोर्णवत् ॥ प्राणेनोदीर्य तथा तं पुनः संवेशयेत्स्वरम् ॥ ३४ ॥ एवं

त्यागेर निर्भय तथा निर्जन एकान्तमा बसेर पवित्र मनले मेरो ध्यान गरोस् ॥ २९ ॥ कसै गरी पनि अन्य संगतिले मुमुक्षु व्यक्तिलाई यस्तो बन्धन कदापि प्राप्त हुँदैन, जस्तो कि स्त्री वा उसका मित्रको संगले दृढ बन्धन हुन्छ ॥ ३० ॥ उद्धवले सोधे—हे कमलनयन ! मुमुक्षु व्यक्तिलाई जसरी जुन रूपमा, जस्तो भावले हजुरको ध्यान गर्नु पर्दछ, त्यो आज्ञा होस् ॥३१॥ भगवान् भन्नुहुन्छ—हे उद्धव ! मेरो भक्त समतल आसनमा शरीर सोझो पारेर बसोस्, आफ्ना हात काखमा राखेर आफ्नु दृष्टि नासिकाको अग्रभागमा स्थिर पारोस् ॥३२॥ अनि क्रमशः पूरक, कुम्भक र रेचकद्वारा वा त्यो भन्दा उल्टो क्रमले रेचक, कुम्भक र पूरकद्वारा नाडी शुद्ध पारेर जितेन्द्रिय भई नित्य विस्तार-विस्तार प्राणा-यामको अभ्यास गरोस् ॥ ३३ ॥ आफ्नु हृदयमा स्थित कमलनाल झैं ओंकारलाई प्राणद्वारा माथि लगेर उसमा घण्टको नाद झैं स्पष्ट स्वर सुनोस् ॥ ३४ ॥ नित्यप्रति तीनै वे

दश-दश पल्ट ओङ्कार सहित प्राणायामको अभ्यास गरोस्, यसो गर्नाले एक महीना नपुग्दै साधक प्राणवायुलाई आफ्नू वशमा पारिलिन्छ ॥ ३५ ॥ अन्तःकरणमा स्थित माथितिर नाल र तलतिर मुख हुने हृदय-कमललाई माथि मुख भएको, फक्रिएको आठ पंखुडी एवं माझको दल सहित चिन्तन गरेर त्यसका कर्णिकाहरूमा क्रमशः सूर्य, चन्द्रमा र अग्निको धारणा गरेर अग्निमण्डलको माझमा मेरो मङ्गलमय स्वरूपको ध्यान गरोस् ॥३६॥३७॥ जुन रूप आफ्ना अनुकूल अंगले सुशोभित, शान्त, राम्रो मुख, दीर्घ र राम्रा चार बाहुले युक्त छ। जसको ग्रीवा सुन्दर र स्वच्छ छ। जसका कपोल राम्रा छन्। जसको हाँसो मनोहर छ। जसको राम्रा कानमा मकराकृत कुण्डल झलिकरहेका छन्। जो मेघ समान श्याम, पीताम्बरधारी र श्रीवत्स एवं लक्ष्मीजीको आश्रय स्थल छ। जो शङ्ख, चक्र, गदा, पद्म तथा वनमालाले विभूषित छन्। जसका चरण-कमल नूपुरले शोभित छन्। कौस्तुभमणिको आभाले सम्पन्न र सर्वतिर कान्तिमय, किरीट, कटक, करधनी तथा बाजुबन्द आदि आभूषणले युक्त छन्। जो सर्वाङ्ग सुन्दर छन् र जसको राम्रो मुख, नेत्र प्रसन्नता प्रकट गरिरहेका

प्रणवसंयुक्तं प्राणमेव समभ्यसेत् ॥ दशकृत्वस्त्रिषवणं मासादर्वाग्जितानिलः ॥ ३५ ॥ हृत्पुण्डरीकमन्तःस्थमूर्ध्वनालमधोमुखम् ॥ ध्यात्वोर्ध्वमुखमुन्निद्रमष्टपत्रं सकर्णिकम् ॥ ३६ ॥ कर्णिकायां न्यसेत् सूर्यसोमाग्नीनुत्तरोत्तरम् ॥ वह्निमध्ये स्मरेद्रूपं ममैतद्ध्यानमङ्गलम् ॥ ३७ ॥ समं प्रशान्तं सुमुखं दीर्घचारुचतुर्भुजम् ॥ सुचारुसुन्दरग्रीवं सुकपोलं शुचिस्मितम् ॥ ३८ ॥ समानकर्णविन्यस्तस्फुरन्मकरकुण्डलम् ॥ हेमाम्बरं घनश्यामं श्रीवत्सश्रीनिकेतनम् ॥ ३९ ॥ शङ्खचक्रगदापद्मवनमालाविभूषितम् ॥ नूपुरैर्विलसत्पादं कौस्तुभप्रभया युतम् ॥ ४० ॥ द्युमत्किरीटकटककटिसूत्राङ्गदायुतम् ॥ सर्वाङ्गसुन्दरं हृद्यं प्रसादसुमुखेक्षणम् ॥ सुकुमारमभिध्यायेत्सर्वाङ्गेषु मनो दधत् ॥ ४१ ॥ इन्द्रियाणीन्द्रियार्थेभ्यो मनसाऽऽकृष्य तन्मना ॥ बुद्ध्या सारथिना धीरः प्रणयेन्मयि सर्वतः ॥ ४२ ॥ तत्सर्वव्यापकं चित्तमाकृष्यैकत्र धारयेत् ॥ नान्यानि चिन्तयेद्भूयः सुस्मितं भावयेन्मुखम् ॥ ४३ ॥ तत्र लब्धपदं चित्तमाकृष्य व्योम्नि धारयेत् ॥ तच्च त्यक्त्वा मदारोहो न किञ्चिदपि चिन्तयेत् ॥ ४४ ॥ एवं समाहितमतिर्मामेवात्मानमात्मनि ॥ विचष्टे मयि सर्वात्मन्ज्योतिर्ज्योतिषि संयुतम् ॥ ४५ ॥ ध्यानेनेत्थं सुतीव्रेण युञ्जतो योगिनो मनः ॥ संयास्यत्याशु निर्वाणं द्रव्यज्ञानक्रियाभ्रमः ॥४६॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे चतुर्दशोऽध्यायः ॥ १४ ॥

छन्, यस्तो मेरो सुकुमार देह र त्यस स्वरूपका सबै अंगमा चित्त लगाई ध्यान गरोस् ॥ ३८-४१ ॥ भक्त पुरुषको कर्तव्य हो–आफ्नू मनद्वारा इन्द्रियहरूलाई तिनका विषयबाट तानेर मनलाई बुद्धिरूपी सारथीको सहायताले सर्वाङ्गयुक्त ममा नै लगाओस् ॥ ४२ ॥ यसपछि फैलिएको चित्त तानेर फेरि एक स्थानमा राखी फेरि मेरो अङ्गको स्मरण नगरेर बराबर मेरो हास्ययुक्त मुखको ध्यान गरोस् ॥४३॥ मेरो मुखारविन्दमा चित्त स्थिर भएपछि त्यसलाई उहाँबाट हटाएर आकाशमा स्थिर पारोस्। अनि त्यसलाई पनि त्यागेर मेरो शुद्ध स्वरूपमा आरूढ भई अरु केही नसोचोस् ॥ ४४ ॥ यस प्रकार चित्त वशीभूत भएपछि जस्तो ज्योति ज्योतिमा मिल्दछ, त्यस्तै साधक पनि आफुमा मलाई र म सर्वात्मामा आफुलाई देख्न थाल्दछ ॥ ४५ ॥ यसरी तीव्र ध्यानयोग द्वारा आफ्नू चित्तलाई संयम गर्ने योगीका चित्तको द्रव्य, ज्ञान र कर्मसम्बन्धी भ्रम शीघ्र निवृत्त भएर जान्छ ॥ ४६ ॥ इति श्रीमद्-

भागवते महापुराणे एकादश स्कन्धे 'वासिष्ठ' भाषाटीकायां चतुर्दशोऽध्यायः ॥ १४॥

( सबै सिद्धिहरूको विवेचन )—भगवान् आज्ञा हुन्छ–हे उद्धव ! जितेन्द्रिय, स्थिरचित्त, श्वास जित्ने र मैमा चित्त स्थिर राख्ने योगीलाई नै सिद्धि प्राप्त हुन्छ ॥ १ ॥ उद्धवले सोधे–हे अच्युत ! योगीहरूलाई सिद्धि दिने हजुर नै हुनुहुन्छ । अतः यो भन्नुहवस्—कुन धारणाले कुन सिद्धि प्राप्त हुन्छ र सम्पूर्ण सिद्धिहरूको संख्या कति छ ॥ २ ॥ भगवान् भन्नुहुन्छ—हे उद्धव ! धारणायोगका पारगामीहरूले जम्मा अठार थरिका सिद्धि भनेका छन् । तीमध्ये आठमा मेरो प्रधानता छ र शेष दस गौण अर्थात् सत्वगुणीको उत्कर्षले मात्र प्राप्त हुने सिद्धि छन् ॥ ३ ॥ अणिमा, महिमा र लघिमा शरीरका सिद्धि हुन् । प्राप्ति नामक सिद्धिको सम्बन्ध इन्द्रियहरूसित छ । सुन्ने अर्थात् पारलौकिक र दृष्ट अर्थात् लौकिक पदार्थ इच्छानुसार प्राप्त गर्ने प्राकाम्य सिद्धि हो । माया र उसका कार्यलाई इच्छानुसार प्रेरित गर्न सक्नु 'ईशिता' सिद्धि हो । विषयमा अनासक्ति 'वशिता' सिद्धि हो । जो इच्छित पदार्थको चरम सीमा प्राप्त गर्छ, त्यो 'प्राकाम्य' सिद्धि कहिन्छ । हे सौम्य ! यी आठै सिद्धिहरू मलाई स्वभावतः प्राप्त छन् ॥ ४-५ ॥ देहमा भोक-प्यास आदि

श्रीभगवानुवाच ॥ जितेन्द्रियस्य युक्तस्य जितश्वासस्य योगिनः ॥ मयि धारयतश्चेत उपतिष्ठन्ति सिद्धयः॥१॥ उद्धव उवाच । कया धारणया काश्वित्कथं वा सिद्धिरच्युत ॥ कति वा सिद्धयो ब्रूहि योगिनां सिद्धिदो भवान् ॥२॥ श्रीभगवानुवाच ॥ सिद्धयोऽष्टादश प्रोक्ता धारणायोगपारगैः ॥ तासामष्टौ मत्प्रधाना दशैव गुणहेतवः ॥३॥अणिमा महिमा मूर्तेर्लघिमा प्राप्तिरिन्द्रियैः ॥ प्राकाम्यं श्रुतदृष्टेषु शक्तिप्रेरणमीशिता॥४॥गुणेष्वसङ्गो वशिता यत्कामस्तदवस्यति ॥ एता मे सिद्धयः सौम्य अष्टावौत्पत्तिका मताः ॥ ५ ॥ अनूर्मिमत्त्वं देहेऽस्मिन्दूरश्रवणदर्शनम् ॥ मनोजवः कामरूपं परकायप्रवेशनम् ॥६॥ स्वच्छन्दमृत्युर्देवानां सहक्रीडानुदर्शनम् ॥ यथा सङ्कल्पसंसिद्धिराज्ञाऽप्रतिहता गतिः ॥ ७ ॥ त्रिकालज्ञत्वमद्वन्द्वं परचित्ताद्यभिज्ञता ॥ अग्न्यर्काम्बुविषादीनां प्रतिष्टम्भोऽपराजयः ॥८॥ एताश्चोद्देशतः प्रोक्ता योगधारणसिद्धयः ॥ यया धारणया या स्याद्यथा वा स्यान्निबोध मे ॥९॥ भूतसूक्ष्मात्मनि मयि तन्मात्रं धारयेन्मनः ॥ अणिमानमवाप्नोति तन्मात्रोपासको मम ॥ १० ॥ महत्यात्मन्मयि परे यथासंस्थं मनो दधत् ॥ महिमानम्-

छ ऊर्मी अर्थात् शारीरिक वेग नहुनु, परवाट दर्शन र श्रवण, मन झैं शीघ्र गति हुनु, इच्छानुसार रूप धारण गर्नु, अन्य देहमा प्रविष्ट हुनु, स्वेच्छानुसार मृत्यु हुनु, देवाङ्गनासित हुने देवगणका क्रीडाको अवलोकन, जे सङ्कल्प गर्‍यो, त्यो तत्काल सिद्ध हुनु, अप्रतिहत आज्ञा र लोकान्तरमा अबाध-गति—यी दस सिद्धि सत्व गुणका उत्कर्षले मात्र प्राप्त हुन्छन् ॥ ६ ॥ ७ ॥ त्रिकाल ज्ञाता, निर्द्वन्द्वता, शीत, उष्ण, सुख-दुःख र राग-द्वेषादि द्वन्द्वको वशीभूत नहुनु, अर्काका मनको कुरा जान्नु अग्नि, सूर्य, जल र विषादिका शक्ति रोकिदिनु र कसैसित पनि पराजित नहुनु—यी पाँच सिद्धि अरू छन् । यो सबै सिद्धि नाम-निर्देशपूर्वक कहिए । यी मध्ये कुन सिद्धि जे जस्तो धारणाले र जसरी गरिन्छ—अब त्यो पनि बुझ ॥ ८ ॥ ९ ॥ जो व्यक्ति तन्मात्रारूपी मन म भूत सूक्ष्मोपाधिक अर्थात् तन्मात्रा स्वरूप परमात्मामा स्थिर पार्दछ, त्यो मेरो तन्मात्रोपासक भक्त कहिन्छ अणिमा नामको सिद्धि पाउँदछ ॥ १० ॥ म महत्तत्त्वरूपी परमात्मामा मनलाई महत्तत्त्वरूपले धारण गर्ने मेरो भक्तले 'महिमा' नामको सिद्धि पाउँदछ । त्यस्तै पञ्चभूतोपाधिक

1315

ममा मन लगाउनाले भिन्न-भिन्न तत्त्वको महिमा सिद्धि प्राप्त गर्दछ ॥ ११ ॥ वायु आदि चार तत्त्वका परमाणुरूपा उपाधि हुने मेरो रूपमा मन लगाउनाले कालको सूक्ष्मतारूपिणी 'लघिमा' सिद्धि पाउँछ ॥ १२ ॥ सात्त्विक अहङ्काररूपी म परमात्मामा चित्तको धारणा गर्नाले मेरो ध्यान गर्ने योगी सबै इन्द्रियको अधिष्ठातृरूपी 'प्राप्ति' नामको सिद्धि पाउँछ ॥ १३ ॥ जो व्यक्ति महत्तत्त्वाभिमानी सूत्रात्मामा आफ्नू चित्त स्थिर पार्दछ, त्यो म अव्यक्तजन्मा ईश्वरको 'प्राकाम्य' नामक सर्वश्रेष्ठ सिद्धि पाउँछ ॥ १४ ॥ अनि जुन त्रिगुणमयी मायाको स्वामी म कालरूपी विष्णुमा चित्त लगाउँछ, त्यो क्षेत्र अर्थात् शरीरादिक र क्षेत्रज्ञ अर्थात् जीवलाई आफ्नू इच्छानुसार प्रेरित गर्न सक्ने 'ईशित्व' नामक सिद्धि प्राप्त हुन्छ। त्यसमा सृष्टि र संहारसम्म गर्ने अपार शक्ति आउँदछ ॥ १५ ॥ जुन योगी भगवत्-शब्दले कहिएको म 'तुरीय' संज्ञक नारायणमा मन लगाउँछ, त्यो मेरो स्वभावले युक्त योगी 'वशिता' नामक सिद्धि प्राप्त गर्दछ ॥ १६ ॥ म निर्गुण ब्रह्ममै आफ्नू निर्मल चित्त स्थिर पार्ने योगी परमानन्दस्वरूपिणी उत्तम सिद्धि पाउँछ, जुन प्राप्त भएपछि सबै

वाप्नोति भूतानां च पृथक् पृथक् ॥११॥ परमाणुमये चित्तं भूतानां मयि रञ्जयन् ॥ कालसूक्ष्मार्थतां योगी लघिमानमवाप्नुयात् ॥१२॥ धारयन्मय्यहंतत्त्वे मनो वैकारिकेऽखिलम् ॥ सर्वेन्द्रियाणामात्मत्वं प्राप्तिं प्राप्नोति मन्मनाः ॥ १३ ॥ महत्यात्मनि यः सूत्रे धारयेन्मयि मानसम् ॥ प्राकाम्यं पारमेष्ठ्यं मे विन्दतेऽव्यक्तजन्मनः ॥१४॥ विष्णौ त्र्यधीश्वरे चित्तं धारयेत्कालविग्रहे ॥ स ईशित्वमवाप्नोति क्षेत्रक्षेत्रज्ञचोदनाम् ॥ १५ ॥ नारायणे तुरीयाख्ये भगवच्छब्दशब्दिते ॥ मनो मय्यादधद्योगी मद्धर्मा वशितामियात् ॥ १६ ॥ निर्गुणे ब्रह्मणि मयि धारयन्विशदं मनः ॥ परमानन्दमाप्नोति यत्र कामोऽवसीयते ॥ १७ ॥ श्वेतद्वीपपतौ चित्तं शुद्धे धर्ममये मयि ॥ धारयञ्छ्वेततां याति षडूर्मिरहितो नरः ॥ १८ ॥ मय्याकाशात्मनि प्राणे मनसा घोषमुद्वहन् ॥ तत्रोपलब्धा भूतानां हंसो वाचः शृणोत्यसौ ॥ १९ ॥ चक्षुस्त्वष्टरि संयोज्य त्वष्टारमपि चक्षुषि ॥ मां तत्र मनसा ध्यायन्विश्वं पश्यति सूक्ष्मदृक् ॥ २० ॥ मनो मयि सुसंयोज्य देहं तदनु वायुना ॥ मद्धारणानुभावेन तत्रात्मा यत्र वै मनः ॥ २१ ॥ यदा मन उपादाय यद्यद्रूपं बुभूषति ॥ तत्तद्भवेन्मनोरूपं मद्योगबलमाश्रयः ॥ २२ ॥ परकायं विशन् सिद्ध आत्मानं तत्र भावयेत् ॥ पिण्डं हित्वा विशेत्

कामनाको अन्त्य हुन्छ ॥ १७ ॥ हे उद्धव ! धर्ममय र विशुद्धस्वरूप श्वेतद्वीपाधिपतिमा चित्तको धारणा गर्नसक्ने योगी जन्म-मरण, तृष्णा, शोक तथा मोहरूपिणी छ ऊर्मिहरूले युक्त भएर मेरो विशुद्ध स्वरूपमा प्राप्त हुन्छ ॥ १८ ॥ समष्टि-प्राणरूपी म आकाशात्मा परमात्मामा मनद्वारा नादको चिन्तन गर्दै जीव हंस नामकी सिद्धि द्वारा आकाश-मा उपलब्ध हुने विविध प्राणीहरूको बोली सुन्न सक्छ ॥ १९ ॥ नेत्रलाई सूर्यमा र सूर्यलाई नेत्रमा संयुक्त गरेर ती दुवैका संयोगको मनभनै धारण गर्नाले सूक्ष्मदर्शी योगी 'दूरदर्शन' नामकी सिद्धिले सारा संसारलाई स्पष्ट देख्न सक्छ ॥ २० ॥ मन र देहलाई तिनका अनुगामी प्राणवायु सँग ममा राम्री जोडेर मेरो धारणा गर्नाले उसको जहाँ चित्त जान्छ, उहीं शरीर पनि पुग्दछ। यो 'मनोजव' सिद्धि कहिन्छ ॥ २१ ॥ मनलाई उपादान कारण तुल्याएर योगी जब जस्तो रूप धारण गर्न खोज्दछ, त्यस्तै नै मनोनुकूल रूपवाला हुनेछ र ममा गरिएको योग धारणाको बलले नै यस्तो हुनमा कारण हुन्छ ॥ २२ ॥ अनि जो योगी कुनै अर्काको शरीरमा प्रवेश गर्न चाहन्छ, त्यो आफ्नू आत्माको

13/6

उसमा भावना गरोस्। त्यस्तो गर्नाले बाह्य वायुरूप भई योगी बोटा फूलबाट अर्को फूलमा जाने भ्रमर झैं त्यो शरीर छाडेर अर्को शरीरमा प्रवेश गर्न सक्छ ॥२३॥ यदि योगीलाई शरीर त्याग्नु छ भने कुर्कुचा द्वारा गुदद्वार थिचेर प्राणवायु क्रमशः हृदय, वक्षस्थल, कण्ठ र मूर्धामा लगेर ब्रह्मरन्ध्र द्वारा उसलाई ब्रह्म प्राप्त गराएर शरीर त्यागोस् ॥ २४ ॥ यदि देवताहरूको विहारस्थलमा क्रीडा गर्ने इच्छा भए ममा स्थित शुद्ध सत्त्वको भावना गरोस्। यसले सत्त्ववृत्तिरूपिणी सुर-सुन्दरी विमान सहित उसकहाँ तत्काल उपस्थित हुन्छन् ॥ २५ ॥ म सत्यस्वरूपमा चित्त स्थिर पारेर मेरो ध्यान गर्ने व्यक्ति आफ्नू बुद्धिद्वारा जब जस्तो सङ्कल्प गर्दछ, तत्काल त्यही बन्नसक्छ ॥ २६ ॥ जो पुरुष सर्वनियन्ता तथा नित्य स्वाधीन परमात्माको स्वभावमा प्राप्त हुन्छ, त्यसको आज्ञा मेरै आज्ञाको समान कहीं पनि उल्लंघन हुन पाउन्न ॥ २७ ॥ अनि मेरो दृढ भक्तिद्वारा जुन धारणा परायण योगीको चित्त शुद्ध भइसकेको रहन्छ, त्यसको बुद्धि जन्म-मृत्यु आदि अदृष्ट विषयका ज्ञानले युक्त र त्रिकालदर्शिनी हुन्छ ॥ २८ ॥ जसै—जलले कुनै जन्तुहरूको नाश

प्राणो वायुभूतः षडङ्घ्रिवत् ॥ २३ ॥ पार्ष्ण्यापीड्य गुदं प्राणं हृदुरःकण्ठमूर्धसु ॥ आरोप्य ब्रह्मरन्ध्रेण ब्रह्म नीत्वोत्सृजेत्तनुम् ॥२४॥ विहरिष्यन्सुराक्रीडे मत्स्थं सत्त्वं विभावयेत् ॥ विमानेनोपतिष्ठन्ति सत्त्ववृत्तीः सुरस्त्रियः ॥ २५ ॥ यथा सङ्कल्पयेद्बुद्ध्या सदा वा मत्परः पुमान् ॥ मयि सत्ये मनो युञ्जँस्तथा तत्समुपाश्नुते ॥ २६ ॥ यो वै मद्भावमापन्न ईशितुर्वशितुः पुमान् ॥ कुतश्चिन्न विहन्येत तस्य चाज्ञा यथा मम ॥ २७ ॥ मद्भक्त्या शुद्धसत्त्वस्य योगिनो धारणाविदः ॥ तस्य त्रैकालिकी बुद्धिर्जन्ममृत्यूपबृंहिता ॥ २८ ॥ अग्न्यादिभिर्न हन्येत मुनेर्योगमयं वपुः ॥ मद्योगश्रान्तचित्तस्य यादसामुदकं यथा ॥२९॥ मद्विभूतीरभिध्यायञ्छ्रीवत्सास्त्रविभूषिताः ॥ ध्वजातपत्रव्यजनैः सः भवेदपराजितः ॥३०॥ उपासकस्य मामेवं योगधारणया मुनेः ॥ सिद्धयः पूर्वकथिता उपतिष्ठन्त्यशेषतः ॥ ३१ ॥ जितेन्द्रियस्य दान्तस्य जितश्वासात्मनो मुनेः ॥ मद्धारणां धारयतः का सा सिद्धिः सुदुर्लभा ॥ ३२ ॥ अन्तरायान् वदन्त्येता युञ्जतो योगमुत्तमम् ॥ मया सम्पद्यमानस्य कालक्षपणहेतवः ॥३३॥ जन्मौषधितपोमन्त्रैर्यावतीरिह सिद्धयः ॥ योगेनाप्नोति ताः सर्वा नान्यैर्योगगतिं व्रजेत् ॥ ३४ ॥ सर्वासामपि सिद्धीनां हेतुः पतिरहं प्रभुः ॥ अहं योगस्य सांख्य-

गर्दैन, त्यसै उसको चित्त ममा लागि रहनाले शिथिल भइसकेको रहन्छ, त्यसको योगमय शरीरको अग्नि आदिले नाश हुन पाउन्न ॥ २९ ॥ जुन उत्तम भक्त श्रीवत्स, शङ्ख, चक्र, गदा, पद्मादि आयुधले विभूषित तथा ध्वजा, छत्र र व्यजन आदिले अलंकृत मेरा अवतारहरूको ध्यान गर्दछ, त्यो साधक अजेय बन्दछ ॥ ३० ॥ यसरी योग धारणा द्वारा मेरो उपासना गर्ने मुनिलाई पूर्वोक्त सबै सिद्धि पूर्णरूपले प्राप्त हुन्छन् ॥ ३१ ॥ जो जितेन्द्रिय, संयमी र प्राणलाई जित्ने मुनि बन्दछ, त्यो निरन्तर मेरो नै धारणा गर्ने मुनिलाई यस्तो कुन सिद्धि छ, जुन दुर्लभ छ ? ॥ ३२ ॥ उत्तम योगाभ्यास गर्दा गर्दा जसको चित्त ममा लागिसकेको छ, त्यस समर्थ योगीको निम्ति यी सबै सिद्धि व्यर्थ कालक्षेपको कारण हुनाले विघ्नरूप कहिन्छन् ॥ ३३ ॥ जन्म, औषधि, तप र मन्त्र आदिले प्राप्त हुने जति सिद्धिहरू छन्, यस लोकमा ती सबैलाई पुरुष आफ्ना योगद्वारा प्राप्त गर्न सक्छ, तर योगीको गतिरूपिणी सारूप्य, सायुज्य र सालोक्यादि मुक्ति ममा चित्त लगाउनु बाहेक कुनै अन्य उपायले मिल्न सक्तैन ॥ ३४ ॥ सबै सिद्धि र अज्ञवेत्ताहरूले बताएका

योग, सांख्य र धर्म आदि साधनका एक मात्र हेतु, स्वामी र प्रभु म नै हुँ । जस्तै—सबै प्राणीहरूमा पाँच तत्त्व बाहिर-भित्र सर्वतिर स्वयं अवस्थित रहन्छन्, त्यस्तै नै सम्पूर्ण आवरण रहित सबै प्राणीहरूका बाह्य अर्थात् व्यापक र आन्तरिक अर्थात् अन्तर्यामी आत्मा हुँ । तात्पर्य हो—द्रष्टा क्षेत्रज्ञ र दृश्य क्षेत्र यी दुवै मेरै स्वरूप हुन् ॥ ६ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे पं॰ गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषाटीकायां पञ्चदशोऽध्यायः ॥ १५ ॥

( समस्त विभूतिहरूको विवेचन )—उद्धव भन्दछन्—हे प्रभो ! हजुर अनादि, अनन्त र आवरण शून्य परब्रह्म हुनुहुन्छ । सबै पदार्थका रक्षा, नाश र उत्पत्तिका कारण हजुर नै हुनुहुन्छ ॥१॥ तापनि अशुद्धबुद्धि व्यक्तिका निम्ति हजुर दुर्विज्ञेय हुनुहुन्छ । हजुरको यथोचित उपासना ❀धर्मात्मा ब्राह्मणले गर्दछन् ॥२॥ जुन-जुन भावले हजुरको भक्तिले उपासना

स्य धर्मस्य ब्रह्मवादिनाम् ॥ ३५ ॥ अहमात्माऽऽन्तरो बाह्योऽनावृतः सर्वदेहिनाम् ॥ यथा भूतानि भूतेषु बहिरन्तः स्वयं तथा ॥ ३६ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे भगवदुद्धवसंवादे पञ्चदशोऽध्यायः ॥ १५ ॥

उद्धव उवाच ॥ त्वं ब्रह्म परमं साक्षादनाद्यन्तमपावृतम् ॥ सर्वेषामपि भावानां त्राणस्थित्यप्ययोद्भवः ॥१॥ उच्चावचेषु भूतेषु दुर्ज्ञेयमकृतात्मभिः ॥ उपासते त्वां भगवन् याथातथ्येन ब्राह्मणाः ॥२॥ येषु येषु च भावेषु भक्त्या त्वां परमर्षयः॥उपासीनाः प्रपद्यन्ते संसिद्धिं तद्वदस्व मे॥३॥गूढश्चरसि भूतात्मा भूतानां भूतभावन ॥ न त्वां पश्यन्ति भूतानि पश्यन्तं मोहितानि ते ॥४॥ याः काश्च भूमौ दिवि वै रसायां विभूतयो दिक्षु महाविभूते ॥ ता मह्यमाख्याह्यनुभावितास्ते नमामि ते तीर्थपदाङ्घ्रिपद्मम्॥५॥ श्रीभगवानुवाच ॥ एवमेतदहं पृष्टः प्रश्नं प्रश्नविदां वर ॥ युयुत्सुना विनशने सपत्नैरर्जुनेन वै ॥६॥ ज्ञात्वा ज्ञातिवधं गर्ह्यमधर्मं राज्यहेतुकम् ॥ ततो निवृत्तो हन्ताऽहं हतोऽयमिति लौकिकः ॥७॥ स तदा पुरुषव्याघ्रो युक्त्या मे प्रतिबोधितः ॥ अभ्यभाषत मामेवं

गरेर महर्षिहरू सिद्धि पाउछन्, त्यो हजुर मलाई भन्नुहवस् । ३॥ हे भूतभावन ! हजुर सबैका अन्तरात्मा र सबैमा गुप्तरूपले रहेर [illegible] गर्नुहुन्छ । हजुर सबै देख्नुहुन्छ, तापनि हजुरको मायाले मोहित मनुष्य हजुरलाई देख्न पाउँदैनन् ॥४॥ पृथ्वी, स्वर्ग, पाताल र दिशाहरूमा हजुरको प्रभावयुक्त जुन-जुन विभूति छन्, ती मलाई भन्नुहवस् । म सबै तीर्थहरूका आश्रयभूत हजुरका चरणकमलको वन्दना गर्दछु ॥५॥ भगवान् भन्नुहुन्छ—हे उद्धव ! कुरुक्षेत्रमा शत्रुहरूसित युद्धका निम्ति उद्यत अर्जुनले पनि मसित यही प्रश्न गरेका थिए ॥ ६ ॥ ★'म मार्ने हुँ' 'यी सबै मर्ने हुन्' यस्तो प्राकृत बुद्धिले युक्त भएर राज्यका निम्ति बन्धु-वधलाई निन्दनीय पाप ठानेर ऊ पनि युद्धबाट विमुख भइसकेका थिए॥ ७ ॥ त्यस युद्ध-

❀ दृष्टान्त ( भेरै मेदिन्छन् )—एक पटक कसैले महात्मा साधौसित भने—हिजो आज त धर्मात्मा मानिस भेट्न कठिन छ ।' महात्माले [illegible] तिमीलाई तिम्रा सेवा गर्ने धर्मात्मा मनुष्यसित भेट्नु छ भने त्यस्ता मनुष्य पाउनु अवश्य कठिन छ, यदि तिमी स्वयं धर्मात्मा मनुष्यको सेवा गर्न खोज्दछौ भने त्यस्ता धेरै पाइन्छन् ।'

★दृष्टान्त ( जो जन्मन्छ, त्यो मर्दछ )—यौटी बुढीको एकमात्र छोरो दैवेच्छाले मर्यो । बुढी छाडको टाउकर रुन लागी । [illegible] भतः यौ शान्त महात्माको चिहन । अब त्यो मर्दोसित हाँगिई । मानिसले बल्ल बल्ल हटाए । अनि त्यो मुर्दा लिएर कोहा पछि-पछि बगुरी । बाटोमा बौटा महात्मा भेटिए । [illegible] एक छटाक रायो मागेर ल्याऊ जहाँ कहिल्यै कोही मरेको नहोस् । अनि तिम्रो छोरो जीवित हुनेछ !' अब बुढी छिमेकीकहाँ गई र उनित रायो मागी । पछि महात्माको [illegible] 'तिम्रा घरमा कहिले कोही मरेको त थिएन ?' उनले भनी—'मेरी सासू हालैमा मरेकी हुन् ।' यसरी बुढी अनेक घर डुली । कोही भन्दथी—छोरा मर्यो, कोही छोरी मरी भन्दथ्यो र [illegible] अहर भरिको घरमा कोही न कोहीको मरणको

1318

क्षेत्रमा मैले पुरुषसिंह अर्जुनलाई युक्तिपूर्वक बुझाएँ, तिनले पनि तिमीजस्तै सोधेका थिए ॥ ८ ॥ हे उद्धव ! म संसारका सबै प्राणीको आत्मा, सुहृद् तथा स्वामी हुँ । सब भूत म नै हुँ र तिनको उत्पत्ति, स्थिति र लयको कारण पनि मनै हुँ ॥ ९ ॥ गतिशीलमा गति, आफ्नू अधीन पार्नेहरूमा काल, गुणमा समता र गुणी जनमा उनको स्वाभाविक गुण मनै हुँ ॥१०॥ म गुणयुक्त वस्तुमा सूत्रात्मा, महान्‌मा महत्तत्त्व र सूक्ष्ममा जीव, दुर्जयीमा मन हुँ ॥ ११ ॥ त्यस्तै गरी वेदको अध्यापक हिरण्यगर्भ, मन्त्रमा त्रिवृत् ओंकार, अक्षरहरूमा अकार र छन्दमा गायत्री मनै हुँ ॥१२॥ म देवताहरूमा इन्द्र, अष्टवसुमा अग्नि, द्वादशादित्यमा विष्णु र एघार रुद्रमा नीललोहित नामको रुद्र हुँ ॥ १३ ॥ म ब्रह्मर्षिमा भृगु, राजर्षिमा मनु, देवर्षिमा नारद र धेनु ( गाई ) हरूमा कामधेनु हुँ ॥ १४ ॥ सिद्धेश्वरमा कपिल, पक्षीहरूमा गरुड, प्रजापतिमा दक्ष र पितृगणमा अर्यमा मनै हुँ ॥ १५ ॥ हे

यथा त्वं रणमूर्धनि ॥८॥ अहमात्मोद्धवामीषां भूतानां सुहृदीश्वरः ॥ अहं सर्वाणि भूतानि तेषां स्थित्युद्भवाप्ययः ॥९॥ अहं गतिर्गतिमतां कालः कलयतामहम् ॥ गुणानां चाप्यहं साम्यं गुणिन्यौत्पत्तिको गुणः ॥१०॥ गुणिनामप्यहं सूत्रं महतां चमहानहम् ॥ सूक्ष्माणामप्यहं जीवो दुर्जयानामहंमनः ॥११॥ हिरण्यगर्भो वेदानां मन्त्राणां प्रणवस्त्रिवृत् ॥ अक्षराणामकारोऽस्मि पदानि छन्दसामहम् ॥१२॥ इन्द्रोऽहं सर्वदेवानां वसूनामस्मि हव्यवाट् ॥ आदित्यानामहं विष्णू रुद्राणां नीललोहितः ॥ १३ ॥ ब्रह्मर्षीणां भृगुरहं राजर्षीणामहं मनुः ॥ देवर्षीणां नारदोऽहं हविर्धान्यस्मि धेनुषु ॥१४॥ सिद्धेश्वराणां कपिलः सुपर्णोऽहं पतत्रिणाम् ॥ प्रजापतीनां दक्षोऽहं पितृणामहमर्यमा ॥१५॥ मां विद्ध्युद्धव दैत्यानां प्रह्लादमसुरेश्वरम् ॥ सोमं नक्षत्रौषधीनां धनेशं यक्षरक्षसाम् ॥१६॥ ऐरावतं गजेन्द्राणां यादसां वरुणं प्रभुम् ॥ तपतां द्युमतां सूर्यं मनुष्याणां च भूपतिम् ॥१७॥ उच्चैःश्रवास्तुरङ्गाणां धातूनामस्मि काञ्चनम् ॥ यमः संयमतां चाहं सर्पाणामस्मि वासुकिः ॥१८॥ नागेन्द्राणामनन्तोऽहं मृगेन्द्रः शृङ्गिदंष्ट्रिणाम् ॥ आश्रमाणामहं तुर्यो वर्णानां प्रथमोऽनघ ॥ १९ ॥ तीर्थानां स्रोतसां गङ्गा समुद्रः सरसामहम् ॥ आयुधानां धनुरहं त्रिपुरघ्नो धनुष्मताम् ॥ २० ॥ धिष्ण्यानामस्म्यहं मेरुर्गहनानां हिमालयः ॥ वनस्पतीनामश्वत्थ ओषधीनामहं यवः ॥ २१ ॥ पुरोधसां वसिष्ठोऽहं ब्रह्मिष्ठानां बृहस्पतिः ॥ स्कन्दोऽहं सर्वसे-

उद्धव ! दैत्यगणमा दैत्यराज प्रह्लाद, नक्षत्रमा चन्द्रमा र औषधिहरूमा सोमरस तथा यक्ष-राक्षसादिमा कुबेर मलाई नै जान ॥ १६ ॥ गजराजमा ऐरावत, जलचरमा वरुण र ताप दिने तथा दीप्तिशालीमा सूर्य तथा मनुष्यमा राजा म हुँ ॥१७॥ घोडाहरूमा उच्चैःश्रवा, धातुमा सुवर्ण, दण्डधारीहरूमा यम र सर्पमा वासुकिनाग म नै हुँ ॥ १८ ॥ हे निष्पाप उद्धव ! म नै नागराजमा शेषनाग, सींग र दाह्रा हुने जन्तुमा सिंह, आश्रममा चतुर्थाश्रम अर्थात् संन्यासाश्रम तथा वर्णहरूमा आदिवर्ण ब्राह्मण म नै हुँ तीर्थहरूमा र नदीहरूमा गङ्गा, जलाशयमा समुद्र, अस्त्र-शस्त्रमा धनुष र धनुर्धरमा त्रिपुरको नाश गर्ने महादेव हुँ ॥ २० ॥ निवासस्थानमा सुमेरु तथा दुर्गम र सबै प्रकारले दुर्लङ्घ्य स्थानहरूमा हिमालय,

समाचार लिएर याचैर फर्केर आई र महात्मालित भनी—'मबैको बरमा मृत्यु मद्को छ । अब के उपाय छ ? मदा बाले भने—'बस्तै बचैको परमा मणि मरको छ, त्यसै मही तिम्रो छोरो पनि मरेको हो । अब बबको तिमित के शोक गर्ने ? मृत्युबाट तिमी पनि बाँचिन सक्तिनौ, त्यसैले ईश्वरको शरण पर !' अनि बुढी शान्त भई र केही दिनपछि पुत्र शोक हरायो ।

वृक्षमा अश्वत्थ ( पीपल ) र औषधिहरूमा जौ मैं हुँ ॥ २१ ॥ पुरोहितमा वसिष्ठ, ब्रह्मिष्ठ अर्थात् वेदवेत्ताहरूमा बृहस्पति, सेनापतिमा स्वामि कार्तिक र नेताहरूमा भगवान् ब्रह्मा म नै हुँ ॥ २२ ॥ यज्ञमा ब्रह्मयज्ञ, व्रतहरूमा अहिंसा तथा शोधक पदार्थमा नित्य शुद्ध वायु, अग्नि, सूर्य, जल, वाणी तथा आत्मा हुँ ॥२३॥ म योगमा मनको निरोध, विजय साधन-हरूमा, मन्त्र कौशलमा आन्वीक्षिकी विद्या र ख्यातिवादीहरूमा विकल्प हुँ ॥ २४ ॥ नारीमा म शतरूपा पुरुषहरूमा स्वयम्भुव मनु, मुनिजनमा नारायण र ब्रह्मचारीहरूमा सनत्कुमार हुँ ॥२५॥ धर्ममा संन्यास, अभयसाधनमा अन्तर्निष्ठा, गुह्यमा मधुर वचन एवं मौन तथा मिथुनमा स्त्री-पुरुष उभयरूप प्रजापति हुँ ॥२६॥ सदा सावधान रहनेहरूमा संवत्सर, ऋतुमा चैत्र-वैशाख, महीनामा मंसिर र नक्षत्रमा अभिजित् नक्षत्र हुँ ॥२७॥ युगमा सत्ययुग, धैर्यवान र विवेकीमा देवल तथा असित मुनि, व्यासमा द्वैपायन र कविहरूमा मनस्वी शुक्राचार्य

नान्यामग्रण्यां भगवानजः ॥ २२ ॥ यज्ञानां ब्रह्मयज्ञोऽहं व्रतानामविहिंसनम् ॥ वाय्वग्न्यर्काम्बुवागात्मा शुचीनामप्यहं शुचिः ॥ २३ ॥ योगाना मात्मसंरोधो मन्त्रोऽस्मि विजिगीषताम् ॥ अन्वीक्षिकी कौशलानां विकल्पः ख्यातिवादिनाम् ॥ २४ ॥ स्त्रीणां तु शतरूपाऽहं पुंसां स्वायम्भुवो मनुः ॥ नारायणो मुनीनां च कुमारो ब्रह्मचारिणाम् ॥ २५ ॥ धर्माणामस्मि संन्यासः क्षेमाणामबहिर्मतिः ॥ गुह्यानां सूनृतं मौनं मिथुनानामज-स्त्वहम् ॥२६॥ संवत्सरोऽस्म्यनिमिषामृतूनां मधुमाधवौ ॥ मासानां मार्गशीर्षोऽहं नक्षत्राणां तथाऽभिजित् ॥ २७ ॥ अहं युगानां च कृतं धीराणां देवलोऽसितः ॥ द्वैपायनोऽस्मि व्यासानां कवीनां काव्य आत्मवान् ॥ २८ ॥ वासुदेवो भगवतां त्वं तु भागवतेष्वहम् ॥ किंपुरुषाणां हनुमान्विद्या-ध्राणां सुदर्शनः ॥ २९ ॥ रत्नानां पद्मरागोऽस्मि पद्मकोशः सुपेशसाम् ॥ कुशोऽस्मि दर्भजातीनां गव्यमाज्यं हविःष्वहम् ॥ ३० ॥ व्यवसायिना-महं लक्ष्मीः कितवानां छलग्रहः ॥ तितिक्षाऽस्मि तितिक्षूणां सत्त्वं सत्त्ववतामहम् ॥ ३१ ॥ ओजः सहो बलवतां कर्माहं विद्धि सात्त्वताम् ॥ सात्त्वतां नवमूर्तीनामादिमूर्तिरहं परा ॥३२॥ विश्वावसुः पूर्वचित्तिर्गन्धर्वाप्सरसामहम् ॥ भूधराणामहं स्थैर्यं गन्धमात्रमहं भुवः ॥ ३३ ॥ अपां रसश्च परमस्ते-जिष्ठानां विभावसुः ॥ प्रभा सूर्येन्दुताराणां शब्दोऽहं नभसः परः ॥ ३४ ॥ ब्रह्मण्यानां बलिरहं वीराणामहमर्जुनः ॥ भूतानां स्थितिरुत्पत्तिरहं वै प्रतिसंक्रमः ॥ ३५ ॥ गत्युक्त्युत्सर्गोपादानमानन्दस्पर्शलक्षणम् ॥ आस्वादश्रुत्यवघ्राणमहं सर्वेन्द्रियेन्द्रियम् ॥ ३६ ॥ पृथिवी वायुराकाश

म नै हुँ ॥ २८ ॥ भगवान्मा वासुदेव, भागवतमा तिमी उद्धव, किंपुरुषमा हनुमान् र विद्याधरहरूमा सुदर्शन विद्याधर म नै हुँ ॥ २९ ॥ रत्नमा पद्मराग, राम्रा वस्तुहरूमा कमल कोश, तृणहरूमा कुश र हविमा घिउ म नै हुँ ॥ ३० ॥ व्यवसायीमा लक्ष्मी, छलीहरूमा छल, तितिक्षुमा तितिक्षा र सत्त्वगुणमा सत्त्व म नै हुँ ॥ ३१ ॥ म बलवानमा उत्साह र पराक्रम, सात्वत भगवद्-भक्तहरूमा भक्तियुक्त निष्काम कर्म तथा वैष्णव भक्तहरूका पूज्य नवमूर्तिमा प्रथम अर्थात् वासुदेव नामक उत्तम मूर्ति मनै हुँ ॥३२॥ म नै गन्धर्वहरूमा विश्वावसु र अप्सराहरूमा पूर्वचित्ति तथा पर्वतहरूमा स्थिरता र पृथिवीमा गन्ध हुँ ॥ ३३ ॥ म नै जलमा रस, तेजस्वीहरूमा तेजस्वी अग्नि, सूर्य, चन्द्र तथा तारामा प्रभा र आकाशमा परमगुण शब्द हुँ ॥३४॥ म नै ब्राह्मण-भक्तमा बलि, वीरहरूमा पार्थ र प्राणीहरूको उत्पत्ति, स्थिति, नाश हुँ ॥३५॥ म नै गति, उक्ति त्याग, ग्रहण, आनन्द र स्पर्श म नै हुँ मनै